भगवान् श्रीशिव र पार्वतीको संवादका रूपमा रहेको यो **गुरुगीता** ज्ञान प्राप्त गर्ने अभिलाषा भएका मनुष्यहरूका लागि एउटा अमूल्य निधि हो। भगवान् श्रीशिव आफैँ ज्ञानस्वरूप हुनुहुन्छ। उहाँले मात्र सद्गुरुका विषयमा यथार्थ रूपमा बताउन सक्नुहुन्छ। उहाँको अभिव्यक्ति सर्वमान्य हुन्छ। गुरुको महिमाका विषयमा त सबै ज्ञानीहरूले बताएका छन्, तर यो **गुरुगीता**को महिमा अतुलनीय छ। यो गीतामा सबै किसिमका गुरुका सम्बन्धमा बताइएको छ, जसलाई सूचक गुरु, वाचक गुरु, बोधक गुरु, निषिद्ध गुरु, विहित गुरु, कारणाख्य गुरु तथा परम गुरु भनिन्छ। यिनीहरूमध्ये निषिद्ध गुरुलाई पूर्ण रूपमा परित्याग गर्नुपर्छ भने अन्य गुरुहरूमध्ये परम गुरु सर्वोत्कृष्ट छन्। उनै **सद्गुरु** हुन्। यसैले उनको शरणमा जानुपर्छ।

जसमा ज्ञान प्राप्त गर्ने, मोक्ष प्राप्त गर्ने तथा ब्रह्मको अनुभूति गर्ने अभिलाषा रहेको छ। जसका पहिलेका जन्महरूको सुसंस्कार उदय भएर फल दिन तत्पर भएको छ, जो परमात्मालाई प्राप्त गर्न योग्य पात्र छ। उसले कुनै सद्गुरुका शरणमा गएर ज्ञान प्राप्त गर्नुपर्छ। त्यसपछि ऊ सांसारिक आवागमनरूपी चक्रबाट सधैँका लागि मुक्त हुन सक्तछ। यसका लागि यो पुस्तकले बाटो देखाउने छ। यसैले गुरुगीतालाई अनिवार्य रूपमा स्वीकार गर्नुपर्छ।

**न मृषा स्यादियं देवी मदुक्तिः सत्यरूपिणी ।**
**गुरुगीतासमं स्तोत्रं नास्ति नास्ति महीतले ।।६३।।**

हे देवी! मैले बताएको यो कुरा कहिल्यै असत्य हुँदैन। यो सत्यस्वरूप छ। यो पृथ्वीलोकमा गुरुगीता बराबरको स्तोत्र अन्य कुनै छैन।

भगवान् श्रीशिव देवी पार्वतीसँग भन्नुहुन्छ– हे देवी! यो पृथ्वीलोकमा गुरुगीता बराबरको अर्को कुनै स्तोत्र छैन। गुरुको वन्दना, पूजा तथा सेवाद्वारा मात्र शिष्यलाई सबै प्रकारका सिद्धिहरूको प्राप्ति र आत्माको अनुभूति हुन सक्तछ, अन्य कुनै पनि मन्त्रद्वारा यो सबै सम्भव छैन। जुन शिष्यले गुरुगीताका अनुसार आफ्नो गुरुलाई परमात्मा मान्दछ, त्यसैलाई यसको फल प्राप्त हुन्छ। उसका लागि गुरुको आज्ञा पालनाबाहेक अन्य कुनै साधनाको आवश्यकता छैन। मेरो यो भनाइ कहिल्यै असत्य हुने छैन। यो सत्यस्वरूप छ।

# श्रीगुरुगीता

(भगवान् श्रीशिव र देवी पार्वती संवाद)

**[लोकमणि व्याख्या]**

व्याख्याकार

**नारायण शर्मा**

# गुरुगीता

नारायण शर्मा

पुनर्मुद्रण : २०७५ (२०१९)

प्रकाशक : रत्न पुस्तक भण्डार, काठमाडौं, नेपाल
प्रथम संस्करण : २०७१

कम्प्युटर सेटिङ : जिबिजि कम्प्युटिङ, काठमाडौं
नेपालमा मुद्रित

**Gurugeeta (Conversati)**
**Narayan Sharma**

ISBN: 978-9937-33-034-3

पित्रे लोकमणये ब्रह्मलीनाय वेधसे ।
जनन्यै चोलकुमार्यै श्रद्धापुण्यं समर्प्यते ।

# भूमिका

भगवान् श्रीशिव र पार्वतीको संवादका रूपमा रहेको यो गुरुगीता ज्ञान प्राप्त गर्ने अभिलाषा भएका व्यक्तिहरूका लागि ज्यादै अमूल्य निधि हो। यसप्रकारको संवाद पहिले कहिल्यै भएको थिएन र भविष्यमा हुन पनि सक्तैन। भगवान् श्रीशिव आफैँ ज्ञानस्वरूप हुनुहुन्छ। उहाँले मात्र सद्गुरुको महिमाका विषयमा बताउन सक्नुहुन्छ। उहाँको भनाइ सर्वमान्य छ। गुरुको महिमाका बारेमा त सबै ज्ञानीहरूले बताएका छन् वा बताउँछन्, तर यो गुरुगीताको महिमा अपरम्पार छ। यो गीतामा यसप्रकारका सबै गुरुका विषयमा वर्णन भएको छ; जसलाई सूचक गुरु, वाचक गुरु, बोधक गुरु, निषिद्ध गुरु, विहीत गुरु, कारणाख्य गुरु तथा परम गुरु भनिन्छ। यिनीहरूमध्ये निषिद्ध गुरुलाई यथार्थ रूपमा परित्याग दिनुपर्छ तथा अन्य गुरुहरूमध्ये परम गुरु मात्र श्रेष्ठ हुन्। यसैले उनैलाई सद्गुरु भनिन्छ र उनैका शरणमा पर्नुपर्छ।

जसमा ज्ञान प्राप्त गर्ने अभिलाषा रहेको छ, जो मुमुक्षु छ, जसमा ब्रह्मको अनुभूति गर्ने अभिलाषा रहेको छ, जसका यसभन्दा पहिलेका जन्महरूका सुसंस्कारहरू उदय भएर फल दिन तयार भएका छन्, जो ईश्वरलाई प्राप्त गर्न योग्य पात्र छ; उसले कुनै सद्गुरुका शरणमा गएर ज्ञान प्राप्त गर्नुपर्छ, त्यसपछि ऊ संसारको आउने–जाने सिलसिलाबाट सधैँका लागि मुक्त हुन सक्तछ। त्यसका लागि यो **गुरुगीता** मार्गदर्शक हुने छ। यसलाई अनिवार्य रूपमा स्वीकार गर्नुपर्छ।

मुण्डकोपनिषद्को १।१।४ मा अङ्गिरा महर्षिले शौनक मुनिलाई बताएअनुसार संसारमा **परा** र **अपरा** नाम भएका दुइटा विद्या मात्र जान्न योग्य छन्। यसैगरी उनले १।१।५ मा बताएअनुसार यिनीहरूमध्ये ऋग्वेद, यजुर्वेद, सामवेद, अथर्ववेदलगायतका चारोटै वेद, शिक्षा, कल्प, व्याकरण, निरुक्त, छन्द, मीमांसा र ज्योतिष **अपरा विद्या** हुन् भने जसका माध्यमद्वारा अविनाशी परब्रह्मलाई तात्त्विक रूपमा जान्न सकिन्छ, त्यसलाई **परा विद्या** भनिन्छ।

ईशावास्योपनिषद्मा यिनीहरूलाई **विद्या** र **अविद्या** भनिएको छ। यसैको एघारौं मन्त्रमा बताइएअनुसार जसले **विद्या** र **अविद्या** दुवैका विषयमा एकै पटक

ज्ञान हासिल गर्दछ, त्यसले **अविद्या**बाट मृत्युलाई पराजित गर्दै **विद्या**बाट अमरत्व प्राप्त गर्दछ।

यी दुइटै स्वरूपमा एउटै परमात्मा व्यक्त हुनुभएको छ; जसमा उहाँको अव्यक्त अवस्था छ, जसलाई **असम्भूत** बताइएको छ तथा दोस्रो उहाँको व्यक्त अवस्था हो, जसलाई **सम्भूत** वा **कार्य ब्रह्म** भनिएको छ। यो सृष्टि उहाँको **कार्य ब्रह्म** अवस्था हो। ईशावस्योपनिषद्को तेह्रौं मन्त्रमा बताइएअनुसार कार्य ब्रह्मको उपासना गर्दा अर्कै फल तथा अव्यक्तको उपासना गर्दा अर्कै फल प्राप्त हुने बताइएको छ। यसैगरी चौधौं मन्त्रमा जसले असम्भूत र कार्य ब्रह्म दुइटैका विषयमा एकै पटक जान्दछ, त्यसले कार्य ब्रह्मको उपासनाका माध्यमद्वारा मृत्युलाई पराजित गर्दै असम्भूतको उपासनाद्वारा अमरत्व प्राप्त गर्दछ। यसैले **परा विद्या**ले मात्र अमरत्वको प्राप्ति गराउँछ भने यी सांसारिक विद्याहरूद्वारा अमरत्व प्राप्त हुन सक्तैन।

यी अपरा विद्याहरूले सांसारिक भोग उपलब्ध गराउन सक्तछन्, जीवनलाई क्षणिक रूपमा सुखमय बनाउन सक्तछन्। तर यिनीहरूबाट जीवनमा शान्ति र आनन्द प्राप्त हुन सक्तैन; यसले अमृत उपलब्ध गराउन सक्तैन। यसले मृत्यु दिन सक्तछ, तर अमर बनाउन सक्तैन र अन्धकारमा घुमाउन सक्तछ, तर ज्ञानको प्रकाश दिन सक्तैन। त्यसैले यसलाई **असत् विद्या** भनिएको हो। सत् प्राप्त गर्ने एक मात्र उपाय **परा विद्या** हो। ऋषि–महर्षिले सत् प्राप्तिको कामना गर्दै भनेका छन्– **असतो मा सद्गमय, तमसो मा ज्योतिर्गमय, मृत्योर्मा तं मृते गमय** अर्थात् उनीहरूले परब्रह्म परमात्मासँग प्रार्थना गर्दै भनेका छन्– मलाई असत्बाट सत्तिर लैजानुहोस्, यो अज्ञानरूपी अन्धकारमय अवस्थाबाट ज्ञानरूपी प्रकाशतिर लैजानुहोस्, मृत्युबाट अमरतातिर लैजानुहोस्।

यो जगत् असत्य छ, अज्ञानस्वरूप छ तथा मृत्युस्वरूपी छ भने परब्रह्म परमात्मा मात्र सत्, ज्ञानस्वरूप र अमृतस्वरूप हुनुहुन्छ। जीवको अन्तिम लक्ष्य परमात्मालाई प्राप्त गर्ने हुनुपर्छ।

यो जगत् असत् भएकाले यसमा द्वन्द्व छ, जसको कारण द्वैत हो। यो द्वैत पनि यथार्थ नभएर अज्ञानका कारणले यसको अनुभूति भएको हो। यही द्वैतका प्रभावले मनुष्यमा राग, द्वेष, ईर्ष्या, घृणा, वैमनस्यता, झगडा, स्वार्थ, मोह, ममता, आसक्तिलगायतका अनेकौं अवगुण वा विकार उत्पन्न हुन्छन्। यसैका कारणले अत्याचार, अनाचार, शोषण, हत्यालगायतका घटना हुन्छन्, जसले गर्दा यो जगत्

नरक जस्तै बन्दछ। जसको प्रभावस्वरूप मनुष्यले शान्तिको बाटोलाई बिर्सिदिन्छ। यही अज्ञान मनुष्यका दुःखहरूको कारण बन्दछ। यो अज्ञान सांसारिक विद्याहरूद्वारा नष्ट हुँदैन। जुन समयसम्म मनुष्यले अद्वैतको अनुभूति गर्न सक्तैन, त्यस समयसम्म जतिसुकै साधना, तपस्या, मन्त्र, जप, हवन, कीर्तन, यज्ञ तथा यम–नियमको पालना गर्दै सय कल्प बिताए तापनि उसले सुख प्राप्त गर्न सक्तैन। अद्वैतको अनुभूति कर्मको नभएर ज्ञानको फल हो। यो ज्ञान कुनै सद्गुरुको कृपाबाट मात्र प्राप्त हुन्छ। यो ज्ञान ज्यादै रहस्यमय भएकाले यसको प्राप्ति पुस्तकहरूको अध्ययनका माध्यमद्वारा, बुद्धिका माध्यमद्वारा तथा प्रवचन सुनेर हुन सक्तैन। यसैले कुनै सद्गुरुले यसको अनुभूति गराइदिएपछि मात्र अज्ञान नष्ट हुन्छ, जसका आधारमा उसले द्वन्द्वबाट मुक्त भएको अनुभव गर्दछ। यसमा स्पष्ट पार्ने सिलसिलामा कठोपनिषद् १।२।२३ तथा मुण्डकोपनिषद् ३।२।३ मा भनिएको छ– यो आत्मालाई बुद्धि, प्रवचन र अधिक श्रवणका माध्यमद्वारा प्राप्त गर्न सकिँदैन। जसलाई यसले स्वीकार गर्दछ, त्यसैद्वारा प्राप्त गर्न सकिन्छ। यो आत्माले उसका लागि आफ्नो यथार्थ स्वरूप प्रकट गराइदिन्छ।

यो आत्मा मात्र ज्ञानस्वरूप छ, जसको अनुभूति अन्य विधिबाट नभएर सद्गुरुको कृपाबाट मात्र हुन सक्तछ। यही त्यो परमतत्त्व हो, जसका विषयमा जानिसकेपछि केही पनि जान्न बाँकी रहँदैन। यसका सम्बन्धमा तात्त्विक रूपमा ज्ञान हासिल गरिसकेपछि हृदयको गाँठो फुक्दछ, सबै द्विविधा नष्ट तथा सबै कर्महरू भस्म हुन्छन्। मुण्डकोपनिषद्को २।२।८ मा बताइएअनुसार कार्य र कारणस्वरूप परब्रह्म परमात्मालाई तात्त्विक रूपमा जानेपछि जीवको हृदयमा रहेको अविद्यारूपी गाँठो फुक्दछ, सबै संशय नष्ट हुन्छ र समग्र शुभाशुभ कर्म नष्ट हुन्छन् अर्थात् यसपछि जीवले सबै बन्धनहरूबाट यथार्थ रूपमा मुक्त भएर परम आनन्दस्वरूप परमात्मालाई प्राप्त गर्दछ।

**सत् विद्या**

यो देख्न सकिने र नदेखिने समग्र जगत्को मूल तत्त्व एउटै छ, जुन यसको कारण हो, अन्य सबै त्यसका अलग–अलग रूप हुन्, जुन परिवर्तनशील छन् र असत् हुन्। त्यो मूल तत्त्व मात्र **सत्**स्वरूप छ, जसलाई वेदान्तमा **ब्रह्म** बताइएको छ। ईश्वर तथा आत्मा पनि **उहाँकै** अभिव्यक्ति हो भने ज्योतिष र अमृत पनि उहाँ नै हुनुहुन्छ। उहाँ नित्य, शाश्वत र सधैँ एकै किसिमको रहने हुनुहुन्छ। उहाँको वृद्धि, क्षय र रूपमा परिवर्तनलगायत केही पनि हुँदैन अर्थात् उहाँ सधैँ आफ्नो स्वरूपमा

विद्यमान रहनुहुन्छ। यो समग्र सृष्टि उहाँकै विस्तारित स्वरूप हो। यो तत्त्वको ज्ञान हासिल गर्ने आधार **ज्ञान** हो, जसलाई **विद्या** भनिएको छ। यो विद्या नै ज्ञानको लक्ष्य हो, जसले परमतत्त्वको बोध गराउँछ तथा अविद्याले भ्रममा पार्दछ, जुन अन्धकारमय छ। यसले मनुष्यमा विचलनता उत्पन्न गराउँछ। यसैले विद्याले अमर बनाउँछ भने अविद्या मृत्युको कारकतत्त्व हो। यसकारण जेले मनुष्यलाई मुक्त गराउन सक्तछ, त्यही विद्या हो। जो विद्याविहीन छ, त्यो पशु हो। यो विद्या कुनै सद्‌गुरुबाट मात्र प्राप्त हुन सक्तछ, जसले शिष्यलाई परमतत्त्वको बोध गराउँछन्।

**धर्म तत्त्व**

धर्म मनुष्यको चेतनाको विकास प्रक्रिया हो, जसले जीवात्मालाई परमात्मासँग जोड्छ। यो संसार र परमात्माका बीचको पुल हो, जसले संसारबाट मुक्त गराएर परमात्मतत्त्वसम्म पुऱ्याउन सक्तछ। धर्मकै माध्यमबाट मनुष्यलाई मानवका लागि उपयोगी जीवन प्राप्त हुन सक्तछ, जुन विशेषता पशुहरूमा नभएर मनुष्यमा मात्र हुन्छ। मनुष्यमा र पशुमा रहेको भेद धर्मले मात्र छुट्याउँछ। यसैले धर्मविहीन मनुष्य पशु समान हुन्छ। मनुष्य पशुभन्दा केही माथि मात्र उठेको छ, तर उसमा पूर्णता आइसकेको छैन, जुन परमात्मालाई प्राप्त गरेपछि आउँछ; जसको आरम्भ धर्मको साधनाबाटै गर्नुपर्छ। परमात्मासँग सम्बन्ध स्थापित नभएसम्म मनुष्यको व्यक्तित्वको पूर्ण रूपमा विकास हुन सक्तैन तथा उसले अज्ञानरूपी अन्धकारमा घुम्दै व्यर्थैमा मनुष्य जीवन गुमाउँछ। उसले केही उपलब्धि हासिल गर्न सक्तैन अर्थात् खाली हात आउँछ र खाली हात जान्छ।

धर्म पनि एउटा साधन मात्र हो, तर साधनविना साध्यलाई प्राप्त गर्न सकिँदैन। यसैले आध्यात्मिक उन्नति गर्ने अभिलाषा भएकाले धर्मलाई अनिवार्य रूपमा स्वीकार गर्नुपर्छ।

यो संसारमा अनेकौँ प्रकारका धर्म शास्त्रहरू भए तापनि सद्‌शास्त्रलाई मात्र स्वीकार गर्नुपर्छ। किनकि जीवनलाई सुखमय बनाउनका लागि सद्‌शास्त्रको रचना गरिएको हो। जसको मूल आधार परोपकार हो। वेदव्यासले अठार पुराणको अन्तमा परोपकार नै पुण्य हो भने अरूलाई पीडा दिनु पाप हो भनेका छन्। उपनिषद्‌का अनुसार **सर्वे भवन्तु सुखिन ... कश्चिद् दुःख भागभवेत** अर्थात् सबैको कल्याणको कामना नै धर्मको सार हो।

यी सबै धर्मशास्त्र परमात्मा प्राप्तिका मार्गदर्शक भए तापनि यिनीहरूले त्यहाँसम्म पुऱ्याउन सक्तैनन्। यिनीहरूले धर्मअनुसारको कार्य गर्दै अधर्मलाई परित्याग गर्नु पर्ने बताएका छन्। यसले मनुष्यलाई असल मार्गमा लाग्नु पर्ने शिक्षा दिन्छ तर यो उच्च ज्ञान प्राप्तिका लागि प्रारम्भिक कक्षा मात्र हो। जसबाट व्यक्तिलाई ज्ञानका लागि तयार वा उत्साहित बनाउने काम हुन्छ। उच्च स्तरमा पुग्न वा जानका लागि मनुष्यले अनिवार्य रूपमा कुनै सद्गुरुका शरणमा जानै पर्छ; जसबाट उसलाई दिव्यता प्राप्त हुन्छ, अन्यथा यो देखावटी धर्म अभिशाप पनि बन्न सक्तछ। अहिलेको विद्यमान परिप्रेक्ष्यमा संसारमा धर्मको यस्तै रूप देखिएको छ, जुन अभिशाप सिद्ध भइरहेको छ।

धर्मको एउटा विशेषताअनुसार यो द्वैतबाट आरम्भ हुन्छ। यसले दुइटाको अस्तित्वलाई स्वीकार गर्दछ। यसले सृष्टि र स्रष्टामा, आत्मा र परमात्मामा, जीव–जीवनमा, जड र चेतनमा, सुख–दुःख, असल–खराब, ज्ञान र अज्ञानमा, अन्धकार र प्रकाशमा, विद्वान् र मूर्खमा, ज्ञानी र अज्ञानीमा तथा जीवन र मृत्युमा भेद दृष्टि राख्दछ। यसले खराबलाई परित्याग गरेर असललाई उपयोगमा ल्याउन चाहन्छ। तर अभेदको अनुभूतिसँग अनभिज्ञ नै रहन्छ। सृष्टिमा यसप्रकारको कुनै विभाजन छैन। सृष्टिमा सबैतिर एकत्त्व भए तापनि मनुष्यमा भएको अज्ञानका प्रभावले भेद भएको अनुभव गराउँछ। यो भेद मनको कल्पना मात्र हो। यसैले धर्म पनि अधुरो छ। मनुष्यलाई अभेदको अनुभूति हुनुलाई ज्ञानको परम अवस्था अथवा उत्तम विन्दु बताइएको छ। यो अद्वैतको अवस्था हो।

यो धर्म गन्तव्य नभएर मार्ग हो। यो अन्त नभएर आरम्भ तथा साध्य नभएर साधन मात्र हो। परमात्माको अनुभूति साध्य हो, जुन अद्वैतको अवस्था हो, मुक्ति हो, मोक्ष हो, जसलाई प्राप्त गर्नुपर्छ। यदि मार्गलाई नै गन्तव्य मान्ने हो भने कहिल्यै उच्च अवस्थाको प्राप्ति हुन सक्तैन। यो उच्च अवस्था प्राप्त गर्नका लागि ज्ञानी गुरु अथवा सद्गुरुका शरणमा जानुपर्छ। उनैले मनुष्यलाई तत्त्वको ज्ञान दिएर लक्ष्यमा पुऱ्याउन सक्तछन् भन्ने बुझ्न आवश्यक छ।

**परम गुरु**

संसारमा गुरु अनेकौँ हुन्छन् र भएका छन्, जसले धर्मको व्याख्या गरे, मनुष्यहरूको आचरणसम्बन्धी नियम बनाए तर तत्त्वज्ञान दिन सकेनन्। यो तत्त्वज्ञानको अभावले गर्दा धर्म विकृत भएर संसारमा अभिशाप सिद्ध भयो वा

भइरहेको छ। ज्ञान पहिलो हो र धर्म ज्ञान उपलब्ध हुने विधि हो। अनेकौं धर्महरूमा जे प्राप्त हुन्छ, त्यो परमतत्त्वको ज्ञान नहुनुको परिणाम मात्र हो। यसैले सबै धर्महरूमा एकरूपता आउन सकेको छैन। सबैले आफ्नै हिसाबले आआफ्नो डम्फु बजाइरहेका छन्। ज्ञानको अभावमा कुनै पनि क्रियाको असल परिणाम आउन सक्तैन। यी दुवैको सामञ्जस्यबाट मात्र असल परिणाम निस्कन्छ। आजको संसारमा जतिसुकै धर्म र धर्मका प्रचारक भए तापनि शान्ति र आनन्द स्थापित हुन सकेको छैन। यो ज्ञान र कर्ममा रहेको भिन्नताको परिणाम हो।

मनुष्यलाई यथार्थ ज्ञान परमतत्त्व अथवा परमात्माको अनुभूति गरिसकेका कुनै सद्गुरुले मात्र दिन सक्तछन्। जसले परमात्मासँग एकाकार भएर गुणातीत र निर्गुण अवस्था प्राप्त गरिसकेको हुन्छ; अन्य कसैले पनि परमगुरुको भूमिका निभाउन सक्तैन। किनकि अन्य गुरुले बाटो मात्र देखाइदिन्छन्, तर परमगुरुले परमतत्त्वको अनुभूति गराइदिन्छन्, उसलाई आफ्नो गन्तव्यसम्म पुऱ्याइदिन्छन्। उनै सच्चा मित्र हुन्। यस्ता परमगुरुका शरणमा जानुपर्छ।

**गुरुगीतामा गुरुको महिमा**

भगवान् श्रीशिव र पार्वतीको संवादका रूपमा रहेको यो **गुरुगीता** ज्ञान प्राप्त गर्ने अभिलाषा भएका मनुष्यहरूका लागि एउटा अमूल्य निधि हो। भगवान् श्रीशिव आफैँ ज्ञानस्वरूप हुनुहुन्छ। उहाँले मात्र सद्गुरुका विषयमा यथार्थ रूपमा बताउन सक्नुहुन्छ। उहाँको अभिव्यक्ति सर्वमान्य हुन्छ। गुरुको महिमाका विषयमा त सबै ज्ञानीहरूले बताएका छन्, तर यो **गुरुगीता**को महिमा अतुलनीय छ। यो गीतामा सबै किसिमका गुरुका सम्बन्धमा बताइएको छ, जसलाई सूचक गुरु, वाचक गुरु, बोधक गुरु, निषिद्ध गुरु, विहित गुरु, कारणाख्य गुरु तथा परम गुरु भनिन्छ। यिनीहरूमध्ये निषिद्ध गुरुलाई पूर्ण रूपमा परित्याग गर्नुपर्छ भने अन्य गुरुहरूमध्ये परम गुरु सर्वोत्कृष्ट छन्। उनै **सद्गुरु** हुन्। यसैले उनको शरणमा जानुपर्छ।

त्यो सद्गुरु को हुन सक्तछ ? उसको महिमा के हो ? यस विषयमा यो गुरु गीतामा यथार्थ रूपमा वर्णन गरिएको छ। यसमा शिष्यको योग्यता, मर्यादा, व्यवहार र अनुशासन लगायतका विषयमा पूर्ण रूपमा प्रस्ट पारिएको छ। यसप्रकारको गुरुका शरणमा जाने शिष्यले पूर्णत्त्व प्राप्त गर्दछ तथा ऊ आफैँ ब्रह्मस्वरूप हुन्छ। उसका धर्म, अधर्म, पाप र पुण्यलगायत कर्म सबै नष्ट हुन्छन् तथा एक चैतन्य मात्र बाँकी रहन्छ। ऊ गुण र रूपबाट अलग हुन्छ, जुन उसको अन्तिम गति वा अवस्था

हो तथा ऊ आफ्नो गन्तव्यमा पुग्दछ। यही परमात्माको परमधाम हो। यसैलाई मोक्ष भनिन्छ। त्यहाँ पुगेपछि उसले द्वन्द्वातीत अवस्था र परमशान्ति प्राप्त गर्दछ। उसले आफ्नो सद्स्वरूप प्राप्त गर्दछ।

जसमा ज्ञान प्राप्त गर्ने, मोक्ष प्राप्त गर्ने तथा ब्रह्मको अनुभूति गर्ने अभिलाषा रहेको छ। जसका पहिलेका जन्महरूको सुसंस्कार उदय भएर फल दिन तत्पर भएको छ, जो परमात्मालाई प्राप्त गर्न योग्य पात्र छ। उसले कुनै सद्गुरुका शरणमा गएर ज्ञान प्राप्त गर्नुपर्छ। त्यसपछि ऊ सांसारिक आवागमनरूपी चक्रबाट सधैँका लागि मुक्त हुन सक्तछ। यसका लागि यो पुस्तकले बाटो देखाउने छ। यसैले **गुरुगीता**लाई अनिवार्य रूपमा स्वीकार गर्नुपर्छ।

यी सबै विषयवस्तुलाई दृष्टिगत गरेर यस ग्रन्थको अनुशीलन गर्नुपर्छ। यसबाट परमात्माको स्वरूप के हो, उहाँलाई प्राप्त गर्ने साधन कुन हो र साधकको परमात्मासँग कस्तो सम्बन्ध रहेको छ, यी विषयहरूका साथै अन्य साधनोपयोगी आवश्यक विषयहरूको जानकारी प्राप्त गरेर एक निश्चित लक्ष्यमा पुग्ने मार्गको चयन गर्नमा विशेष सहयोग प्राप्त हुन सक्छ। यसैले आफ्नो कल्याण चाहने प्रत्येक साधकले अत्यन्त श्रद्धापूर्वक यो ग्रन्थको अध्ययन एवं मनन गर्न आवश्यक छ।

कम्प्युटर टङ्कणमा सहयोग गरिदिनुहुने एस.बी. कम्प्युटरकी बहिनी शशीकला राईलाई अन्तरात्मादेखि नै धन्यवाद दिन चाहन्छु।

अन्तमा यस ग्रन्थलाई यो आकारमा तयार पार्दाका समयमा सल्लाह–सुझाव र प्रोत्साहन दिनुहुने विभिन्न मान्यजनहरू तथा रात वा दिन समयको वास्तै नगरी अविच्छिन्न सहयोग पुऱ्याउने भार्या प्रति पनि अन्तरात्मदेखि नै धन्यवाद दिन चाहन्छु।

**विद्वान्हरूको वशंवद**

**नारायण शर्मा**

# विषयसूची

**अचिन्त्याव्यक्तरूपाय निर्गुणाय गुणात्मने।**
**समस्त जगदाधारमूर्तये ब्रह्मणे नमः ॥१॥**

जुन परब्रह्म चिन्तन गर्न नसकिने, व्यक्त गर्न नसकिने, तीनोटै गुणहरूबाट यथार्थ रूपमा अलग, तीन गुणसम्पन्न र समग्र जगत्‌को आधारस्वरूप हुनुहुन्छ; उहाँ परब्रह्मलाई नमस्कार छ ॥१॥

यो समग्र देख्न सकिने र नसकिने जगत् तथा सबै ब्रह्माण्डको एउटा मूलकारण हुनुहुन्छ; जसलाई **ब्रह्म** भनिन्छ। ब्रह्म निराकार अर्थात् आकारविहीन, निर्गुण, गुणबाट पूर्ण रूपमा अलग, सानोभन्दा पनि अति सानो हुनुहुन्छ, जसले गर्दा उहाँको चिन्तन गर्न सकिँदैन। उहाँका विषयमा शब्दद्वारा वर्णन गर्न सकिँदैन तथा यो समग्र जगत् उहाँकै व्यक्तस्वरूप हो। उहाँ ज्ञानमय र ज्ञानको एकमात्र कारण हुनुहुन्छ। ब्रह्मा, विष्णु र महेश उहाँकै सगुणस्वरूप हुन्, जसलाई सगुण ब्रह्म भनिन्छ। ईश्वर ब्रह्मकै सगुणस्वरूप हुनुहुन्छ। यो तीन गुणसम्पन्न माया शक्ति उहाँकै शक्ति हो, जसले विभिन्न स्वरूप धारण गरेर सृष्टिको रचना गर्दछ। ब्रह्म यो माया शक्तिको आत्मा हुनुहुन्छ, जसको संयोगबाट मात्र यो सृष्टिको रचना हुन्छ। यो मायाको सत्त्वगुणबाट सृष्टिको पालनकर्ता श्रीविष्णु, रजोगुणबाट सृष्टि रचना गर्ने ब्रह्मा तथा तमोगुणबाट संहारकर्ता शिवका रूपमा कार्य भइरहेको हुन्छ। यो सृष्टिमा यी तीनोटै क्रिया निरन्तर रूपमा चलिरहन्छन्, जसको एकमात्र कारणतत्त्व ब्रह्म हुनुहुन्छ। उहाँ एकमात्र हुनुहुन्छ। अन्य सबै उहाँका विभिन्न स्वरूपका अभिव्यक्ति मात्र हुन्। यसैले यो जगत्‌को आधार उहाँ नै हुनुहुन्छ। उहाँले आफ्नो ज्ञानशक्तिका माध्यमद्वारा सबैलाई प्रकाशमय बनाउनुहुन्छ। भगवान् श्रीशिव पनि उहाँकै एउटा स्वरूप हुनु हो, जो उहाँका सबै शक्तिहरूबाट सम्पन्न हुनुहुन्छ। यसैले ब्रह्म मात्र ज्ञान दिनसक्ने गुरु हुनुहुन्छ। यसकारण सबै देवताले उहाँको स्तुति गर्दछन्, उहाँलाई नमस्कार गर्दछन्।

यो श्लोकमा भगवान् श्रीशिव आफैँले परब्रह्मलाई नमस्कार गर्नुभएको छ।

**ऋषयः ऊचुः**

**सूत सूत महाप्राज्ञ निगमागमपारग ।**
**गुरुस्वरूपमस्माकं ब्रूहि सर्वमलापहम् ॥२॥**

ऋषिहरूले भने– हे महाज्ञानी, हे वेदको अङ्गउपाङ्गका ज्ञाता सूत ! हामीलाई सबै पापहरू विनाश गर्ने सक्षम गुरुको स्वरूपका विषयमा यथार्थ रूपमा बताइदिनुहोस् ॥२॥

नैमिषारण्यमा सूतको अध्यक्षतामा अठासी हजार ऋषिहरूका बीचमा ज्ञानसँग सम्बन्धित विषयमा छलफल चलिरहेको थियो। जसमा ज्ञान शिरोमणि सूतले ती ऋषिहरूलाई अठार पुराणको कथा सुनाइरहेका थिए। त्यस समयमा ज्ञान प्राप्त गर्ने अभिलाषा भएका ऋषिले ज्ञानी गुरु सूतसँग प्रश्न सोध्ने र सूतले जवाफ दिने सिलसिला चलिरहेको थियो।

यसै अवस्थामा ऋषिहरूले जिज्ञासापूर्वक सूतसँग विनम्रभावपूर्वक प्रश्न गर्ने सिलसिलामा तपाईं महाज्ञानी र वेदको अङ्गउपाङ्गको ज्ञाता हुनुहुन्छ; तपाईं जस्तो ज्ञानी कोही छैन, जसले हाम्रा जिज्ञासाहरू मेटाइदिन सकोस् तथा हामीलाई तत्त्वज्ञानको उपदेश दिएर कृतकृत्य बनाउन सकोस्। ब्रह्म नै सबै गुरुहरूको गुरु हुनुहुन्छ, जसका विषयमा ज्ञान प्राप्त गरेपछि सबै पापहरू नष्ट हुन्छन्, यस्ता परमगुरुको स्वरूप कस्तो छ ? त्यसका विषयमा यथार्थ रूपमा बताइदिनुहोस् भने। जुन गुरुको चिन्तन सबै देवताहरू, ऋषि–महर्षि तथा शिव आफैँले पनि गर्नुहुन्छ। जसका विषयमा ज्ञान हासिल गरिसकेपछि अज्ञानीले पनि आफू मुक्त भएको अनुभव गर्दछ। उहाँको स्वरूपका बारेमा यथार्थ रूपमा बताइदिनुहोस्।

**यस्य श्रवणमात्रेण देही दुःखाद्विमुच्यते ।**
**येन मार्गेण मुनयः सर्वज्ञत्वं प्रपेदिरे ॥३॥**
**यत्प्राप्य न पुनर्याति नरः संसारबन्धनम् ।**
**तथाविधं परं तत्त्वं वक्तव्यमधुना त्वया ॥४॥**

जसका बारेमा सुन्दा मात्र पनि मुनष्य दुःखबाट यथार्थ रूपमा मुक्त हुन्छ। जुन उपायद्वारा मुनिहरूले सबै कुरा जाने, जसलाई प्राप्त गरिसकेपछि मनुष्य फेरि सांसारिक बन्धनमा पर्दैन, त्यो परमतत्त्वका विषयमा पूर्ण रूपमा बताइदिनुहोस् ॥३॥ ॥४॥

हे महात्मा! त्यो परमतत्त्व को हो ? कस्तो छ ? जसका विषयमा सुन्दा मात्र पनि मनुष्य आफ्ना सबै दुःखहरूबाट यथार्थ रूपमा मुक्त हुन्छ। उहाँलाई जान्ने उपाय के छ ? जसका माध्यमद्वारा मुनिहरूलाई सबै कुरा जान्ने अवसर प्राप्त भयो। जसलाई प्राप्त गरेपछि मनुष्य फेरि सांसारिक बन्धनमा पर्दैन तथा यो जन्म र मृत्युरूपी चक्रबाट सधैँका लागि मुक्त हुन्छ। यसप्रकारको परमतत्त्वका बारेमा कसरी जान्न सकिन्छ, त्यसलाई जान्ने विधि के हो वा छ, कृपया हामीलाई विस्तारपूर्वक बताइदिनुहोस् तथा परमतत्त्वका विषयमा वर्णन गरिदिनुहोस्। तपाईं मात्र ज्ञानी हुनुहुन्छ, जसले यस सम्बन्धमा स्पष्ट पार्न सक्नुहुन्छ भने।

**गुह्याद्गुह्यतरं सारं गुरुगीता विशेषतः।**
**त्वत्प्रसादाच्च श्रोतव्या तत्सर्वं ब्रूहि सूत नः ॥५॥**

हे सूतजी! जुन तत्त्व ज्यादै रहस्यमय र सर्वोत्कृष्ट सारस्वरूप छ र विशेष रूपमा जुन गुरुगीता छ; हामी त्यसका विषयमा विस्तारपूर्वक सुन्न चाहन्छौँ। यसैले हामी माथि कृपा गरेर गुरुगीताका बारेमा यथार्थ रूपमा बताइदिनुहोस्। ॥५॥

उहाँ परमतत्त्व परब्रह्म मात्र ज्ञानमय हुनुहुन्छ। उहाँ नै सबै ज्ञानीहरूको आधार र कारण हुनुहुन्छ; जो अति रहस्यमय हुनुहुन्छ, जसका विषयमा जान्न धेरै कठिन छ, जो जान्न नसकिने हुनुहुन्छ, जसलाई जान्नै सकिँदैन, जसलाई जान्ने अभिलाषा देवताहरूमा पनि रहेको हुन्छ। जसको ध्यान सबै ऋषिहरूले गर्दछन्। फेरि पनि उनीहरूले उहाँको रहस्यका बारेमा जान्न सक्तैनन्। तर पनि जान्न योग्य सार उहाँ मात्र हुनुहुन्छ। जसको ज्ञान हासिल गरेपछि हृदयको गाँठो फुक्छ तथा सबै द्विविधा नष्ट हुन्छन्। उहाँको यसप्रकारको स्वरूपका सम्बन्धमा हामीलाई विस्तारपूर्वक बताइदिनुहोस्। यसप्रकारका दिव्य गुरुको ज्ञान प्राप्तिका लागि जुन गुरुगीता छ, त्यसका बारेमा हामी यथार्थ रूपमा सुन्न चाहन्छौँ।

**इति सम्प्रार्थितः सूतो मुनिसङ्घैर्मुहुर्मुहुः।**
**कुतूहलेन महता प्रोवाच मधुरं वचः ॥६॥**

यसरी पटक–पटक प्रार्थना गरेपछि अत्यन्तै प्रसन्न भएका सूतले त्यहाँ एकत्रित भएका मुनिहरूसँग सुमधुर वचनमा भने ॥६॥

यदि कुनै ज्ञान प्राप्त गर्ने अभिलाषा लिएको जिज्ञासुले ज्ञानीका नजीकमा आएर यसरी अनुनय विनयपूर्वक सोध्यो भने ज्ञानी ज्यादै प्रसन्न हुन्छन्। उनले प्रसन्नतापूर्वक आफूमा भएको सबै ज्ञान प्रकट गरिदिन्छन्। गुरुले आफूसँग भएको ज्ञान कुनै योग्य पात्रलाई मात्र दिन चाहन्छन्, जसले त्यसलाई धारणा गर्न सकोस् अन्यथा उनी चुपचाप बस्छन्। ऋषिहरूमा भएको तीव्र जिज्ञासालाई दृष्टिगत गर्दै सूतले अति सुमधुर वचनमा उनीहरूसँग भने।

**सूत उवाच**

**शृणुध्वं मुनयः सर्वे श्रद्धया परया मुदा।**
**वदामि भवरोगघ्नीं गीतां मातृस्वरूपिणीम् ॥७॥**

सूतले भने–हे सबै मुनिहरू! यो संसाररूपी रोग विनाश गर्ने आमास्वरूपिणी गुरुगीताका विषयमा बताउनेछु, तपाईंहरूले ज्यादै श्रद्धा र प्रसन्नतापूर्वक सुन्नुहोस्। ॥७॥

सूतका अनुसार परब्रह्म परमात्मा सबै गुरुहरूका गुरु हुनुहुन्छ। उहाँ एकमात्र ज्ञानको परम आधार हुनुहुन्छ। यो सृष्टि सञ्चालन गर्ने शक्ति उहाँ नै हुनुहुन्छ, जसबाट सृष्टिका सबै क्रियाहरू सञ्चालित हुन्छन्। उहाँका विषयमा ज्ञान हासिल गर्न नसकेका कारणले मनुष्य सबै किसिमका रोग र शोकबाट पीडित भएको हुन्छ। उहाँलाई जानेपछि उसले सांसारिक रोगबाट मुक्त भएर निर्वाणपद प्राप्त हुन्छ। ब्रह्मले सबै प्राणीप्रति आमाको जस्तै व्यवहार गर्नुहुन्छ। उहाँ नै विश्वपालनकर्ता हुनुहुन्छ। गुरुगीतामा उहाँको स्वरूप र महिमाका बारेमा विस्तारपूर्वक वर्णन भएको छ, जुन म बताउन लागिरहेको छु, तपाईंहरूले श्रद्धा र ध्यानपूर्वक सुन्नुहोस्। यो गुरुगीताको सधैँ पाठ र श्रवण गर्नाले परब्रह्म परमात्माको कृपा अवश्य प्राप्त हुन्छ। गुरु भक्तिले नै सबै पापहरू नष्ट गराएर मोक्ष दिलाउँछ। म यसको महिमाका विषयमा वर्णन गर्न लागिरहेको छु, एकाग्रतापूर्वक सुन्नुहोस्।

**पुरा कैलासशिखरे सिद्धगन्धर्वसेविते।**
**तत्र कल्पलतापुष्पमन्दिरे अत्यन्तसुन्दरे ॥८॥**
**व्याघ्राजिने समासिनं शुकादिमुनिवन्दितम्।**
**बोधयन्तं तरं तत्त्वं मध्येमुनिगणं क्वचित् ॥९॥**
**प्रणम्रवदना शश्वन्नमस्कुर्वन्तमादरात्।**
**दृष्ट्वा विस्मयमापन्ना पार्वती परिपृच्छति ॥१०॥**

प्राचीनकालमा सिद्ध र गन्धर्वहरूको निवासरूपी कैलासपर्वतको शिखरमा कल्पवृक्षका फूलहरूद्वारा बनेको एउटा सुन्दर मन्दिरमा मुनिहरूका बीचमा बाघको छालामा विराजमान, शुकलगायतका मुनिहरूद्वारा वन्दना गरिने तथा परमतत्त्वको ज्ञान दिँदै गर्नुभएका भगवान् श्रीशङ्करले पटक–पटक नमस्कार गरेको देखेपछि, ज्यादै नम्र मुखसम्पन्न पार्वतीले आश्चर्यचकित हुँदै सोध्नुभयो। ॥८॥ ॥९॥ ॥१०॥

परम गुरु परब्रह्मको महिमाका विषयमा वर्णन गर्ने सिलसिलामा सूतले मुनिहरूलाई बताएअनुसार भगवान् श्रीशिव देवताका पनि देवता हुनुहुन्छ। ब्रह्मतत्त्वको ज्ञान उहाँलाई मात्र छ। पार्वतीले सोधेपछि उहाँले यसको महिमाका बारेमा वर्णन गर्नुभएको छ, जसलाई **गुरुगीता** भनिन्छ। यसैले म उहाँकै शब्दमा यसका सम्बन्धमा बताउँछु, तपाईंहरूले एकाग्रतापूर्वक सुन्नुहोस्। यो गुरुगीता सबै किसिमका सांसारिक भयहरू निवारण गर्न तथा जीवलाई मुक्ति प्रदान गर्न सक्षम छ।

प्राचीनकालमा भगवान् श्रीशिव कैलासपर्वमा कल्पवृक्षको फूलद्वारा बनेको ज्यादै सुन्दर मन्दिरमा बाघको छालामा विराजमान हुनुभएको थियो। त्यो कैलासपर्वत सिद्धहरू र गन्धर्वहरूको निवासस्थान हो। जसको वन्दना शुकलगायतका मुनिले पनि गर्दछन्, यस्ता भगवान् श्रीशिव मात्र परमतत्त्व परब्रह्मको पूर्ण ज्ञाता हुनुहुन्छ तथा उहाँका विषयमा श्रीशिवले मात्र वर्णन गर्न सक्नुहुन्छ। उहाँ आफैँ ध्यानमग्न भएर सधैँ परब्रह्मको चिन्तन गरिरहनुहुन्छ। उहाँले परब्रह्मलाई पटक–पटक नमस्कार गर्नुहुन्छ। उहाँले यसरी पटक–पटक नमस्कार गरेको देखेर देवी पार्वतीले आश्चर्यचकित हुँदै उहाँसँग सोध्नुभयो।

**पार्वत्युवाच**

**ॐ नमो देव देवेश परात्पर जगद्गुरो।**
**त्वां नमस्कुर्वते भक्त्या सुरासुरनराः सदा ॥११॥**

देवी पार्वतीले भन्नुभयो– हे ॐकारका अर्थस्वरूपी देवताहरूका पनि देवता, हे सर्वश्रेष्ठ, हे जगद्गुरु! तपाईंलाई प्रणाम छ। तपाईंलाई देवता, दानव र मनुष्यले भक्तिपूर्वक प्रणाम गर्दछन्। ॥११॥

यो समग्र जगत्मा भगवान् श्रीशिव मात्र यस्तो ज्ञानी हुनुहुन्छ, जसले ब्रह्मत्व प्राप्त गरेको छ। उहाँ नै ज्ञानीहरूको ज्ञान र आफैँ ॐकारस्वरूप हुनुहुन्छ। उहाँ देवताहरूका पनि देवता महादेव, सर्वश्रेष्ठ तथा आफैँ जगद्गुरु हुनुहुन्छ; जसले गर्दा समग्र देवता, दानव र मनुष्यले उहाँलाई प्रणाम गर्दै उहाँको वन्दना गर्छन्। पार्वतीले यसो भन्दै उहाँसँग प्रश्न गर्नुभयो।

**विधिविष्णुमहेन्द्राद्यैर्वन्द्यः खलु सदा भवान्।**
**नमस्करोषि कस्मै त्वं नमस्काराश्रयः किल ॥१२॥**

तपाईंलाई ब्रह्मा, विष्णु, इन्द्रलगायत सबैले नमस्कार गर्दछन्। यसप्रकारले नमस्कारको आश्रयस्वरूपी भए तापनि तपाईंले कसलाई नमस्कार गर्नुभएको हो ? ॥१२॥

यसरी श्रीशिवले पटकपटक नमस्कार गरेको देखेपछि देवी पार्वतीले सहजभावपूर्वक उहाँसँग प्रश्न गर्नुभयो– हे भगवान्! तपाईं देवताका पनि देवता हुनुहुन्छ। यो संसारमा तपाईंभन्दा श्रेष्ठ कोही पनि छैन। यी सबै देवताहरू, ऋषि–मुनिलगायत स्वयं ब्रह्मा जसले समग्र सृष्टिको रचना गर्दछन्, भगवान् श्रीविष्णु जसले समग्र सृष्टिको पालन–पोषण गर्नुहुन्छ तथा देवताहरूका राजा इन्द्रले पनि तपाईंलाई नमस्कार गर्दछन्। यथार्थमा तपाईं यी सबैभन्दा श्रेष्ठ हुनुभएकाले यिनीहरूको नमस्कार स्वीकार गर्न योग्य हुनुहुन्छ। तर तपाईंले कसलाई नमस्कार गरिरहनुभएको छ ? तपाईंभन्दा श्रेष्ठ को छ, जसलाई तपाईंले नमस्कार गरिरहनुभएको छ ? कृपया मलाई यस विषयमा यथार्थ रूपमा बताउनुहोस्।

**भगवन् सर्वधर्मज्ञ व्रतानां व्रतनायकम्।**
**ब्रूहि मे कृपया शम्भो गुरुमाहात्म्यमुत्तमम् ॥१३॥**

हे भगवान्! हे सबै धर्महरूका ज्ञाता! हे शम्भू! म माथि कृपा गर्दै मलाई जुन व्रत सबै व्रतहरूमध्ये श्रेष्ठ छ; यसप्रकारको उत्तम गुरु माहात्म्यका विषयमा विस्तारपूर्वक बताइदिनुहोस्। ॥१३॥

देवी पार्वतीले फेरि भन्नुभयो– तपाईं आफैँ भगवान्स्वरूप हुनुहुन्छ तथा सबै धर्महरूको ज्ञाता हुनुहुन्छ र धर्मको स्थापना पनि तपाईं आफैँ गर्नुहुन्छ र तपाईं सबै किसिमको शक्तिले सम्पन्न हुनुहुन्छ भने तपाईंको यो कुन चाहिँ नियम हो, कुन व्रत हो, जसका आधारमा तपाईंले कसैलाई नमस्कार गर्नुहुन्छ। यदि तपाईंभन्दा श्रेष्ठ कोही छ तथा तपाईंको पनि कोही गुरु छ, जसलाई नमस्कार गर्ने व्रत तपाईंले

लिनुभएको छ भने कृपया मलाई यस्ता उत्तम गुरुको माहात्म्यका विषयमा बताइदिएर ममा उत्पन्न भएको द्विविधा हटाइदिनुहोस्। म ती गुरुको महिमाका विषयमा विस्तारपूर्वक सुन्न चाहन्छु।

**इति संप्रार्थितः शश्वन्महादेवो महेश्वरः।**
**आनन्दभरितः स्वान्ते पार्वतीमिदमब्रवीत् ॥१४॥**

यसरी देवी पार्वतीले पटक–पटक प्रार्थना गरेपछि महादेवले हृदयदेखि नै प्रसन्न हुँदै पार्वतीसँग भन्नुभयो ... ॥१४॥

यसरी देवी पार्वतीले पटक–पटक प्रार्थना गरेको देखेपछि श्रीमहादेव हृदयदेखि नै ज्यादै प्रसन्न हुनुभयो। जब कुनै जिज्ञासुले ज्ञान प्राप्त गर्ने अभिलाषा राखेर कुनै सद्गुरुसँग जिज्ञासा व्यक्त गर्दछ भने गुरु ज्यादै प्रसन्न हुन्छन् तथा उनी आफूमा भएको सबै ज्ञान उसलाई दिन चाहन्छन्। यसरी पार्वतीले जिज्ञासा व्यक्त गरेपछि भगवान् श्रीशिवले उहाँलाई गुरुको महिमाका विषयमा बताउनुभयो। यो संसारमा गुरुको महिमा कस्तो छ ? को गुरु हुन सक्तछ ? गुरुको कर्तव्य के हो ? शिष्य कस्तो हुनुपर्छ ? कसलाई उपदेश दिने र कसलाई नदिने ? को सद्गुरु हुन सक्तछ ? यसप्रकारका अनेकौं रहस्यमय कुरा भगवान् श्रीशिवले देवी पार्वतीलाई बताउनुभयो। यसरी गुरुको महिमाका बारेमा अन्य कतै बताइएको पाइँदैन। त्यसकारण यो भगवान् श्रीशिव र पार्वतीका बीचमा भएको सम्बाद ज्यादै महत्त्वपूर्ण छ।

**महादेव उवाच**

**न वक्तव्यमिदं देवी रहस्यातिरहस्यकम्।**
**न कस्यापि पुरा प्रोक्तं त्वद्भक्त्यर्थं वदामि तत् ॥१५॥**

श्रीमहादेवले भन्नुभयो–हे देवी! यो तत्त्व रहस्यहरूको पनि रहस्य हो, यसैले बताउन उचित छैन। यसका विषयमा यसभन्दा पहिले कसैलाई पनि बताइएको छैन। तर पनि तिमीमा भएको भक्तिलाई ध्यानमा राख्दै यो रहस्यका बारेमा तिमीलाई बताउँछु। ॥१५॥

गुरुले ज्ञान दिने भएकाले गुरुको महिमा अपरम्पार भएको प्रस्ट्याउने सिलसिलामा भगवान् श्रीशिवले देवी पार्वतीसँग भन्नुभयो– यो रहस्यहरूको पनि

रहस्य हो, जुन जोसुकैका अगाडि व्यक्त गर्न वा बताउन सकिँदैन। जसले गुरुका माध्यमद्वारा ज्ञान प्राप्त गरेको छ, त्यसैले मात्र गुरुको महिमाका विषयमा बताउन सक्तछ। अज्ञानीले यसको महत्त्व बुझ्न सक्तैन। यसैले त्यसलाई यसको महत्त्व र महिमाका बारेमा बताउन उचित हुँदैन। यो रहस्यका सम्बन्धमा मैले यसभन्दा पहिले कसैलाई पनि बताएको छैन। ज्ञान प्राप्त गर्नका लागि गुरुको आवश्यकता पर्दछ। यसैले जसले ज्ञान प्राप्त गर्ने अभिलाषा व्यक्त गर्दछ, उसले यसको महत्त्व अनिवार्य रूपमा बुझ्नुपर्छ। यसकारण हे पार्वती! तिमीमा भएको भक्तिभाव देखेर म तिमीलाई यसको रहस्यका विषयमा बताउन लागिरहेको छु, तिमी ध्यानपूर्वक सुन।

**ममा रूपासि देवी त्वमतस्तत्कथयामि ते।**
**लोकोपकारकः प्रश्नो न केनापि कृतः पुरा ॥१६॥**

हे देवी! तिमी मेरै स्वरूप भएकीले तिमीलाई यो रहस्यका विषयमा बताउनेछु। तिम्रो यो प्रश्न लोककल्याणदायक छ। यसभन्दा पहिले कसैले पनि यसप्रकारको प्रश्न गरेको थिएन। ॥१६॥

श्रीमहादेवजीले पार्वतीसँग भन्नुभयो– हे देवी! तिमी मेरै स्वरूप हौ। यदि म शिव हुँ भने तिमी मेरै शक्तिस्वरूपा हौ। किनकि शिव र शक्ति सधैँ अभिन्न रहन्छन्। शक्तिको अभावमा अर्थात् शक्तिबिना शिव शवस्वरूप हुन्छ तथा शिवबिना शक्ति क्रियाविहीन हुन्छ। तिम्रो र मेरो सम्बन्ध अनादि छ। तिमी म शिवकै स्वरूप हौ, यसैले यो रहस्यका विषयमा म तिमीलाई मात्र बताउँछु। तिमीले गरेको यो प्रश्न लोकका लागि पनि कल्याणदायक सिद्ध हुन्छ भन्ने सम्झिएर म यो गुरुको महिमाका विषयमा बताउन लागिरहेको छु। यसप्रकारको प्रश्न पहिले कसैले पनि गरेको छैन। तिमीमा तत्त्वज्ञान प्राप्त गर्ने अभिलाषा भएकाले यो बताउँदा मैले प्रसन्नता प्राप्त भएको अनुभव गरिरहेको छु।

**यस्य देवो परा भक्तिर्यथा देवे तथा गुरौ।**
**तस्यैते कथिता ह्यर्थाः प्रकाशन्ते महात्मनः ॥१७॥**

जसले परमात्मामा पराभक्ति अर्थात् उत्तम भक्तिभाव राख्दछ तथा जसले गुरुमा पनि परमात्माकै जस्तो भक्तिभाव राख्ने महात्माहरूले मात्र यसमा बताइएको कुरा बुझ्न सक्तछन्। ॥१७॥

भगवान् श्रीशिव भन्नुहुन्छ– ज्ञान प्राप्त गर्ने अभिलाषा भएका शिष्यमा गुरुप्रति अनन्य श्रद्धा र भक्ति हुन आवश्यक हुन्छ। यो भक्ति परब्रह्म परमात्मामा भएको भक्ति जस्तै हुनुपर्छ। परमात्मालाई प्राप्त गर्ने साधन भक्ति मात्र हो। तर त्यो भक्तिको रहस्यका विषयमा परमात्मालाई प्राप्त गरिसकेका कुनै ज्ञानी गुरुले मात्र बताउन सक्तछन्, अन्य कसैले पनि यो रहस्यका बारेमा बताउन सक्तैन। यसैले गुरुको महिमा अतुलनीय छ। यसैगरी श्रद्धा र भक्ति नभएको पुरुषलाई दिएको उपदेश व्यर्थ हुन्छ अर्थात् त्यो बालुवामा हालेको पानी जस्तै हुन्छ। जुन पुरुषले गुरु र परमात्मामा भेदभाव राख्दछ, जसले गुरुलाई शरीर धारण गरेको मनुष्य मात्र सम्झन्छ; उसलाई गुरुको महिमाको ज्ञान हुन सक्तैन। किनकि गुरुले मात्र जीवलाई परमात्मा प्राप्त गर्ने वास्तविक बाटो देखाउन सक्तछन्। यसैले गुरुको महत्त्व परमात्माको भन्दा पनि धेरै हुन्छ। यो गुरु भक्ति कस्तो किसिमको हुनुपर्छ भन्ने कुरा स्पष्ट पार्ने सिलसिलामा भगवान् श्रीशिव भन्नुहुन्छ– यदि कसैमा यसप्रकारको भक्ति रहेको छैन भने उसले यसको महिमा बुझ्न सक्तैन। किनकि भक्तिसम्पन्न महात्माले मात्र यसको रहस्यका विषयमा जान्न सक्तछ।

**यो गुरुः स शिवः प्रोक्तो यः शिवः स गुरुस्मृतः।**
**विकल्पं यस्तु कुर्वीत स नरो गुरुतल्पगः ॥१८॥**

जो शिव हुनुहुन्छ, उहाँ नै सद्गुरु हुनु हो। जसले शिव र गुरुमा भेदभाव राख्छ, त्यसलाई गुरुकी पत्नीसँग सहवास गरेको पाप लाग्दछ। ॥१८॥

तत्त्वज्ञानी मात्र गुरु हुन्छ। जसले ब्रह्मत्व प्राप्त गरिसकेको छ, जसले आत्मज्ञान पाइसकेको छ, जो परमात्मासँग एकाकार भइसकेको छ, त्यसलाई मात्र गुरु भनिन्छ। यसप्रकारको गुरु शिव समान हुन्छ तथा जो शिव हुनुहुन्छ; उहाँ नै गुरुस्वरूप हुनुहुन्छ। किनकि गुरु र शिवमा अभेद रहेको हुन्छ। त्यसपछि द्वैतभाव समाप्त हुन्छ। यस किसिमका गुरु सबै किसिमका सांसारिक कामनाहरू तथा वासनाहरू भन्दा माथि उठेका हुन्छन्। जसले लोभ, मोह, ईर्ष्या, राग, द्वेषलगायतका विकारलाई यथार्थ रूपमा परित्याग गरेको हुन्छ। जो आफ्नो आत्मामा स्थिर भएर त्यसैमा सन्तुष्ट हुन्छ तथा त्यसैमा रमाउँछ; त्यही वास्तविक गुरु हुन सक्तछ। परमात्मा र गुरुमा अभेद रहेको अनुभव हुनु नै गुरुत्वको यथार्थ लक्षण हो। जसले यस्ता ज्ञानी गुरु र शिवमा भेदपूर्ण दृष्टि राख्दछ। उसलाई कहिल्यै पनि गुरुको कृपा प्राप्त हुन सक्तैन तथा त्यो ज्यादै पापी हुन्छ। जसलाई गुरुकी पत्नीसँग सहवास गर्ने

पापी जस्तै मानिन्छ। यसप्रकारको मनुष्यलाई ज्ञान प्राप्त गर्ने अधिकार हुँदैन र उसलाई कुनै पनि अवस्थामा ज्ञान प्राप्त हुन सक्तैन। किनकि शास्त्रहरूमा यस्ता कुपात्रलाई ज्ञान दिन निषेध गरिएको छ।

**वेदशास्त्रपुराणानि चेतिहासादिकानि च।**
**मन्त्रयन्त्रविद्यादिनिमोहनोच्चाटनादिकम् ॥१९॥**
**शैवशाक्तागमादिनि ह्यन्ये च बहवो मताः।**
**अपभ्रंशाः समस्तानां जीवानां भ्रान्तचेतसाम् ॥२०॥**
**जपस्तपोव्रतं तीर्थं यज्ञो दानं तथैव च।**
**गुरुतत्त्वमविज्ञाय सर्वं व्यर्थं भवेत्प्रिये ॥२१॥**

हे प्रिया! वेद, शास्त्र, पुराण, इतिहाससहित, मन्त्र, यन्त्र, मायामा फसाउने, मनलाई विरक्त पार्ने तान्त्रिक छ कर्ममध्ये एकलगायतका विद्या, शैव, शाक्त, आगम र अन्य सबै मतमतान्तर यी सबै कुराले गुरुतत्त्वको ज्ञान नभएका भ्रमित चित्तसम्पन्न जीवहरूलाई कुबाटामा लगाइदिन्छन् र तिनीहरूले गरेको जप, तपस्या, तीर्थ, यज्ञ, दानलगायत सबै व्यर्थ हुन्छन्। ॥१९॥ ॥२०॥ ॥२१॥

भगवान् श्रीशिव देवी पार्वतीसँग भन्नुहुन्छ– हे प्रिया! वेद, शास्त्र, पुराण, इतिहासलगायतका पुस्तकहरू सबैले पढ्छन्। तर तिनीहरूको वास्तविक अर्थ ज्ञानी गुरुले मात्र बुझ्न सक्तछन्। यदि पुस्तक पढेर मात्र कोही ज्ञानी हुने भए यो संसारमा सबै किसिमका पुस्तक पाइन्छन्, तिनीहरू पढेर सबै ज्ञानी हुने थिए। तर यस्तो भएको छैन। पुस्तकहरूमा त अनेकौं प्रकारका विद्याहरू छन्, अनेकौं मन्त्र छन्, भूत–प्रेतका मन्त्र छन्, सिद्धिका मन्त्र छन्, कामनापूर्तिका मन्त्र छन्, मायामा फसाउने मन्त्र छन्, मनलाई विरक्त बनाउनेलगायतका मन्त्र छन्। यसबाहेक विभिन्न प्रकारका यन्त्र छन्, जसको मनुष्यहरूले पूजा गर्दछन् तथा तान्त्रिक विद्याका विधिहरू अलगअलग छन्। यसैगरी शैव, शाक्त, आगमलगायतका अनेकौं मतमतान्तर पनि छन्, जसले विभिन्न विधिहरूमा अनेकौं प्रयोग गरेका छन्। योगको साधनामा पनि हठयोग, राजयोग, कुण्डलिनियोग, प्राणायमलगायतका विधि छन्। तिनीहरूको सफल प्रयोग पनि भएको छ। तर यी सबै विद्याहरू तिनै गुरुबाट सिक्नुपर्छ, जो यी सबैका पूर्ण ज्ञाता छन्। किनकि पुस्तक पढेर मात्र यिनीहरूलाई प्रयोगमा ल्याउन सकिँदैन। तर पनि यी विद्याहरू आत्मज्ञान प्राप्तिका कारण

होइनन्। यिनीहरूका माध्यमद्वारा ईश्वरको प्राप्ति हुन सक्तैन र शान्ति पनि प्राप्त हुँदैन। किनकि ईश्वर अर्थात् परमात्मालाई प्राप्त गरेपछि मात्र शान्ति पाउन सकिन्छ। यसैले त्यसका लागि प्रयत्नशील हुनुपर्छ। जुन भ्रमित चित्त भएको मनुष्यले गुरुका शरणमा नगइकनै पुस्तक पढेको आधारमा यी विद्याहरू प्रयोगमा ल्याउने प्रयास गर्छ, त्यो निश्चित रूपमा पथभ्रष्ट हुन्छ र कतिपय त पागल भएर घुमिरहन्छन्। यसको अर्थ हो जुनसुकै किसिमको विद्या वा ज्ञान भए तापनि त्यो त्यसका ज्ञाता गुरुबाटै सिक्नुपर्छ, त्यसपछि त्यसको राम्रो परिणाम आउँछ। यसैगरी जप, तपस्या, तीर्थ, यज्ञ, दानलगायतमा पनि गुरु मार्ग निर्देशन आवश्यक हुन्छ। किनकि त्यसको विधिका बारेमा गुरुले मात्र यथार्थ रूपमा बताउन सक्तछन्। किनकि अविधिपूर्वक गरिएका सबै कर्म व्यर्थ हुन्छन् अर्थात् तिनीहरूको उचित फल प्राप्त हुन सक्तैन। पाखण्ड र आफ्नो अहङ्कारका वशमा परेर गरिएका गरिने उत्तम मानिएका सबै कर्म मनुष्यको अधोगतिको कारण बन्दछन्। यसमा भगवान् श्रीशिवले गुरुको मार्गनिर्देशनमा गरेको कर्म सफल हुने स्पष्ट पार्नुभएको छ। यसैले गुरुतत्त्वका विषयमा बुझ्न अनिवार्य छ। गुरुको निर्देशनविना गरिएका हठयोग, प्राणायामलगायतका क्रियाहरूद्वारा शरीर रोगले पीडित हुन सक्तछ। किनकि सबै क्रियाहरूबाट सिद्धि प्राप्त हुन सक्तछ। तर तिनीहरूको दुरुपयोग गर्ने मनुष्यले ती कर्महरूको फल अवश्य भोग्नुपर्छ तथा यी सिद्धिहरू आत्मज्ञान प्राप्तिमा पनि बाधक बन्दछन्। दक्ष गुरुबाट यी विद्याहरू सिक्नका लागि सबै भन्दा पहिले उनले उसको योग्यताको अथवा पात्रताको परीक्षा लिन्छन्। यसपछि यम–नियमको पालनाका माध्यमद्वारा उसको चित्त शुद्धि गराउँछन् तथा त्यसपछि उनले शिष्यसँग कठिन परीक्षा लिएपछि मात्र गुरुले उसलाई विद्याको उपदेश दिन्छन्, जसबाट सद्परिणाम निस्कन्छ। प्रश्नोपनिषद्मा बताइएअनुसार छओटा ऋषि ज्ञान प्राप्त गर्न तथा अध्यात्मको गोपनीय रहस्य जान्ने अभिलाषा लिएर महर्षि पिप्पलादको आश्रममा आए। पिप्पलादले सबैभन्दा पहिले तिनीहरूलाई आफ्नो आश्रममा एक वर्षसम्म नियमको पालना गर्दै संयमपूर्वक बस्ने आज्ञा दिए, जसले गर्दा उनीहरूको चित्त शुद्ध हुनसकोस्। यसरी चित्त शुद्ध भएपछि मात्र उनीहरूलाई तत्त्वज्ञानको उपदेश दिए। शिष्यलाई नियम, संयम र मर्यादाको पालना गर्ने उपदेश तथा गोपनीय ज्ञान दिनका लागि गुरुको आवश्यकता पर्दछ। कर्म जस्तोसुकै भए तापनि अर्थात् सांसारिक कर्म वा अध्यात्मज्ञान भए पनि सबैमा गुरु अनिवार्य चाहिन्छ। जुन ज्ञान बिना गुरु प्राप्त हुन्छ अथवा जुन कर्म गुरुबिना गरिन्छ, त्यसको परिणाम असल हुँदैन। यसैले गुरुको अभावमा अध्यात्मज्ञान प्राप्त गर्न सकिँदैन।

**गुरुबुद्ध्यात्मनो नान्यत् सत्यं सत्यं वरानने ।**
**तल्लाभार्थं प्रयत्नस्तु कर्तव्यश्च मनीषिभिः ॥२२॥**

हे सुन्दरी! आत्मामा गुरुबुद्धि हुनुपर्छ। किनकि त्योभन्दा अरू केही पनि सत्य छैन। यसैले बुद्धिमान्हरूले आत्मज्ञान प्राप्त गर्ने प्रयासमा तत्परतापूर्वक लाग्नुपर्छ। ॥२२॥

यो समग्र सृष्टिमा जुन चेतन शक्ति छ, त्यही ज्ञानस्वरूप हो। किनकि जड पदार्थमा ज्ञानको अभाव हुन्छ। यो चेतन शक्तिको आदिकारण परब्रह्म हुनुहुन्छ; जसलाई **परम गुरु** भनिन्छ। ईश्वर पनि उहाँकै सगुणस्वरूप हो तथा आत्मा त्यही चेतन शक्तिको अंश हो। यसैले मनुष्यको सद्गुरु आत्मा हो। त्यसकारण आत्मज्ञान प्राप्त भएपछि सृष्टि रहस्यका विषयमा यथार्थ रूपमा जान्न सकिन्छ। यसकारण हे पार्वती! मनुष्यले यो चैतन्यस्वरूपी आत्मालाई नै आफ्नो सद्गुरु मान्नुपर्छ। किनकि आत्मज्ञान प्राप्त गरेपछि मनुष्य सांसारिक सागरबाट सधैँका लागि मुक्त हुनेमा कुनै द्विविधा छैन तथा अन्य गुरुले त यसका विषयमा जान्ने कार्यमा सहयोग मात्र गर्दछन्। यसकारण आत्मज्ञानबाट मात्र यथार्थ ज्ञान प्राप्त हुन्छ। यसैले आत्मालाई नै गुरु मान्नुपर्छ तथा बुद्धिमान्हरूले सधैँ आत्मज्ञान प्राप्त गर्ने प्रयासमा लागिरहनुपर्छ। आत्मज्ञान प्राप्त भइसकेपछि आत्मज्ञान दिने गुरु पनि परित्याग गर्नु पर्छ अन्यथा उनी पनि बन्धनको कारण बन्दछन्। किनकि उनी पनि माध्यम मात्र हुन्। आत्मा र ईश्वर पनि माध्यम मात्र हुन्। यसैले मोक्षावस्थामा पुगिसकेपछि यिनीहरूलाई पनि परित्याग गर्न उचित हुन्छ, त्यसपछि मात्र जीवात्माले निर्गुण अवस्था प्राप्त गर्न सक्तछ। सगुण त निर्गुणको माध्यम मात्र बन्दछ। किनकि निर्गुण मात्र अन्तिम अवस्था हो।

**गूढाविद्या जगन्माया देहश्चाज्ञानसम्भवः ।**
**विज्ञानं यत्प्रसादेन गुरुशब्देन कथ्यते ॥२३॥**

यो जगत् सजिलै बुझ्न नसकिने अविद्यै अविद्या भएको मायास्वरूप छ र शरीर अज्ञानबाट उत्पन्न भएको हो। जसको कृपाद्वारा यिनीहरूको यथार्थ ज्ञान प्राप्त हुन्छ, त्यो ज्ञानलाई **गुरु** भनिन्छ। ॥२३॥

यो देख्न सकिने समग्र संसार वा जगत् परमात्माको मायाशक्ति अर्थात् प्रकृतिकै विस्तारीत स्वरूप हो, जुन जड छ, जडमा ज्ञानको अभाव हुन्छ। किनकि

चेतन मात्र ज्ञानस्वरूप हुन्छ, जसले आफैँ कुनै सृष्टि गर्दैन वा गर्न सक्तैन। यसैले यो जगत् सजिलै बुझ्न नसकिने अविद्यै अविद्या भएको मायास्वरूप छ। यो शरीर पनि यिनै प्राकृतिक तत्त्वहरूबाट बन्ने भएकाले यो पनि अज्ञानबाटै उत्पन्न भएको हो। यसमा चैतन्य आत्मा मात्र ज्ञानस्वरूप छ। जसबाट यी जड र चेतनका बीचमा भएको भिन्नता र यिनका अलगअलग क्रियाहरूको यथार्थ ज्ञान प्राप्त हुन्छ; त्यही ज्ञानलाई मात्र **गुरु** भनिन्छ। यसप्रकारको ज्ञान आत्माको ज्ञान भएपछि मात्र प्राप्त हुन्छ; जसबाट मनुष्यले आफू प्रकृतिबाट उत्पन्न भएको जड शरीर मात्र नभएर शुद्ध चैतन्य आत्मा भएको दृढनिश्चय गर्दछ। त्यस समयमा उसले आफू प्रकृतिबाट बनेको जड शरीर नभएर चेतनशील आत्मा भएको अनुभव गर्दछ। यो आत्माको ज्ञान पछिको अवस्था हो, यसैले आत्मा नै गुरु हो।

**देही ब्रह्म भवेद्यस्मात् त्वत्कृपार्थवदामि तत्।**
**सर्वपापविशुद्धात्मा श्रीगुरोः पादसेवनात्॥२४॥**

आफ्नो गुरुका चरणहरूको सेवा गर्नाले मनुष्य सबै पापहरूबाट मुक्त भै पवित्र आत्मा भएर ब्रह्मस्वरूप हुन्छ। यो तिमी माथि कृपा गर्नका लागि बताएको हुँ। ॥२४॥

भगवान् श्रीशिवले पार्वतीलाई उपदेश दिने सिलसिलामा भन्नुभयो- यो शरीरमा एउटा आत्मा मात्र ज्ञानस्वरूप छ तथा यथार्थ गुरु त्यही हो। तर त्यसको ज्ञान पनि आफैँ हुँदैन, किनकि त्यसलाई देख्न सकिँदैन। यसकारण मनुष्यले अज्ञानका वशमा परेर आफ्नो देख्न शरीरलाई मात्र आफ्नो यथार्थ स्वरूप मानिरहेको हुन्छ, जुन उसको भ्रम मात्र हो। जसले आत्माको अनुभूति गरिसकेका छन्, यस्ता कुनै सद्गुरुको कृपा प्राप्त भएपछि मात्र यो भ्रम हट्न सक्तछ, अन्य कसैबाट यो कार्य सम्भव छैन। यसप्रकारका गुरु को हुन सक्तछन्, जसका चरणको सेवा गरेर सबै पापहरूबाट पूर्ण रूपमा मुक्त भएर आत्मा शुद्ध भएपछि आफैँ ब्रह्मस्वरूप हुन्छ।तिमी माथि कृपा गर्दै त्यसका विषयमा बताउन लागिरहेको छु।

**शोषणं पापपङ्कस्य दीपनं ज्ञानतेजसः।**
**गुरोः पादोदकं सम्यक् संसारार्णवतारकम्॥२५॥**

गुरुका गोडा धोएको पानीले पापरूपी हिलोलाई राम्ररी पखालेर ज्ञानमय तेजलाई प्रकाशमय बनाउँछ र सांसारिक सागरबाट यथार्थ रूपमा मुक्त गराइदिन्छ। ॥२५॥

भगवान् श्रीशिवले देवी पार्वतीलाई उपदेश दिने सिलसिलामा बताउनुभएअनुसार अज्ञानका वशमा परेको मनुष्यले बाध्य भएर, स्वार्थका वशमा परेर वा अचेतनाको प्रेरणा अथवा संस्कारहरूका वशमा परेर अनेकौँ किसिमका पाप कर्म गर्दछ, जसको फल उसले अनिवार्य रूपमा भोग्नुपर्छ। यसरी भएका पापहरूबाट कोही पनि मुक्त हुन सक्तैन। यस्ता पाप कर्महरू र पुण्य कर्महरूको फल अलगअलग हुन्छ अर्थात् ती दुवैको फल भोग्नै पर्छ। यी दुवै जीवात्माका लागि बन्धनस्वरूपी हुन्छन् वा छन्। पाप कर्मरूपी हिलो पखाल्न गुरुका गोडा धोएको पानी पिउने एकमात्र उपाय छ। गोडा पखालेको पानी पिउनुको अर्थमा पूर्ण रूपमा उनका शरण पर्नु, उनले देखाएको बाटोमा हिँड्नु, उनले दिएको आज्ञा पालन गर्नु, उनको शिक्षा वा उपदेशलाई श्रद्धापूर्वक स्वीकार गर्नु, उनले बताएको साधना उनकै नजीकमा बसेर सम्पन्न गर्नु लगायत पर्दछन्। यसरी गुरुले देखाएको मार्गको अवलम्बन गर्नाले मात्र त्यो आत्मारूपी ज्ञान अथवा तेज राम्ररी वा यथार्थ रूपमा प्रकाशमय हुन्छ; जसले सबै पापहरूबाट पूर्ण रूपमा मुक्त गराइदिन्छ। यो अज्ञानका कारणले भएको पाप कर्म ज्ञानको प्रकाश उदय भएपछि आफैँ हराउँछन् अर्थात् जसरी सूर्य उदाएपछि अन्धकार आफैँ हराउँछ; त्यसैगरी ज्ञानरूपी अग्निद्वारा सबै पाप भस्म हुन्छन्। यसैसँग मिल्ने प्रसङ्ग गीताको ४।३७ मा पनि आएको छ, त्यसमा भगवान् श्रीकृष्णले अर्जुनलाई उपदेश दिने सिलसिलामा बताउनुभएअनुसार जसरी दनदनी बलेको अग्निले काठदाउराहरू जलाएर खरानी पार्दछ; त्यसैगरी ज्ञानरूपी अग्निले सबै कर्महरूलाई जलाएर भस्म पार्दछ।

यसकारण गुरुको एकमात्र कार्य के हो भने उनले आफ्नो शिष्यको ज्ञानरूपी ज्योतिलाई प्रज्वलित बनाइदिनु पर्छ। जसका माध्यमद्वारा ऊबाट अज्ञानवश भएका पापहरू नष्ट हुन्। यसैले यो संसाररूपी सागरबाट गुरुले मात्र तार्न अर्थात् मुक्त गराउन सक्तछन्।

**अज्ञानमूलहरणं जन्मकर्मनिवारकम्।**
**ज्ञानवैराग्यसिद्ध्यर्थं गुरूपादोदकं पिवेत् ॥२६॥**

अज्ञानलाई जरैदेखि उखेलिदिने, अनेकौँ जन्महरूमा गरिएका कर्महरू नष्ट गरिदिने, ज्ञान र वैराग्यलाई सिद्ध गरिदिने गुरुका गोडा धोएको पानी पिउनुपर्छ। ॥२५॥

गुरुले मात्र शिष्यलाई आत्माको ज्ञान गराउन सक्तछन्। यसरी आत्माको ज्ञान प्राप्त भएपछि मनुष्यमा भएको अज्ञान जरैदेखि नष्ट हुन्छ। यो पञ्चभौतिक

शरीरलाई मात्र आफ्नो यथार्थ स्वरूप मान्नु तथा देख्न सकिने भौतिक जगत्लाई मात्र सृष्टि मान्नु अज्ञान हो। यो अज्ञान आत्माको ज्ञानका माध्यमद्वारा मात्र नष्ट हुन्छ अथवा हट्छ, यसलाई हटाउने अन्य कुनै उपाय छैन। यही आत्मज्ञानद्वारा नै जुन अनेकौं जन्महरूका सञ्चित कर्म छन्, तिनीहरू नष्ट हुन्छन्। किनकि कर्महरूको संस्कार चित्तमा सङ्गृहीत भएको हुन्छ। जब आत्माको ज्ञान प्राप्त हुन्छ, त्यसपछि चित्त नै नरहने भएकाले सबै संस्कारहरू समाप्त हुन्छन्, जसबाट पुनर्जन्म हुने सम्भावना सधैंका लागि सकिन्छ। वैराग्य पनि यो आत्माको ज्ञानद्वारा मात्र सिद्ध हुन्छ। यसपछि सबै किसिमबाट सांसारिक कामनाहरू, वासनाहरू, आसक्तिलगायत सकिन्छन्। किनकि कपडा फेर्नु र गृहस्थाश्रम परित्याग गरेर जङ्गल जानुलाई मात्र वैराग्य भनिँदैन र वैराग्यको वास्तविक अर्थ मनद्वारा गरिने आसक्ति परित्याग हो, जुन ज्ञानको फल हो। यी सबै कर्म गुरुका गोडा धोएको पानी पिउनाले अर्थात् उनका शरणमा पर्नाले उनीद्वारा उपदेश गरिएको ज्ञानका माध्यमद्वारा आफैँ सिद्ध हुन्छन्।

**स्वदेशिकस्यैव च नामकीर्तनम्**
**भवेदनन्तस्य शिवस्य कीर्तनम्।**
**स्वदेशिकस्यैव च नामचिन्तनम्**
**भवेदनन्तस्य शिवस्य चिन्तनम् ॥२७॥**

आफ्ना गुरुको नामको कीर्तन अनन्तस्वरूप भगवान् श्रीशिवकै कीर्तन हो। आफ्ना गुरुको नामको चिन्तन अनन्तस्वरूप भगवान् श्रीशिवकै चिन्तन हो।

जुन गुरुले आत्मज्ञान प्राप्त गरिसकेका छन् तथा जसले शरीरसँग सम्बन्धविच्छेद गरिसकेका छन्। ती आत्मचेतनाका आधारमा मात्र जीवित रहन्छन्। आत्मचेतना र समष्टि चेतना अर्थात् ईश्वरमा कुनै भेद छैन तथा तिनै शिवस्वरूप हुन्। यसैले यसप्रकारका ज्ञानी गुरु र श्रीशिवको अभेदरूपी सम्बन्ध कायम हुन्छ। ती शिवस्वरूपै हुन्छन्। यस किसिमका गुरुको कीर्तन पनि भगवान् श्रीशिवकै कीर्तन हो तथा उनको चिन्तन पनि भगवान् श्रीशिवकै चिन्तन हो। अहङ्कारका कारणले श्रीशिव र जीवमा भेद भएको अनुभूति हुन्छ। जब अहङ्कार नष्ट हुन्छ, त्यसपछि श्रीशिव र जीवका बीचको यो पर्खाल भत्किन्छ। यस्तो अवस्था प्राप्त भएपछि गुरु आफैँ परब्रह्मस्वरूप अथवा शिवस्वरूप हुन्छन्।

**काशीक्षेत्रं निवासश्च जाह्नवी चरणोदकम्।**
**गुरुर्विश्वेश्वरः साक्षात् तारकं ब्रह्मनिश्चयः ॥२८॥**

गुरुको निवासस्थान काशी क्षेत्र हो। गुरुका गोडा धोएको पानी गङ्गा हुन्। भगवान् श्रीविश्वनाथ गुरु हुनुहुन्छ र उहाँ नै यो सांसारिक सागरबाट सधैँका लागि मुक्त गराइदिने परब्रह्म हुनुहुन्छ। ॥२८॥

भगवान् श्रीशिवको निवासस्थान भनेर चिनिने काशी क्षेत्रको महिमा अतुलनीय छ। किनकि त्यहाँ भगवान् श्रीशिव सधैँ बस्नुहुन्छ। यो काशी क्षेत्र भगवान् श्रीशिवको त्रिशूलमा बसेको वा अडिएको छ। यहाँ शरीर परित्याग गर्ने जीव मुक्त हुन्छ। यसैले यसलाई **अविमुक्त क्षेत्र** अर्थात् काशी क्षेत्र भनिन्छ। यहाँ शरीर परित्याग गर्दाका अवस्थामा भगवान् श्रीशङ्करले मृत्युको मुखमा पुग्नै लागेको प्राणीलाई तार्ने मन्त्र सुनाउनुहुन्छ। जसका प्रभावले जीवले तत्त्वज्ञान प्राप्त गर्दछ, जसले गर्दा उसका अगाडि आफ्नो परब्रह्मस्वरूप प्रकाशमय हुन्छ। यसै स्थानमा प्रसिद्ध काशी विश्वनाथको मन्दिर रहेको छ, जुन बाह्रओटा ज्योतिर्लिङ्गहरूमध्येको एउटा हो। यही स्थानमा पतितलाई पवित्र बनाउने गङ्गा रहेकी छन्, जसले जीवका पापहरू नष्ट गरिदिन्छिन्। भगवान् श्रीविश्वनाथ नै सांसारिक समुद्रबाट तार्ने ब्रह्म हुनुहुन्छ; जसले सबै प्राणीमात्रलाई मुक्ति दिनुहुन्छ। उहाँ आफैँ शिवस्वरूप हुनुहुन्छ। काशीका सातोटा (काशी, काञ्ची, हरिद्वारा, अयोध्या, द्वारिका, मथुरा, उज्जैन) पुरहरूमध्ये यो सबैभन्दा पहिलो हो। यी सातोटै क्षेत्र मुक्तिदायक छन्। यसैगरी पञ्चकाशी (वाराणसी, गुप्तकाशी, उत्तरकाशी, तेन्काशी, शिवकाशी) मा पनि यो पहिलो स्थानमा रहेको छ। यो एकाउन्नओटा पीठहरूमध्येको एउटा पीठ हो। यसैले यसलाई प्रसिद्ध तीर्थ मानिन्छ।

तर भगवान् श्रीशिवले देवी पार्वतीलाई बताउनुभएअनुसार सबैभन्दा ठूलो तीर्थ गुरु नै हुन्। जसको कृपा प्राप्त भएपछि यी सबै फल अनायास रूपमा प्राप्त हुन्छन्। जसले आफ्ना गुरुको श्रद्धापूर्वक सेवा गर्दछ, उसको निवासस्थान नै काशी बन्दछ, उनको गोडा धोएको पानी गङ्गा हुन्छ; उनै भगवान् श्रीविश्वेश्वर हुन्छन्, जो सांसारिक समुद्रबाट तार्ने परब्रंह्म हुनुहुन्छ, जसले सबैलाई मुक्ति दिनुहुन्छ। यी सबै फल अनायास रूपमा गुरुबाटै प्राप्त हुन्छन्।

**गुरुसेवा गया प्रोक्ता देहः स्यादक्षयो वरः ।**
**तत्पादं विष्णुपादं स्यात् तत्र दत्तमनस्ततम् ॥२९॥**

गुरुको सेवा गया तीर्थ हो। गुरुको शरीर कहिल्यै विनाश नहुने बरको रूख हो। गुरुका चरण भगवान् श्रीविष्णुका चरण हुन्। त्यहाँ एकाग्र भएको मन त्यही आकार वा रूपको हुन्छ। ॥२९॥

गयालाई पितृहरूको तीर्थ बताइएको छ। यो तीर्थहरूको राजा हो। यहाँ पितृहरूको श्राद्ध गर्ने प्रचलन रहेको छ। याज्ञवल्क्य स्मृतिका अनुसार गयामा श्राद्ध गर्नाले पछाडिका सात र अगाडिका सात पुस्ताहरूको उद्धार हुन्छ। गयामा पिण्डदान गर्दा पितृहरूले कहिल्यै विनाश नहुने तृप्ति प्राप्त गर्दछन्। गयामा सबै तीर्थहरूको सामीप्य रहेको छ, त्यसैले यसलाई तीर्थहरूको राजा बताइएको हो। यो पनि एकाउन्नओटा सिद्ध क्षेत्रहरूभित्रै पर्दछ। गयामा फल्गु नदीको नजीकै **विष्णु पादुका** रहेको छ तथा त्यसैको छेउमा **अक्षय वट** अर्थात् गयाको बरको रूख रहेको छ, जहाँ पिण्डदान गरिन्छ। यसो गर्दा पितृहरूले मुक्ति प्राप्त गर्दछन्।

भगवान् श्रीशिवले देवी पार्वतीलाई उपदेश दिने सिलसिलामा बताउनुभएअनुसार गुरुको सेवा गर्नाले तीर्थहरूको राजा गयामा गएको फल प्राप्त हुन्छ तथा गुरुको शरीर नै गयामा भएको बरको रूख हो। जसबाट शिष्यलाई कहिल्यै विनाश नहुने पद प्राप्त हुन्छ तथा गुरुका चरण नै भगवान् श्रीविष्णुका चरण हुन्। यसप्रकारको तीर्थलाई छाडेर अन्य तीर्थमा जान वा तीर्थको सेवा गर्न आवश्यक छैन। किनकि गुरुले मात्र मुक्ति दिलाउन सक्तछन्। जसमा मनलाई एकाग्र गराएपछि मन परमात्मामा एकाकार हुन्छ। यही जीवको परमसिद्धि हो।

**गुरुवक्त्रे स्थितं ब्रह्म प्राप्यते तत्प्रसादतः ।**
**गुरोर्ध्यानं सदा कुर्यात् पुरुषं स्वैरिणी यथा ॥३०॥**

गुरुका अमृतरूपी वचनमा परब्रह्म बस्नुभएको हुन्छ। गुरुका कृपाले मात्र परब्रह्मलाई प्राप्त गर्न सकिन्छ। यसैले जसरी व्यभिचारिणी स्त्रीले आफ्नो प्रेमी पुरुषको चिन्तन गर्दछे, त्यसैगरी सधैँ गुरुको ध्यान गर्नुपर्दछ। ॥३०॥

परमात्मा यो मायाशक्तिभन्दा यथार्थ रूपमा अलग वा टाढा हुनुहुन्छ। जसका विषयमा बताउन सकिँदैन अथवा जसलाई जान्न वा देख्न सकिँदैन, तर

उहाँको अनुभूति हुन्छ। यो अनुभूति गुरुका माध्यमद्वारा मात्र गर्न सकिन्छ। जसले शिष्यको चित्त शुद्धि गराइसकेपछि गुरु वाक्य **तत्त्वमसि**का रूपमा परमात्माको अनुभूति गराउँछन्। यसलाई आत्मसात् गर्दै शिष्य स्वयंले आफू ब्रह्मस्वरूप भएको अनुभव गर्न थाल्छ। यही अनुभव उसको मुक्तिको कारकतत्त्व बन्दछ, जसबाट उसमा भएको सबै भ्रम हट्छ। ऊ आफ्नो यथार्थ स्वरूपमा अवस्थित हुन्छ। यसप्रकारका अमृतरूपी वचन गुरुको मुखबाट निस्किएपछि शिष्य धन्य हुन्छ। यसैले गुरुका वचन नै ब्रह्मस्वरूपी हुन्छन्। परमात्माको अनुभूति गर्नका लागि अनिवार्य रूपमा गुरुका शरणमा पर्नै पर्छ। उनले जसलाई योग्य पात्र सम्झन्छन् तथा जसले तन, मनद्वारा गुरुको सेवा गर्दछ; उसैलाई गुरुको प्रसादका रूपमा यसप्रकारको ज्ञान प्राप्त हुन्छ भने अन्यबाट हुन सक्तैन। यसका लागि सधैँ एकाग्रतापूर्वक गुरुको ध्यान गर्नुपर्छ। यही उनको कृपा प्राप्त गर्ने उत्तम साधन हो।

**स्वाश्रमं च स्वजातिं च स्वकीर्तिं पुष्टिवर्धनम्।**
**एतत्सर्वं परित्यज्य गुरुमेव समाश्रयेत् ॥३१॥**

आफ्नो आश्रम अर्थात् ब्रह्मचर्य, गृहस्थ, वानप्रस्थ र सन्न्यास, आफ्नो जाति, आफ्नो कीर्ति अर्थात् लोकप्रियता, पद र प्रतिष्ठा, पालन–पोषण यी सबै परित्याग गरेर पूर्ण रूपमा गुरुका शरणमा पर्नुपर्दछ। ॥३१॥

तत्त्वज्ञान र आत्माको ज्ञान प्राप्त गर्नका लागि पूर्ण रूपमा गुरुका शरणमा पर्नुपर्छ। उनीबाहेक अन्य कसैद्वारा पनि यो कार्य सम्पन्न हुन सक्तैन। किनकि ज्ञानी गुरुले मात्र ज्ञानको बाटो देखाउन सक्छन्; यसैले उनका शरणमा पर्न उचित हुन्छ। यसरी गुरुका शरणमा जाने अभिलाषा भएको व्यक्तिले आफ्नो आश्रम, जाति, कीर्ति, यश, प्रशंसा, प्रतिष्ठालगायतको अहङ्कार अनिवार्य रूपमा परित्याग गर्नुपर्छ। किनकि यिनीहरूले ज्ञान प्राप्तिमा व्यवधान उत्पन्न गराउँछन्। आत्माको ज्ञान प्राप्त गर्ने अधिकार सबैलाई छ अर्थात् यसमा जाति, वर्ण, आश्रमलगायतको भेद रहँदैन। यी सबैलाई यथार्थ रूपमा परित्याग गरेर गुरुका शरणमा पर्नुपर्छ।

**गुरुवक्त्रे स्थिता विद्या गुरुभक्त्या च लभ्यते।**
**त्रैलोक्ये स्फुटवक्तारो देवर्षिपितृमानवाः ॥३२॥**

विद्या गुरुको मुखमा विराजमान भएको हुन्छ र त्यसलाई प्राप्त गर्न अनिवार्य रूपमा गुरुको भक्ति गर्नै पर्छ। यो कुरा

तीनोटै लोकमा देवता, ऋषि, पितृ र मानवहरूले स्पष्ट रूपमा बताएका छन्। ॥३२॥

गुरुको महिमाका विषयमा सबैतिर प्रकाश पारेको पाइन्छ। तीनोटै लोकहरूमा अवस्थित देवताहरू, ऋषिमुनि, पितृ र मनुष्यलगायतले गुरुको महिमा बुझेका छन् र त्यसैको प्रशंसा गर्दछन्। आजसम्म गुरुका शरणमा नपरी कसैले पनि ज्ञान प्राप्त गर्न सकेको छैन र कोही मुक्त हुन पनि सकेको छैन। किनकि नचिकेताले यमराजबाट, जनकले अष्टावक्रबाट तथा श्रीरामले वशिष्ठबाट ज्ञानरूपी ज्योति प्राप्त गरेका थिए। यसकारण कसैले पनि बिना गुरु यो उच्चता प्राप्त गर्न सक्तैन।

परा र अपरा नाम भएका दुइटा विद्या हुन्छन्। यिनीहरूमध्ये अपरा सांसारिक विद्या हो, जसले संसारमा सुखपूर्वक बाँच्ने कला सिकाउँछ तथा दोस्रो परा विद्या हो, जुन आत्मज्ञान प्राप्तिको कारकतत्त्व हो। यी विद्याहरूका विषयमा पुस्तकहरूको अध्ययन गरेर जान्न सकिँदैन, कसैबाट सिक्नुपर्छ। यिनका विषयमा ती गुरुले मात्र यथार्थ रूपमा बताउन सक्तछन्, जसले आत्माको ज्ञान प्राप्त गरेको छन्। यसप्रकारका गुरुका वचनद्वारा मात्र मनुष्यको कल्याण हुन सक्तछ। यसैले विद्या गुरुको मुखमा बसेको हुन्छ भनिएको हो। तर यो अमूल्य वस्तु उनले सबैलाई दिँदैनन्। उनले कठिन परीक्षाका माध्यमद्वारा कुनै योग्य पात्र छानेर त्यसको भक्ति र सेवाबाट प्रसन्न भएपछि उसलाई प्रसादका रूपमा यो विद्या दिन्छन्।

**गुकारश्चान्धकारो हि रुकारस्तेज उच्यते।**
**अज्ञानग्रासकं ब्रह्म गुरुरेव न संशः ॥३३॥**

**गु** शब्दले अन्धकार अर्थात् अज्ञानलाई बुझाउँछ भने **रु** शब्दले प्रकाश अथवा ज्ञानलाई बुझाउँछ। जुन अज्ञानलाई नष्ट गरिदिने ब्रह्मस्वरूप प्रकाश छ, त्यो **गुरु** हो, यसमा कुनै द्विविधा छैन। ॥३३॥

संस्कृत भाषाको विशेषताअनुसार शब्दको अर्थ त्यसैभित्र रहेको हुन्छ। यो **गुरु** शब्द पनि त्यस्तै छ। यसमा **गु** शब्दको अर्थ अन्धकार हो। यो अज्ञानरूपी अन्धकार हो। जसरी अन्धकार शाश्वत छ, प्रकाशलाई भने ल्याउनुपर्छ; त्यसैगरी अज्ञान पनि शाश्वत छ। त्यसलाई ल्याउनु पर्दैन, त्यसको खोजी गर्नुपर्छ। त्यसका लागि कुनै साधना वा तपस्या गर्न आवश्यक छैन। अज्ञान ल्याउन वा पाउनका लागि कुनै विद्यालय वा गुरुकुल खोल्न आवश्यक छैन, त्यो छँदै छ। तर त्यसको कुनै

अस्तित्व छैन। किनकि त्यो ज्ञानको अभाव मात्र हो। जसरी बत्ती बालेपछि अन्धकार हराउँछ, त्यसैगरी ज्ञानरूपी बत्ती बलेपछि अज्ञानरूपी अन्धकार हराउँछ। यो ज्ञानरूपी बत्ती गुरुले मात्र बाल्न सक्तछन्। यसमा **रु** को अर्थ प्रकाश वा ज्ञान हो। यसैले जसले यो अज्ञान नष्ट गरेर ज्ञानको ज्योति बालिदिन्छन् तिनैलाई **गुरु** भनिन्छ। यो ज्ञानरूपी ज्योति आध्यात्मिक ज्योति हो, यही आत्मरूपी ज्योति हो, जुन सधैं बलिरहन्छ। यो ज्योतिको ज्ञान आफ्नो आत्मरूपी ज्योति बलेको गुरुले मात्र गराउन सक्तछन् अर्थात् यो कार्य कुनै ज्ञानी गुरुले मात्र गर्न सक्तछन्। यसैले गुरुको महत्त्व अतुलनीय छ।

यो समग्र जगत् अज्ञानरूपी अन्धकारमा घुमिरहेको छ, जसले गर्दा जतासुकै अशान्ति फैलिएको छ। आफ्नो आत्मस्वरूपको ज्ञान नभएकाले यसप्रकारको अशान्ति फैलिएको हो। जुन समयमा त्यो आत्मरूपी ज्योतिमा समाहित हुन्छ, त्यसै समयमा सबै संशय अथवा द्विविधा नष्ट हुन्छ तथा त्यसले परम आनन्दको अनुभव गर्न थाल्दछ। यो आत्माको ज्योति नै परब्रह्मरूपी प्रकाश हो, जसको ज्ञान गुरुले मात्र गराउन सक्तछन्। किनकि गुरु आफैं परब्रह्मस्वरूपी प्रकाश भएकोमा कुनै द्विविधा छैन।

**गुकारश्चान्धकारस्तु रुकारस्तन्निरोधकृत्।**
**अन्धकारविनाशित्वात् गुरुरित्यभिधीयते ॥३४॥**

**गुकार** अन्धकार हो र त्यसलाई नष्ट गर्ने **रुकार** प्रकाश हो। अज्ञानरूपी अन्धकार हटाएर ज्ञानरूपी प्रकाश फैलाइदिने भएकाले नै **गुरु** भनिएको हो। ॥३४॥

गुरु शब्दमा **गु** को अर्थ अन्धकार हो भने **रु** को अर्थ त्यसलाई हटाउने वा नष्ट गरिदिने प्रकाश हो। जसले यो अज्ञानरूपी अन्धकार हटाएर ज्ञानको प्रकाश फैलाउन सक्तछ, त्यही **गुरु** हो। यो भौतिक जगत्लाई सत्य मान्दै यसको आदिकारण चेतनशक्तिलाई बिर्सिनु नै मनुष्यको अज्ञान हो। किनकि सृष्टिका सबै क्रियाहरूको आदिकारण चेतनशक्ति हो। त्यसैको नियमअनुसार यो सृष्टि चलेको छ वा चलिरहन्छ। आदिकारण परब्रह्मलाई बिर्सिएर यो जडशक्तिलाई सर्वोपरि मान्नु अज्ञान हो। यो अज्ञान हटाएर परब्रह्मको ज्ञान गराउनेलाई **गुरु** भनिन्छ। गुरुले पुस्तकीय ज्ञान मात्र नदिएर त्यसको प्रत्यक्ष अनुभव पनि गराउँछन्। जुन अनुभवद्वारा मनुष्यमा भएको द्विविधा हट्छ।

**गुकारश्च गुणातीतो रूपातीतो रुकारकः ।**
**गुणरूपविहीनत्वात् गुरुरित्यभिधीयते ॥३५॥**

**गुकार**को अर्थ गुणातीत अर्थात् गुणभन्दा टाढा वा अलग र **रुकार** को अर्थ रूपविहीन अथवा कुनै निश्चित स्वरूप नभएको भन्ने लाग्छ। यसैले गुण र रूपबाट अलग भएकाले नै **गुरु** भनिएको हो । ॥३५॥

गुरु शब्दमा **गु**को एउटा अर्थ गुणातीत अथवा गुणबाट अलग भन्ने पनि लाग्दछ तथा **रु**को अर्थ रूपविहीन वा कुनै निश्चित स्वरूप नभएको भन्ने लाग्दछ। यो प्रकृति मात्र तीनोटा गुणसम्पन्न छ। परब्रह्म यी तीनोटै गुणबाट पूर्ण रूपमा अलग हुनुहुन्छ अर्थात् यी गुणसँग उहाँको कुनै सम्बन्ध छैन। उहाँ चैतन्यस्वरूप हुनुहुन्छ। यो मायाशक्तिरूपी प्रकृति **क्षर** तत्त्व हो, जसले विस्तारित भएर सृष्टिमा सबै प्रकारका रूपहरूको निर्माण गर्दछ। यसैले सृष्टिका सबै रूप प्राकृतिक हुन भने परब्रह्म रूपविहीन हुनुहुन्छ। उहाँको आफ्नो कुनै रूप, आकार छैन। यसैले उहाँलाई देख्न सकिँदैन। ज्ञान प्राप्त भएपछि गुरुले पनि उहाँ यी पञ्चभौतिक तत्त्वहरूद्वारा बनेको शरीर नभएर शुद्ध स्वरूप हुनुहुन्छ तथा जो यो त्रिगुणमयी मायाशक्तिबाट पूर्ण रूपमा अलग हुनुहुन्छ भन्ने अनुभव गर्दछन्। उनले आफू ब्रह्मस्वरूप भएको अनुभव गर्दछन्, जो गुणातीत र रूपातीत हुनुहुन्छ। यसैले उनलाई **गुरु** भनिन्छ। जसलाई आत्माको अनुभव भएको छैन, जसले शरीरलाई आफ्नो यथार्थ स्वरूप मान्दछ, त्यो **गुरु** भन्न योग्य हुँदैन। यसकारण आत्मज्ञानी पुरुष मात्र गुरु हुन्छ।

**गुकारः प्रथमो वर्णो मायादि गुणभासकः ।**
**रुकारोऽस्ति परं ब्रह्म मायाभ्रान्तिविमोचकम् ॥३६॥**

गुरु शब्दमा प्रयोग भएको पहिलो अक्षर **गु**काररले मायालगायतका गुणहरूलाई प्रकाशमय बनाउँछ भने दोस्रो अक्षर **रु**कार मायाको भ्रमबाट मुक्त गराउने परब्रह्म हो । ॥३६॥

गुरु शब्दमा प्रयोग भएका दुइटा अक्षर **गु** र **रु** का अनेकौँ अर्थ लाग्छन्। **गु** अक्षरले तीन गुणसम्पन्न मायाशक्तिरूपी प्रकृतिको ज्ञान गराउँछ। यो प्रकृतिलाई सत्य मान्नु अज्ञान हो, भ्रम हो। यो मायाशक्ति परब्रह्म परमात्माको शक्ति भएकाले उहाँबाट उत्पन्न भएर फेरि उहाँमै विलीन हुन्छ। यसैले यसको स्वतन्त्र अस्तित्व छैन र यो शाश्वत पनि होइन। परब्रह्म परमात्मा मात्र शाश्वत हुनुहुन्छ; जो नित्य हुनुहुन्छ,

सधैँ हुनुहुन्छ र सधैँ रहनुहुन्छ। उहाँको जन्म–मृत्यु हुँदैन र उहाँमा घट्ने–बढ्ने नियम पनि लागू हुँदैन। किनकि उहाँ सधैँ आफ्नो स्वरूपमा विद्यमान रहनुहुन्छ। उहाँ नै यो समग्र सृष्टिको आदिकारण हुनुहुन्छ। यो मायाशक्ति प्राकृतिक सृष्टिको आदिकारण नभए तापनि यसलाई देख्न सकिने भएकाले अज्ञानीहरूले यसैलाई सृष्टिको आदिकारण मान्दछन्, जुन भ्रम हो। यो भ्रम परब्रह्म परमात्माको यथार्थ ज्ञान प्राप्त भएपछि स्वतः हट्छ, यसलाई हटाउने अन्य कुनै उपाय छैन। गुरु शब्दमा प्रयोग भएको **रु**ले यो अज्ञानका प्रभावले उत्पन्न भएको भ्रम हटाइदिन्छ। किनकि यसले परब्रह्म परमात्माको ज्ञान गराउँछ। जसलाई तात्त्विक रूपमा जानेपछि अज्ञानबाट मुक्ति मिल्दछ। यसकारण जसले यो अज्ञानलाई हटाएर परब्रह्म परमात्माको ज्ञान गराउँछ, त्यही **गुरु** हो भन्ने निश्चय गर्नुपर्छ।

**आसनं शयनं वस्त्रं वाहनं भूषणादिकम् ।**
**साधकेन प्रदातव्यं गुरुसन्तोषकारणम् ॥३७॥**

साधकले गुरुलाई प्रसन्न बनाउनका लागि उनलाई आसन, बिछ्यौना, कपडा, आभूषण, वाहनलगायतका सामग्री समर्पण गर्नुपर्छ। ॥३७॥

कुनै पनि गुरुबाट ज्ञान प्राप्त गर्नका लागि समर्पण पहिलो आवश्यकता हो। आफ्नो सर्वस्व गुरुलाई समर्पण गरिदिनुपर्छ। आफ्नो मन र बुद्धिलगायत इच्छाहरू, कामनाहरू, वासनाहरू तथा अहङ्कारसहित सबै गुरुमा समर्पित गरिदिनुपर्छ। यसरी समर्पण गर्ने शिष्यलाई गुरुको प्रसाद प्राप्त हुन्छ। जसले यसरी समर्पण गर्न सक्तैन, त्यसलाई यसप्रकारको उच्च ज्ञान प्राप्त हुन सक्तैन।

**शरीरमिन्द्रियप्राणमर्थस्वजनबान्धवान् ।**
**आत्मदारादिकं सर्वं सद्गुरुभ्यो निवेदयेत् ॥३८॥**

आफ्नो शरीर, इन्द्रिय, प्राण, धन, बन्धु–बान्धव, नातागोता, पत्नीलगायत सबै गुरुका चरणमा समर्पित गरिदिनुपर्छ। ॥३८॥

जब कुनै साधकले आत्मज्ञान प्राप्त गर्ने अभिलाषा लिएर आफ्नो सर्वस्व गुरुलाई समर्पित गर्दछ भने उसको शरीर, इन्द्रियहरू, प्राण, धन, बन्धु–बान्धव र आफ्ना नाता–गोतासँग पनि उसको कुनै सम्बन्ध रहँदैन अर्थात् उसले आफ्नी पत्नी र पुत्रहरूलाई पनि यथार्थ रूपमा बिर्सिदिन्छ। यदि उसले यो ज्ञान प्राप्त गर्नका लागि कुनै सद्गुरुबाट दीक्षा लिएर सन्न्यास ग्रहण गर्‍यो भने त उसको नाम, गोत्र आदि

पनि फेरिन्छ। आफ्नो पहिलेका सम्बन्धहरूसँग उसको कुनै सम्बन्ध रहँदैन। त्यसपछि उसले आफ्नो गुरुको परम्पराअनुसार हिँड्नुपर्छ। जसले यसरी समर्पण गर्दछ, त्यसलाई योग्य पात्र मानिन्छ। सांसारिक आसक्ति त्याग नै ज्ञान प्राप्तिको पहिलो चरण हो।

**सर्वश्रुतिशिरोरत्नविराजितपदाम्बुजम् ।**
**वेदान्तार्थप्रवक्तारं तस्मात्संपूजयेद् गुरुम् ॥३९॥**

गुरु सबै श्रुतिरूपी सर्वोत्कृष्ट रत्नहरूद्वारा सुशोभित भएका चरणसम्पन्न र वेदान्तका अर्थहरूको यथार्थ ज्ञाता अर्थात् वेदान्तका सम्बन्धमा राम्ररी बुझाउन वा बताउन सक्ने हुन्छन्। यसैले गुरुको पूजा गर्नुपर्छ। ॥३९॥

ज्ञान दिन सक्षम गुरु सबै श्रुतिहरूबाट परिपूर्ण वा सम्पन्न हुन्छन्। उनी तिनीहरूका ज्ञाता तथा त्यसको अर्थ विश्लेषणात्मक रूपमा प्रस्तुत गर्न सक्षम हुन्छन्। गुरुले वेदान्तका अर्थहरूको वास्तविक व्याख्या गर्दछन्। उनी विद्वान् मात्र नभएर उनले ज्ञान प्राप्त गरिसकेका हुन्छन्। उनले सबै कुरा आफ्नो अनुभवका आधारमा बताउँछन्। यसप्रकारका गुरुले मात्र शिष्यलाई वास्तविक बाटो देखाउँदै त्यसमा हिँडाउँछन्। यस किसिमका गुरुलाई शरीर धारण गर्ने मनुष्य मात्र नसम्झिएर साक्षात् ब्रह्मस्वरूप भएको स्वीकार गर्दै उनका चरणको पूजा गर्नुपर्छ। यसरी भक्तिपूर्वक गरिएको पूजाको फल अनिवार्य रूपमा प्राप्त हुन्छ।

**यस्य स्मरणमात्रेण ज्ञानमुत्पद्यते स्वयम्।**
**सः एव सर्वसम्पत्तिः तस्मात्संपूजयेद्गुरुम् ॥४०॥**

जसको स्मरण मात्र गर्दा पनि ज्ञान आफैँ प्रकट हुन थाल्दछ र उनै सबै सम्पदा अर्थात् शम, दमलगायत स्वरूप छन्। यसप्रकारका गुरुको पूजा अनिवार्य रूपमा गर्नुपर्छ। ॥४०॥

पूजा सधैँ सर्वोत्कृष्टको मात्र गरिन्छ, जसको फल पनि सर्वोत्कृष्ट नै हुन्छ। हाम्रो समाजमा साधु–सन्तहरूको पूजा गर्ने परम्परा विद्यमान छ। किनकि तिनीहरू आत्माको चेतनाका आधारमा सामान्य मनुष्यहरूभन्दा माथि उठेका हुन्छन्। त्याग र तपस्याका प्रभावले उनीहरूको हृदयमा आध्यात्मिक ऊर्जा वा शक्ति धेरै बाक्लो भएको हुन्छ। तिनीहरूको पूजा गर्नाले त्यो शक्ति साधकमा प्रवाहित हुन थाल्दछ। जसले गर्दा साधकको मानसिक अवस्थामा परिवर्तन आउँछ र यो नयाँ ऊर्जा ग्रहण

गर्नाले उसले धेरै शान्ति प्राप्त भएको अनुभव गर्दछ। गुरुको अलौकिक सामर्थ्य ज्यादै विलक्षण हुन्छ। उनको स्मरण मात्र गर्दा पनि साधकमा ज्ञानको धारा स्वतः प्रकट हुन थाल्दछ।

**संसारवृक्षमारूढाः पतन्ति नरकार्णवे।**
**यस्तानुद्धरते सर्वान् तस्मैश्रीगुरवे नमः ॥४१॥**

सांसारिक रूखमा चढेका मनुष्यहरू नरकरूपी समुद्रमा खस्दछन्। तिनीहरू सबैको उद्धार गरिदिने गुरुलाई नमस्कार छ। ॥४१॥

संसार र परमात्मालाई प्राप्त गर्ने दुइटा मार्ग छन्। जुन मार्ग अवलम्बन गर्दा संसार प्राप्त हुन्छ, त्यसबाट हिँड्दा परमात्मालाई प्राप्त गर्न सकिँदैन। संसारमा व्यक्ति, धन, यश, मान, मर्यादा, प्रतिष्ठा प्राप्त गर्ने प्रयास हुन्छ। यिनका लागि असत्य, छल-कपट, अनेकौँ प्रपञ्च, चोरी, हत्या, अपहरणलगायत अनेकौँ दुष्ट कर्महरूको सहारा लिनु पर्ने हुन्छ। यी सबैका प्रभावले मनुष्यमा भोगहरू प्राप्तिको कामना, वासना, इच्छा जस्ता विकार उत्पन्न हुन्छन्। यो सबैको कारण उसमा भएको अहङ्कार हो। जो यसरी संसारमा लिप्त रहन्छ, त्यो नरकरूपी समुद्रमा खस्दछ। यी सबैबाट मुक्त हुने अभिलाषा लिएको साधकले गुरुको शरणमा पर्नुपर्छ। गुरुले उसको जीवनमा परिवर्तन ल्याइदिएर उसलाई परमात्मा प्राप्तिको मार्गमा लगाइदिन्छन्। जसले गर्दा उसको यो सांसारिक समुद्रबाट उद्धार हुन्छ। गुरुबाहेक अन्य कसैले पनि उसको उद्धार गर्न सक्तैन। यसप्रकारका गुरुलाई नमस्कार छ।

**एक एव परो बन्धुर्विषमे समुपस्थिते।**
**गुरुः सकलधर्मात्मा तस्मै श्रीगुरवे नमः ॥४२॥**

जब आफूलाई आपत्कालीन अवस्था आइलाग्छ, त्यस समयमा वा अवस्थामा गुरु मात्र आफ्नो परम मित्र हुन्छन् र उनी सबै धर्मको आत्मास्वरूपी छन्। यसप्रकारका गुरुलाई सादर नमस्कार छ। ॥४२॥

यो संसारमा आफ्ना भनिएका बन्धु-बान्धवले त्यस समयसम्म मात्र साथ दिन्छन्, जबसम्म उसबाट आफ्नो स्वार्थ सिद्ध भइरहन्छ, अन्यथा उनीहरूले त्यसलाई परित्याग गरिदिन्छन्। उदाहरणका लागि एउटा मनुष्यले चोरी गरेर, घुस

खाएर, अर्कालाई ढाँटेर आफ्नो परिवारको पालन–पोषण गर्दछ। तर त्यो जब कानुनको फन्दामा पर्दछ, त्यस समयमा यी कसैले उसलाई साथ दिँदैनन्। त्यसको सजाय उसले एक्लै भोग्नुपर्छ। धर्मको बाटामा लाग्ने उपदेश कसैले दिँदैन। यसकारण जब धर्म र संसारका बीचको बाटामा हिँड्दा यसप्रकारको विषम परिस्थिति आउँछ अर्थात् कुनलाई परित्याग गर्ने र कुनलाई ग्रहण गर्ने भन्ने द्विविधा उत्पन्न हुन्छ; त्यस समयमा गुरुले मात्र वास्तविक बाटो देखाउँछन् अथवा उनले मात्र उसलाई धर्मको बाटो देखाइदिन्छन्, जसका आधारमा ऊ यो सांसारिक समुद्रबाट सधैँका लागि मुक्त हुन सक्तछ। यसैले उनी मात्र आफ्नो वास्तविक बान्धव वा मित्र हुन्। किनकि गुरुले नै धर्म के हो र संसार के हो भन्ने विषयमा यथार्थ रूपमा बताइदिन्छन्, जो आफैँ सबै धर्महरूका आत्मस्वरूप हुन्। किनकि उनलाई धर्म नै जीवनको आधारशिला हो, यो संसार धर्मका आधारमा अडिएको छ भन्ने पूर्ण ज्ञान हुन्छ। यसप्रकारका गुरुलाई सादर नमस्कार छ।

**भवारण्यप्रविष्टस्य दिङ्मोभ्रान्तचेतसः।**
**येन सन्दर्शितः पन्थाः तस्मै श्रीगुरवे नमः ॥४३॥**

> यो संसाररूपी जङ्गलमा प्रवेश गरिसकेपछि द्विविधाको अवस्थामा अर्थात् कुनै बाटो नदेखिएको स्थितिमा चित्त भ्रमित हुन्छ। त्यस समयमा बाटो देखाइदिने ती गुरुलाई सादर प्रणाम छ। ॥४३॥

यो संसार एउटा यस्तो भयानक जङ्गल हो, जसले यसमा प्रवेश गर्दछ, त्यसले आफ्नो कल्याणको बाटो देख्न सक्तैन। उसले जे प्राप्त गर्ने अभिलाषा राख्दछ, त्यो प्राप्त गर्न सक्तैन तथा जे प्राप्त गर्न चाहँदैन, त्यो प्राप्त हुन्छ। किनकि रोग, शोक, घृणा, वैमनस्यता, ईर्ष्या, राग, झगडा, द्वेष, हिंसा, प्रतिक्रिया, प्रतिशोध, दमनलगायतका विकारहरूले परिपूर्ण भएको यो संसारले कसैलाई पनि सुख र शान्ति दिँदैन। यसमा प्रवेश गर्नेले कहीँ पनि आनन्दको अनुभूति गर्न सक्तैन। ऊ द्विविधापूर्ण अवस्थामा घुमिरहेको हुन्छ। उसले यसबाट बाहिर निस्कने बाटो भेट्न सक्तैन। उसको चित्त भ्रमित भइरहन्छ। यस्तो अवस्थामा उसलाई कुनै सद्गुरुले मात्र उचित बाटो देखाउन सक्तछन्। जसका आधारमा उसले परमशान्ति र आनन्द प्राप्त गर्दछ। यो आत्मज्ञानको मार्ग हो, जसबाट परम आनन्द प्राप्त हुन्छ। यो मार्गका विषयमा गुरुले मात्र बताउन सक्तछन्। यसप्रकारका गुरुलाई सादर नमस्कार छ।

**तापत्रयाग्नितप्तानां अशान्तप्राणीनां भुवि।**
**गुरुरेव परा गङ्गा तस्मै श्रीगुरुवे नमः ॥४४॥**

यो संसारमा तीन किसिमका ताप अथवा राप वा आँच अर्थात् आध्यात्मिक, आधिदैविक र आधिभौतिकरूपी अग्निद्वारा जलेका कारणले ज्यादै अशान्त वा पीडित भएका प्राणीहरूका लागि गुरु मात्र सर्वोपरि गङ्गा हुन्। यसप्रकारका गुरुलाई सादर नमस्कार छ। ॥४४॥

यो संसारमा भएका सबै मनुष्यहरू शारीरिक, मानसिक र प्रारब्धअनुसार प्राप्त भएका कष्टहरूद्वारा पीडित छन्। उनीहरूलाई शान्ति दिने केही छैन। यस्ता मनुष्य शान्ति प्राप्त गर्ने अभिलाषा लिएर साधु–सन्तहरूको खोजीमा चारैतिर भौँतारिइरहेका हुन्छन्, जसबाट आफूलाई शान्ति प्राप्त हुन सकोस्। तर शान्ति प्राप्त गर्ने बाटो आत्मज्ञान मात्र हो, जसका विषयमा कुनै सद्‌गुरुले मात्र बताउन सक्तछन् तथा अन्य उपायबाट शान्ति प्राप्त हुन सक्तैन। यसैले गुरु मात्र उत्तम गङ्गा हुन्, जसले सांसारिक तापबाट पीडित भएको मनुष्यलाई शीतल प्रदान गर्दछन्। यसप्रकारका गुरुलाई सादर नमस्कार छ।

**सप्तसागरपर्यन्तं तीर्थस्नानफलं तु यत्।**
**गुरुपादपयोबिन्दोः सहस्रांशेन तत्फलम् ॥४५॥**

सात समुद्रलगायतका सबै तीर्थहरूमा स्नान गर्दा जे–जति फल प्राप्त हुन्छ। त्यो फल पनि गुरुका गोडा धोएको अमृतरूपी पानीको एक थोपाको हजारौं भागको एक भाग हो। ॥४५॥

प्राचीनकालदेखि तीर्थहरूको महत्त्व रहँदै आएको छ। यो मान्यता संसारका सबै धर्महरूमा छ। तीर्थ मनुष्यलाई पवित्र बनाउने स्थान हो। तीर्थस्नानलाई सबैभन्दा उत्तम मानिएको छ। यसैले मनुष्यहरूले हरिद्वार, प्रयाग, काशीलगायतमा गएर गङ्गामा स्नान गर्दछन्। समुद्रमा स्नान गर्नुलाई पवित्र मानिन्छ। तर संसारमा भएका सबै तीर्थमा स्नान गर्दा जुन फल प्राप्त हुन्छ; त्योभन्दा हजार गुना धेरै फल गुरुका गोडा धोएको पानीको एकथोपाबाट प्राप्त हुन्छ। यसको अर्थ के हो भने जसले गुरुको थोरै सेवा गर्दछ; उसलाई गुरुले थोरै उपदेश दिएर उसको जीवनमा परिवर्तन ल्याइदिन्छन्। जनकले जीवनभर पाउन नसकेको वस्तु

अष्टावक्रले एकक्षणमा दिएर उनलाई जीवन्मुक्त बनाइदिए। अर्जुनले जीवनमा प्राप्त गर्न नसकेको ज्ञान श्रीकृष्णले केही समयमा नै दिनुभयो। यो सबै गुरुको महिमा हो।

यसकारण गुरुबाट ज्ञान प्राप्त नभएसम्म तीर्थ, व्रत, कर्मकाण्ड, जप, तपस्यालगायतको फल प्राप्त हुन सक्तैन। यसैले गुरुबाट प्राप्त हुने ज्ञान महत्त्वपूर्ण छ।

**शिवे रुष्टे गुरुस्त्राता गुरौ रुष्टे न कश्चन।**
**लब्ध्वा कुलगुरुं सम्यग्गुरुमेव समाश्रयेत् ॥४६॥**

यदि भगवान् श्रीशिव रिसाउनुभयो भने आफ्नो गुरुले बचाउँछन्। तर गुरु रिसाए भने कसैले पनि बचाउन सक्तैन। यसैले गुरु प्राप्त गरिसकेपछि उनैका शरणमा बस्नुपर्छ। ॥४६॥

जसरी अविविधपूर्वक कुनै पनि उपासना, कर्मकाण्ड, व्रत, तीर्थ, योगलगायतका क्रिया गर्दा तथा अनेकौं देवी–देवताहरूको उपासना गर्दाका अवस्थामा यी देवी–देवता रिसाउँछन्, जसले गर्दा विपरीत फल प्राप्त हुन्छ। यसैगरी श्रीशिवको उपासना गर्दा गल्ती भएकाले श्रीशिव रिसाउनुभयो भने उहाँको रिसबाट गुरुले बचाउन सक्तछन्। तर गुरु नै रिसाए भने कसैले पनि बचाउन सक्तैन। यसैले सबै साधनाहरू गुरुको निर्देशनअनुसार वा प्रत्यक्ष निगरानीमा मात्र गरियो भने आफ्नो इच्छाअनुसारको फल प्राप्त हुन्छ। यसैले गुरुका शरणमा पर्नु नै मुक्ति प्राप्त गर्ने एकमात्र उपाय हो।

**गुकारं च गुणातीतं रुकारं रूपवर्जितम्।**
**गुणातीतमरूपं च यो दद्यात् स गुरुः स्मृतः ॥४७॥**

गुरु शब्दमा प्रयोग भएको **गु** अक्षरले गुणातीत अर्थात् गुणभन्दा यथार्थ रूपमा अलग भन्ने बुझाउँछ भने **रु** अक्षरले रूपरहित अवस्थालाई बुझाउँछ। जसले यी दुवै अवस्थामा पुऱ्याइदिन्छन्, तिनलाई **गुरु** भनिन्छ। ॥४७॥

यसैको पैंतीसौं श्लोकमा जो आफैँ गुणभन्दा अलग र स्वरूपविहीन हुन्छन्, तिनैलाई **गुरु** भनिन्छ भन्ने प्रसङ्ग आएको थियो। जो सत्त्व, रज र तमोगुणसम्पन्न छन्, ती सबै प्रकृतिका गुण हुन्। यिनै गुणहरू एकआपसमा समायोजित भएपछि

सृष्टि र शरीरको रचना हुन्छ; यसकारण यी सबै प्रकृतिकै हुन्। यिनीहरूमा त्यो चैतन्यस्वरूपी आत्मा मात्र गुणातीत वा गुणभन्दा अलग छ र त्यही स्वरूपविहीन पनि छ। यो देख्न सकिने सबै रूप प्रकृतिका हुन्। आत्मा, परब्रह्म, ईश्वर, चैतन्य भएकाले त्यसको कुनै स्वरूप वा आकार हुँदैन। आफूलाई प्रकृतिभन्दा यथार्थ रूपमा अलग रहेको त्यो चैतन्यस्वरूपी आत्मा सम्झनु नै गुणबाट अलग र स्वरूपविहीन हुनु हो। यसकारण जो आत्मज्ञानी गुणातीत र रूपविहीन हुन्छन्, उनैलाई **गुरु** भनिन्छ, अन्न कोही गुरु भन्न योग्य छैन।

यस श्लोकमा बताउन खोजिएको महत्त्वपूर्ण कुरा के हो भने ती गुरु यस्ता हुनुपर्छ, जसले साधकको हृदयमा ज्ञानको ज्योति बालिदिएर उसलाई गुणभन्दा अलग र रूपविहीन अवस्थाको अनुभव गराइदिन सकून्। जसले यसो गर्न सक्तैन, त्यो वास्तविक **गुरु** होइनन्। किनकि ज्ञानको उपदेश मात्र दिने गुरु नभएर ती शिक्षक वा आचार्य हुन सक्तछन्। अहिलेको परिस्थितिमा यस्ता कैयौँ आचार्य छन्। जसले हजारौं शिष्यहरूको समूह बनाएर उपदेश मात्र दिइरहन्छन्। तर एउटालाई पनि आत्मज्ञान दिनसकेका छैनन्। आरम्भमा उनीहरूको महत्त्वपूर्ण भूमिका रहन्छ; तर अन्तिम उपलब्धिको प्राप्ति कुनै ज्ञानी गुरुबाट मात्र हुन्छ; जो गुणातीत र रूपविहीन भइसकेका छन्। जसरी भगवान् श्रीकृष्णले अर्जुनको ज्ञान ज्योति बालिदिनुभएको थियो तथा अष्टावक्रले जनकको ज्ञान ज्योति बालिदिएका थिए। यसप्रकारका पुरुष मात्र **गुरु** भन्न योग्य हुन्छन्।

**अत्रिनेत्रः शिवः साक्षात् द्विबाहुश्च हरिः स्मृतः।**
**योऽचतुर्वदनो ब्रह्मा श्रीगुरुः कथितः प्रिये ॥४८॥**

हे प्रेयसी! गुरु नै तीन आँखारहित अर्थात् दुइटा आँखा भएका साक्षात् शिव हुन्। उनै दुइटा हात भएका भगवान् श्रीविष्णु र एक मुखसम्पन्न ब्रह्मा हुन्। ॥४८॥

गुरुको महिमाका विषयमा वर्णन गर्ने सिलसिलामा भगवान् श्रीशिवले देवी पार्वतीसँग भन्नुभयो– हे प्यारी पार्वती! गुणभन्दा अलग र रूपविहीन भएकाले गुरु आफैँ ब्रह्मस्वरूप हुन्छन्। भगवान् श्रीशङ्करका जस्तैगरी उनका तीनोटा आँखा नभए तापनि उनी साक्षात् शिव हुन्। श्रीविष्णुका जस्तै चारोटा हात नभए तापनि उनी श्रीविष्णुस्वरूप हुन् तथा ब्रह्माका जस्ता चारोटा मुख नभए तापनि उनी आफैँ ब्रह्मा हुन्। उनमा र शिव, विष्णु तथा ब्रह्मामा कुनै भेद छैन। यसैले उनी हामी जस्तैगरी पूजा गर्न योग्य छन् भन्ने सम्झिएर उनका शरणमा पर्नुपर्छ।

**देवकिन्नरगन्धर्वाः पितृयक्षास्तु तुम्बुरुः ।**
**मुनयोऽपि न जानन्ति गुरुशुश्रुषणे विधिम् ॥४९॥**

देवता, किन्नर, गन्धर्व, पितृ, यक्ष, तुम्बरुलगायत मुनिहरूलाई पनि गुरको सेवा गर्ने विधिको ज्ञान छैन। ॥४९॥

भगवान् श्रीशिवले देवी पार्वतीलाई बताउनुभएअनुसार देवता, किन्नर, गन्धर्व, यक्ष, पितृ, तुम्बरुलगायत मुनिहरूलाई पनि गुरुको सेवा गर्ने विधिको ज्ञान नभएकाले उनीहरूले पूर्णत्व पाउन सकेका छैनन्। किनकि गुरुको सेवामा आफ्नो अहङ्कार, मन, बुद्धि, चित्त, अस्तित्वलगायत ज्ञान समर्पण गर्न आवश्यक हुन्छ। आफ्नो अस्तित्वलाई गुरुको अस्तित्वमा विलीन गराइदिनुलाई नै समर्पण भनिन्छ। यसप्रकारको समर्पण भाव उत्पन्न भएपछि गुरुमा भएको ऊर्जाको प्रवाह स्वतःसिद्ध रूपमा साधकमा प्रवाहित हुन थाल्दछ। जसका माध्यमद्वारा शिष्यको ज्ञान ज्योति बल्न थाल्दछ। यो ज्ञान ज्योति सबैमा रहेको भए तापनि त्यो निदाएको छ, जसलाई कुनै ज्ञानी गुरुले मात्र बाल्न सक्तछन्। यसप्रकारको समर्पण गर्नका लागि शिष्यले कठिन परीक्षा उत्तीर्ण गर्नु पर्छ। यो परीक्षा उसको योग्यता परीक्षण गर्ने आधार हो। यसमा सफल भएपछि ऊ ज्ञान प्राप्त गर्न योग्य पात्र हुन्छ। यो विधिका विषयमा देवताहरूले पनि जान्न सकेका छैनन् । त्यसैले उनीहरूलाई परमपद प्राप्त हुन सकेको छैन।

**तार्किकाश्छान्दसाश्चैव देवज्ञाः कर्मठाः प्रिये।**
**लौकिकास्ते न जानन्ति गुरुतत्त्वं निराकुलम् ॥५०॥**

तार्किक, वैदिक, ज्योतिषी, कर्मकाण्डीलगायत लौकिक मनुष्यहरूले पवित्र गुरुतत्त्वका विषयमा जान्न सक्तैनन्। ॥५०॥

भगवान् श्रीशिव देवी पार्वतीसँग भन्नुहुन्छ– हे प्रेयसी! यो गुरुतत्त्व साक्षात् ब्रह्मस्वरूप छ। जीवको शरीरमा जुन आत्मतत्त्व छ, त्यही गुरुको स्वरूप हो। जसले आत्मज्ञान प्राप्त गरिसकेका छन्, तिनै गुरु हुन्, अन्य कोही गुरु हुन सक्तैनन्। यसैले यो आत्मा मात्र गुरु हो। जसलाई तर्क र वेदको अध्ययनद्वारा जान्न सकिँदैन। यो बुद्धिभन्दा धेरै टाढा रहेको छ। जसका विषयमा आफ्नो अनुभवका आधारमा मात्र जान्न सकिन्छ। ज्योतिषीले पनि यसलाई जान्न सक्तैनन्; किनकि ज्योतिषी आत्मज्ञानको आधार वा कारण नभएर अपरा विद्या हो। यसैगरी कर्मकाण्ड पनि यसलाई जान्ने उपाय वा साधन होइन। यसकारण यी कुनै पनि ज्ञान प्राप्तिको साधन

हुन सक्तैनन्। ज्ञान सर्वश्रेष्ठ छ, जसका विषयमा जान्ने कुनै साधन छैन तथा सांसारिक मनुष्यले पनि यसका बारेमा जान्दैनन्। किनकि उनीहरूले धनको सङ्ग्रह र त्यसको रक्षा गर्दै आफ्नो जीवन बिताइरहेका हुन्छन्। यो गुरुतत्त्व ज्यादै निर्मल भएकाले पवित्र चित्त भएको मनुष्यले मात्र यसका बारेमा जान्न सक्तछ तथा जसले यो गुरुतत्त्वको ज्ञान हासिल गरेको छ, त्यही वास्तविक गुरु हो।

**महाहङ्कारगर्वेण तपोविद्याबलेन च ।**
**भ्रमन्त्येतस्मिन् संसारे घटीयन्त्रं तथा पुनः ॥५१॥**

तपस्या र विद्याको बलका आधारमा तथा ज्यादै अहङ्कारका कारणले गर्दा यो जीव संसारमा घडी जस्तैगरी पटक–पटक घुमिरहन्छ। ॥५१॥

आत्मतत्त्व मात्र वास्तविक गुरु हो। जसका विषयमा यथार्थ रूपमा ज्ञान हासिल गरिसकेपछि मनुष्य यो सांसारिक समुद्रबाट सधैँका लागि मुक्त हुन सक्तछ तथा उसको जीवन–मृत्युको चक्रसँग सम्बन्धविच्छेद हुन्छ। तर अज्ञानी जीव यो तत्त्वका विषयमा अनविज्ञ रहेको हुन्छ तथा उसले यसलाई तपस्या र विद्याका माध्यमद्वारा प्राप्त गर्ने प्रयास गर्दछ; यो कहिल्यै सम्भव हुन सक्तैन। त्यसपछि ऊ मै सबै हुँ, ईश्वर र आत्मा नाम भएको कुनै वस्तु छैन भन्ने ज्यादै अहङ्कारको भोजन बन्दछ। यसप्रकारको अज्ञानी र अविवेकी मनुष्य वा जीव यो जन्म र मृत्युको चक्रबाट मुक्त हुन सक्तैन। ऊ घडीको सुई जस्तै गरी त्यो चक्रको तल–माथि घुमिरहन्छ। यसैले आत्मज्ञान मात्र मुक्ति प्राप्त गर्ने साधन हो।

**यज्ञिनोऽपि न मुक्ताः स्युः न मुक्ताः योगिनस्तथा ।**
**तापसा अपि नो मुक्ता गुरुतत्त्वात्पराङ्मुखा ॥५२॥**

यदि गुरुतत्त्वबाट विमुख भयो भने यज्ञ गराउने ऋत्विकले मुक्ति प्राप्त गर्न सक्तैन, योगी मुक्त हुन सक्तैन र तपस्वी पनि मुक्त हुन सक्तैन। ॥५२॥

यो आत्मतत्त्व मात्र मुक्ति प्राप्त गर्ने साधन हो, जसका विषयमा गुरुको उपदेशद्वारा मात्र जान्न सकिन्छ। यसको अनुभव कुनै सद्गुरुले मात्र गराउन सक्तछन्। यसका विषयमा शास्त्र वा अन्य किसिमबाट जान्न सकिँदैन। जसले गुरुबाट विमुख भएर अविधिपूर्वक यज्ञलगायतका कर्म गर्दछ, योगको साधना गर्दछ तथा कठिन तपस्या गर्दछ भने त्यसले आफ्नो शरीरलाई दुःख मात्र दिएको हुन्छ।

किनकि यी क्रियाहरूका माध्यमद्वारा मुक्ति प्राप्त हुन सक्तैन। मुक्तिको कारकतत्त्व शरीर नभएर मन हो, जसबाट मुक्त हुनु नै वास्तविक मुक्ति हो। श्रुतिका अनुसार यो मन नै बन्धन र मुक्तिको कारण हो। पतञ्जलिका अनुसार जबसम्म चित्तका वृत्तिहरूलाई रोक्न सकिँदैन, त्यस समयसम्म आत्मज्ञान प्राप्त गर्न सम्भव छैन। आत्मज्ञान प्राप्त हुनु नै योग हो। यसको विधिका विषयमा गुरुले मात्र यथार्थ रूपमा बताउन सक्तछन्। यसैले गुरुबाट विमुख भएर गरिएको कुनै पनि साधना मुक्तिको साधन हुन सक्तैन।

**न मुक्तास्तु गन्धर्वाः पितृयक्षास्तु चारणाः।**
**ऋषयः सिद्धदेवाद्याः गुरुसेवापराङ्गमुखा ॥५३॥**

यदि गुरुको सेवा गरेनन् भने गन्धर्व, पितृ, यक्ष, चारण,
ऋषि, सिद्ध र देवता पनि मुक्त हुन सक्तैनन्। ॥५३॥

जुनसुकै किसिमको साधना भए तापनि जहाँ त्यसको सीमा सकिन्छ, त्यही साधक रोकिन्छ। यी गन्धर्व, पितृ, यक्ष, चारण, ऋषि, सिद्ध र देवता पनि विभिन्न लोकहरूमा बस्दछन्, जुन अलग–अलग योनिहरू हुन्। यी योनि कर्मको फलअनुसार प्राप्त हुन्छन् तथा कर्मफल सकिएपछि यिनीहरूले फेरि मृत्युलोकमा आउनुपर्छ। यिनीहरू सबैमा परमात्मालाई प्राप्त गर्ने अभिलाषा रहेको हुन्छ; तर प्राप्त गर्न सक्तैनन्। यी सबै सगुणस्वरूपमा रहेका हुन्छन्। परब्रह्मको निर्गुण अवस्थालाई यिनीहरूले प्राप्त गर्न सक्तैनन्। यिनीहरू सबैले परमात्माको अधीनमा रहेर आआफ्नो कार्य गर्दछन्। यिनीहरूले पनि परब्रह्मको निर्गुण, निकार, गुणविहीन र रूपविहीन अवस्था प्राप्त गर्नका लागि अनिवार्य रूपमा गुरुको सेवा गर्नै पर्छ। त्यसपछि मात्र मुक्ति पाउँछन्। मुक्ति प्राप्त गर्ने रहस्यका विषयमा सद्गुरुले मात्र विस्तारपूर्वक बताउन सक्तछन्। यसकारण साधकले अनिवार्य रूपमा गुरुको सेवा गर्नु पर्छ।

सतीशिरेमणि माताश्री स्व. चोलकुमारी तथा साहित्यशिरोमणि पिताश्री स्व. लोकमणि दाहालको मध्यम सुपुत्र खाँदबारी नगरपालिका–९ माथिल्लो पाङ्ठा सङ्खुवासभा जिल्ला निवासी नारायण शर्माद्वारा परब्रह्म परमात्माको असीम अनुकम्पा, अभिप्रेरणा र अमोघ आशीर्वादबाट सरल नेपाली भाषामा अनूदित लोकमणि टीकासहितको गुरुगीताको
पहिलो अध्याय पूर्ण भयो ॥१॥



**ब्रह्मानन्दं परमसुखदं केवलं ज्ञानमूर्तिं**
**द्वन्द्वातीतं गगनसदृशं तत्त्वस्यादिलक्ष्यम्।**
**एकं नित्यं विमलमचलं सर्वधीसाक्षिभूतम्**
**भावातीतं त्रिगुणरहितं सद्गुरुं तं नमामि ॥१॥**

जुन परब्रह्म परमात्मा आनन्दस्वरूप, परमसुखदायक, ज्ञानस्वरूप, द्वन्द्व अर्थात् विकाररहित, आकाश जस्तै सूक्ष्म, सबैतिर परिपूर्ण, तत्त्वमसिलगायतका महावाक्यहरूको लाक्षणिक अर्थ, एकमात्र, नित्य, मलरहित, अचल, सबै किसिमका बुद्धिहरूको साक्षी, भावनाभन्दा टाढा, सत्त्व, रज र तमलगायतका तीनोटै गुणरहित हुनुहुन्छ; यसप्रकारका सद्गुरुलाई म सादर नमस्कार गर्दछु। ॥१॥

यो समग्र सृष्टिमा जड र चेतन दुइटा तत्त्व विद्यमान भएको स्पष्ट रूपमा देख्न पाइन्छ। यिनीहरूमध्ये पृथ्वी, जल, अग्नि, वायु र आकाश जड तत्त्व हुन् भने वनस्पति, जीव–जन्तु, पशु–पक्षी तथा मनुष्य चेतन तत्त्व हुन्। अज्ञानका कारणले गर्दा जड र चेतनमा भेद भएको अनुभव हुन्छ। यथार्थमा यो जड पनि त्यो एकमात्र चेतन तत्त्वको बाक्लोस्वरूप हो, जसमा चेतन तत्त्व सषुप्तावस्थामा रहन्छ। जब यो जाग्दछ, त्यसपछि जड पनि चेतन हुन्छ वा चेतन सुषुप्तावस्थामा हुँदा चेतन पनि जड हुन्छ। यी दुइटै कुनै एउटा परमशक्तिका दुइटा रूप मात्र हुन् अन्यथा तात्त्विक दृष्टिमा दुवैमा कुनै भेद छैन। परब्रह्म परमात्मा सृष्टिको मूल शक्ति हुनुहुन्छ। जसबाट जड र चेतन नाम भएका दुइटा शक्ति प्रकट हुन्छन्, जसको समायोजनबाट सृष्टिको रचना हुन्छ। यो सृष्टिको मूल तत्त्व परब्रह्म परमात्मा सानोभन्दा पनि सानो हुनुहुन्छ, जसलाई देख्न सकिँदैन र उहाँ बताउन नसकिने अवस्थामा रहनुभएको छ। जब उहाँका यी दुइटा शक्ति व्यक्त हुन्छन्, त्यसपछि सृष्टि रचनाको कार्य आरम्भ हुन्छ।

यो श्लोकमा परब्रह्म परमात्मा कस्तो हुनुहुन्छ भन्ने विषयमा वर्णन गरिएको छ। उहाँ आनन्दस्वरूप, परमसुखदायक, ज्ञानस्वरूप तथा ज्ञानको आधार चेतन

शक्ति हुनुहुन्छ। जडमा ज्ञानको अभाव हुन्छ। उहाँ पूर्ण रूपमा विकाररहित हुनुहुन्छ। किनकि उहाँमा सुख–दुःख, जाडो–गर्मीलगायतको कुनै असर पर्दैन। उहाँ आकाश जस्तै सबैतिर व्याप्त र पवित्र हुनुहुन्छ। सृष्टिको प्रत्येक कणमा उहाँ विद्यमान रहनुभएको छ। जसलाई **तत्त्वमसि** अर्थात् **त्यो तिमी नै हौ** भन्नेलगायतका महावाक्यहरूद्वारा लक्षित गरिन्छ। आत्मज्ञान प्राप्त गर्ने अवस्थामा गुरुले शिष्यलाई यो महावाक्यद्वारा जुन एकमात्र चेतन तत्त्व छ, त्यो ब्रह्म तिमी नै हौ भन्ने निश्चय गराउँछन्। आफूलाई शरीर, मन, बुद्धि भएको स्वीकार गर्नु अज्ञान हो, जुन जड प्रकृतिबाट बनेको हो। तिमी जड नभएर त्यो चेतन तत्त्व हौ, जुन परब्रह्म हुनुहुन्छ तथा तिमी र उहाँमा कुनै भिन्नता छैन। यो महावाक्यका माध्यमद्वारा साधकले आफैँ ब्रह्मस्वरूप भएको अनुभव गर्दछ। यो समग्र सृष्टिमा परब्रह्मबाहेक अर्को कुनै तत्त्व छैन। उहाँ नित्य, सनातन र सधैँ रहने हुनुहुन्छ। उहाँको जन्म–मृत्यु हुँदैन तथा आदि, मध्य र अन्त छैन एवं उहाँ क्षर हुनुहुन्छ। उहाँमा कुनै किसिमको परिवर्तन आउँदैन। उहाँ विकाररहित हुनुहुन्छ, उहाँ स्थिर हुनुहुन्छ, उहाँ मनुष्यको बुद्धिको साक्षी हुनुहुन्छ। उहाँ आफैँले कुनै क्रिया नगर्नु भए तापनि सबै क्रियाहरू उहाँकै कारणबाट हुन्छन्। किनकि उहाँका विभिन्न शक्तिरूपी कारणले क्रिया गर्दछन्। उहाँ मनुष्यहरूको भावनाभन्दा धेरै टाढा हुनुहुन्छ। भावना प्राकृतिक गुणहरूका अनुसार उत्पन्न हुन्छ। उहाँको यो प्रकृति मात्र तीन गुणसम्पन्न छ, जसलाई सत्त्व, रज र तमोगुण भनिन्छ। यो समग्र सृष्टि यी तीन गुणहरूको विस्तारित रूप हो। तर परब्रह्म सबै हुनुहुन्छ।

जुन साधकलाई आत्मज्ञान प्राप्त भइसकेको छ। जसले गुरुको वचनका आधारमा परब्रह्मको अनुभव गरिसकेको छ। त्यसले आफूलाई यो जड प्रकृतिभन्दा अलग चेतन तत्त्व भएको स्वीकार गर्दै **म नै ब्रह्म हुँ** भन्दछ। उसैले मात्र मै सर्वव्यापी हुँ, सबैतिर मेरै अस्तित्व रहेको छ, म सृष्टिको कण–कणमा व्याप्त छु, यो समग्र सृष्टि मेरै स्वरूप हो भन्न सक्तछ।

जसलाई यसरी ब्रह्मको अनुभव हुन्छ, त्यो ब्रह्मस्वरूप हुन्छ **ब्रह्मविदं ब्रह्मैव भवति**। यसप्रकारका व्यक्ति मात्र सद्‌गुरु हुन सक्तछन्। यस्ता सद्‌गुरुलाई मेरो सादर नमस्कार छ।

**गुरुपदिष्टमार्गेण मनः शुद्धिं तु कारयेत्।**
**अनित्यं खण्डयेत्सर्वं यत्किंचिदात्मगोचरम्॥२॥**

गुरुद्वारा उपदेश गरिएको मार्ग अवलम्बन गरेर मन शुद्ध बनाउनुपर्छ। आफ्ना इन्द्रियहरूले जे-जति अनित्य वस्तुलाई आफ्नो विषयवासना बनाउँछन्, तिनीहरूलाई यथार्थ रूपमा परित्याग गर्नुपर्छ। ॥२॥

जुन सद्गुरु आफैँ परब्रह्मस्वरूप भएका छन्, उनले उपदेश दिएको मार्गमा लागेर सबैभन्दा पहिले आफ्नो मनलाई शुद्ध बनाउनुपर्छ। किनकि यो मन नै संसार हो र मनबाट मुक्त हुनु नै वास्तविक मुक्ति हो। मन पूर्वजन्महरूका संस्कारहरूद्वारा बनेको हुन्छ तथा संसारमा त्यसैको अनुसार क्रिया गर्दछ। त्यो चेतन आत्माका बारेमा यथार्थ रूपमा अनभिज्ञ रहन्छ। त्यसलाई सत्य र असत्यको ज्ञान हुँदैन। यसैले त्यसले सत् र असत्मा कुनै भेदभाव राख्दैन। त्यसलाई नित्य र अनित्यको ज्ञान हुँदैन। त्यो स्वार्थी हुन्छ। त्यसले आफ्नो स्वार्थका बारेमा मात्र चिन्तन गरिरहेको हुन्छ। आफ्नो स्वार्थ पूर्ण गर्नका लागि त्यो जुनसुकै सीमासम्म पनि जान सक्तछ। मन ज्यादै चञ्चल छ अर्थात् यो बाँदरभन्दा पनि चकचके स्वभाव भएको हुन्छ। यसैले यो कहिल्यै एक ठाउँमा स्थिर भएर बस्दैन। यसले अनेकौँ किसिमका कल्पना गरिरहन्छ। यसका हजारौँ वृत्तिहरू हुन्छन्, जसलाई रोकेर कुनै एकमा मात्र एकाग्र गर्नु वा गराउनु साधना हो तथा त्यसलाई रोकेपछि मात्र आत्माको अनुभूति हुन्छ। जसले मनको इच्छाअनुसारको व्यवहार गर्दछ; त्यसले कहिल्यै आत्माको अनुभव गर्न सक्तैन।

यो मनकै कारणले गर्दा मनुष्यमा ईर्ष्या, द्वेष, घृणा, वैमनस्यता, क्रोध, लोभ, मोहलगायतका अनेकौँ अवगुण उत्पन्न हुन्छन्, जुन अशुद्ध र विकारसम्पन्न मनका लक्षण हुन्। यिनीहरूका कारणले मनुष्य कैयौँ किसिमका शारीरिक र मानसिक रोगहरूबाट धेरै पीडित हुन्छ। संसारमा सबै प्रकारका विकृतिहरूको आदिकारण मन नै हो।

जब कुनै सद्गुरुको सङ्गत हुन्छ। त्यस समयमा उनले सबैभन्दा पहिले यो मनलाई शुद्ध बनाउने उपाय बताउँछन्, जसको प्रभावले यो सत्मार्गमा लाग्दछ। यसका लागि गुरुले देखाएको बाटामा अनिवार्य रूपमा हिँड्नुपर्छ। जसका प्रभावले चित्त शुद्ध भएर उसमा सत्य र असत्यको विवेक जाग्दछ। मनुष्यका इन्द्रियहरूले जुन विषयहरूलाई ग्रहण गर्दछन्, ती सबै अनित्य र विनाशशील छन्। यसप्रकारको

विवेकसम्पन्न बुद्धिका माध्यमद्वारा ऊ यी अनित्य वस्तुहरू परित्याग गरेर नित्य वस्तु आत्मालाई प्राप्त गर्ने अभिलाषा गर्न थाल्दछ। यो सबै काम कुनै सद्‌गुरुले देखाएको मार्गमा हिँडेपछि मात्र सम्भव हुन्छ र यहीँबाट उसको ज्ञान प्राप्त गर्ने मार्ग आरम्भ हुन्छ। चित्त शुद्ध नभएसम्म कुनै गुरुले उच्च ज्ञान दिँदैनन्। किनकि विषले भरिएको घडामा हालिएको अमृत पनि विष नै हुन्छ। यदि विकृत मनमा उच्च ज्ञान आयो भने त्यसले यसको दुरुपयोग मात्र गर्दछ। यसैले गुरुले सावधान हुनुपर्छ।

**किमत्र बहुनोक्तेन शास्त्रकोटिशतैरपि।**
**दुर्लभा चित्तविश्रान्तिः बिना गुरुकृपां पराम् ॥३॥**

यहाँ अर्थात् अहिले धेरै बताइरहनुको कुनै अर्थ छैन। किनकि सद्‌गुरुबाट उपदेश नपाएसम्म अथवा उनको कृपा प्राप्त नभएसम्म करोडौं शास्त्रहरूको अध्ययन गरे तापनि चित्त शान्त हुन सक्तैन। ॥३॥

चित्त स्वाभाविक रूपमा घुमिरहेको हुन्छ। किनकि यसलाई कामना र वासनाहरूले निरन्तर रूपमा घुमाइरहेका हुन्छन्। यसैले यो सधैँ बाँदर जस्तैगरी यता–उता घुमिरहेको हुन्छ। तर जब यो यसप्रकारको घुमाइबाट थकित हुन्छ; त्यसपछि कतै शान्तिपूर्वक बस्न चाहन्छ। जब उसले यो घुमाइमा संसारमा कहीँ पनि शान्ति नभएको अनुभव गर्दछ र उसलाई धन, स्त्री, परिवार, भोगहरू, शरीर, मनलगायतमा शान्ति नभएको अनुभूति हुन्छ। त्यसपछि त्यो शान्तिको खोजीमा लाग्दछ र यस सिलसिलामा उसले अनेकौं उपाय प्रयोगमा ल्याउँछ। जब शास्त्रहरूको अध्ययन गर्दा पनि शान्ति पाउन सक्तैन, त्यसपछि ऊ सद्‌गुरुका शरणमा पर्दछ। ती गुरुले उसलाई आत्मशान्तिको बाटो देखाइदिन्छन्। आफ्नै आत्मामा अवस्थित नभएसम्म कसैले पनि शान्ति प्राप्त गर्न सक्तैन। यो रहस्यका विषयमा गुरुले बताइदिएपछि मात्र उसले परमशान्तिको अनुभव गर्दछ। किनकि यो संसारमा अन्य कुनै विधिबाट शान्ति पाउन सकिँदैन। यसकारण मुक्ति नै परमशान्ति हो। मुक्तिका विषयमा प्रकाश पार्ने सिलसिलामा अष्टावक्रले राजा जनकसँग भनेका छन्– हे जनक! यदि तिमी मुक्ति प्राप्त गर्न चाहन्छौ भने विषयवासनालाई विष सम्भिएर परित्याग गर्दै क्षमा, सरलता, दया, सन्तोष र सत्यलाई अमृत सम्भिँदै व्यवहारमा लागू गर।

**करुणाखड्गपातेन छित्त्वा पाशाष्टकं शिशोः ।**
**सम्यगानन्दजनकः सद्गुरुः सोऽभिधीयते ॥४॥**

करुणारूपी तरवारले शिष्यका आठोटा पाशा अर्थात् संशय, दया, भय, सङ्कोच, निन्दा, प्रतिष्ठा, कुलको अभिमान र सम्पत्तिलाई काटेर निर्मल आनन्द दिनेलाई सद्गुरु भनिन्छ। ॥४॥

मनुष्य अनेकौँ प्रकारका बन्धनमा बाँधिएको हुन्छ। जबसम्म ऊ यी बन्धनहरूबाट मुक्त हुन सक्तैन, त्यस समयसम्म उसले शान्ति प्राप्त गर्न सक्तैन। यो बन्धन पनि काल्पनिक हो। तर आसक्ति र मोहका वशमा परेकाले यो यिनीहरूबाट आफैँ बाँधिएको हो। यो बन्धनभित्र संशय, दया, भय, सङ्कोच, निन्दा, प्रतिष्ठा, आफ्नो कुलको अभिमान र सम्पत्तिलगायत आठोटा पर्दछन्। मनुष्यले यिनलाई त्याग्न नचाहनु वा नसक्नु नै उसको बन्धन हो। यिनीहरूले मनुष्यलाई बाँधेको नभए तापनि मनुष्य अज्ञानवश आफैँ तिनीहरूबाट बाँधिएको हुन्छ। जबसम्म सद्गुरुका कृपाले ऊ अज्ञानबाट मुक्त हुन सक्तैन, त्यस समयसम्म उसले परमशान्ति प्राप्त गर्न सक्तैन। यसप्रकारका गुरुले शिष्यलाई आफ्ना करुणारूपी तरवारले उसका सबै किसिमका बन्धनहरूलाई काटिदिएर उसलाई परमशान्तिको अनुभव गराइदिन्छन्। यस्ता व्यक्तिलाई मात्र **सद्गुरु** भनिन्छ। यसपछि शिष्यले परम आनन्द प्राप्त गर्दछ।

मनुष्यको सबैभन्दा ठूलो बन्धन उसमा भएको शरीरको अभिमान हो। किनकि उसले आफूलाई शरीर मात्र सम्झिएको हुन्छ। उसलाई आफ्नो चेतना शक्ति अर्थात् आत्माको ज्ञान हुँदैन। यो शरीरप्रतिका अभिमान हटाउने एकमात्र उपाय **बोध** अर्थात् ज्ञान हो। आफू आत्मस्वरूप भएको ज्ञान भएपछि मनुष्य सबै बन्धनबाट मुक्त भएर आफ्नो आत्मस्वरूपमा अवस्थित हुन्छ। त्यसपछि उसले निर्मल आनन्द प्राप्त गर्दछ। जसले यो अवस्थामा पुऱ्याउँछन्, तिनैलाई **सद्गुरु** भनिन्छ।

**एवं श्रुत्वा महादेवी गुरुनिन्दां करोति यः ।**
**स याति नरकान् घोरान् यावच्चन्द्रदिवाकरो ॥५॥**

यो सबै सुनेपछि पनि जुन मनुष्यले गुरुको निन्दा गर्दछ। त्यो मनुष्य जबसम्म सूर्य र चन्द्रमा अस्तित्व रहन्छन्; त्यस समयसम्म नरकमा पर्दछ। ॥५॥

सद्गुरुको महिमा अतुलनीय छ। यसप्रकारको महिमाको विषयमा सुनिसकेपछि पनि जसले यस्ता सद्गुरुको निन्ता गर्दछ; त्यो महान् पाप कर्म गर्ने

लामो समयसम्म नरकमा पर्दछ र उसले यो लोक र परलोक कहीँ पनि शान्ति पाउन सक्तैन। त्यो उपकार गर्नेको बिगार गर्ने व्यक्ति सबैतिर निन्दनीय हुन्छ।

**यावत्कल्पान्तको देहस्तावद्देवि गुरुं स्मरेत्।**
**गुरुलोपो न कर्तव्यः स्वच्छन्दो यदि वा भवेत् ॥६॥**

हे देवी! शरीर कल्पको अन्त्यसम्म रहे तापनि त्यस समयसम्म गुरुको स्मरण गर्नुपर्छ र आत्माको ज्ञान प्राप्त भइसकेपछि पनि शिष्यले गुरुको शरणमा परिरहनुपर्छ। ॥६॥

भगवान् श्रीशिव देवी पार्वतीसँग भन्नुहुन्छ– हे देवी! जुन गुरुका कृपाले शिष्यलाई आत्माको ज्ञान अर्थात् आफ्नो यथार्थ स्वरूपको ज्ञान भएको छ र जसका कृपाले ऊ सांसारिक समुद्रबाट सधैँका लागि पार भएको छ। त्यो शिष्यको शरीर कल्पको अन्त्यसम्म रहे तापनि उसले यसप्रकारका गुरुलाई सधैँ सम्झनुपर्छ। कैयौँ ज्ञानी गुरुका अनुसार आत्मा मात्र वास्तविक गुरु हो। यसैले आत्माको ज्ञान प्राप्त भएपछि सांसारिक गुरुलाई पनि त्यागिदिनुपर्छ। त्यसो नगरेका अवस्थामा उनी पनि बन्धनको कारण बन्दछन्। त्यसपछि ध्यान र समाधि पनि त्याग्नुपर्छ। ती पनि बन्धन स्वरूप नै हुन्। तर आत्माको ज्ञान यो ज्ञानको पहिलो अवस्था हो। किनकि यसपछि साधक मुक्त भए तापनि ब्रह्मस्वरूप हुँदैन। उसले यसभन्दा अगाडिको बाटो निश्चय गर्नुपर्छ। जसका लागि फेरि गुरुको आवश्यकता पर्दछ। यदि फेरि गुरुका शरण परेन भने ऊ आत्माको ज्ञानमै सीमित हुन्छ। किनकि उसलाई यसभन्दा अगाडिको बाटोको ज्ञान हुँदैन, जुन ब्रह्मज्ञानी गुरुले मात्र देखाउन सक्तछन्। यसकारण जबसम्म साधकले शान्त अवस्था प्राप्त गर्दैन, त्यस समयसम्म उसले अद्वैत अवस्था प्राप्त गर्दैन। यसैले उसले आफ्नो गुरुलाई सम्झिरहनुपर्छ र उनका शरणमा परिरहनुपर्छ। अन्यथा उसलाई अगाडिको बाटो निश्चय गर्न कठिन हुन्छ। जुन साधकले आफ्नै सामर्थ्यमा यो बाटो निश्चय गर्ने प्रयास गर्दछ, त्यो उसको दुःसाहस मात्र हुन्छ। त्यसले आफ्नो यात्रा त्यहीँ रोक्दछ। यो परम उपलब्धि होइन।

**हुङ्कारेण न वक्तव्यं प्राज्ञशिष्यैः कदाचन।**
**गुरोरग्रे न वक्तव्यमसत्यं तु कदाचन ॥७॥**

ज्ञानी शिष्यले गुरुका अगाडि मैले यसो गरेँ, त्यसो गरेँ भनेर घमण्ड तथा अभिमान गर्नु हुँदैन र कहिल्यै पनि असत्य बोल्नु हुँदैन। ॥७॥

शिष्यले कुनै पनि गुरुका अगाडि मर्यादा र अनुशासनको पालना गर्नुपर्छ। यसैगरी गुरुका अगाडि बोल्न र उनको भनाइमा टिप्पणी गर्नु हुँदैन। उनको भनाइमा आफ्नो मान्यता राख्न पनि उचित हुँदैन। उनलाई कुनै किसिमको सुझाव पनि दिन हुँदैन। किनकि यो अशिष्टताको परिचायक हो। यदि उनको भनाइमा कुनै द्विविधा भए अथवा त्यो बुझ्न सकिएन भने प्रश्न सोध्न सकिन्छ। जसरी अर्जुनले भगवान् श्रीकृष्णसँग पटक-पटक प्रश्न गरेकाले भगवान् श्रीकृष्णले समग्र व्याख्या गर्न सक्नुभयो। शिष्यमा ज्ञान प्राप्त गर्ने जिज्ञासा उत्पन्न भएको देख्दा गुरु आनन्दित हुन्छन् र आफूमा भएको समग्र ज्ञान उसलाई दिन पाउँदा प्रसन्न हुन्छन्।

**गुरुं त्वंकृत्य हुङ्कृत्य गुरुसान्निध्यभाषणः।**
**अरण्ये निर्जले देशे सम्भवेद् ब्रह्मराक्षसः ॥८॥**

जसले गुरुका अगाडि घमण्डपूर्ण शब्द बोल्दछ अथवा गुरुलाई तँ भनेर सम्बोधन गर्दछ; त्यो मनुष्यविहीन मरुभूमिमा ब्रह्मराक्षस हुन्छ।

जस्तासुकै भए तापनि गुरु ज्ञानदाता हुन्। उनले शिष्यलाई यो लोक र परलोक सपार्ने ज्ञान दिन्छन्। यसैले शिष्यका लागि उनी भगवद्स्वरूप हुन्छन्। यसकारण गुरुको महिमाको अवमूल्यन गर्नु हुँदैन। आफ्नो ज्ञान, बुद्धि, भावना, विचार आदिको सङ्कीर्ण तराजुमा त्यसलाई तौलने प्रयास गर्नु हुँदैन। गुरुको शरीर मनुष्यको जस्तै देखिए तापनि उनको आत्मरूपी चेतना पूर्ण रूपमा जाग्रतावस्थामा रहन्छ। शरीरका आधारमा त सबै मनुष्य समान देखिए तापनि मानसिक आधारमा सबै अलग-अलग हुन्छन् तथा आत्मासँगको सम्बन्धका आधारमा अझ धेरै भिन्नता रहेको हुन्छ। यो आत्मासँगको सम्बन्धका आधारमा नै मूर्ख र ज्ञानीको भेद छुट्टिन्छ। यसकारण अष्टावक्रले ठूलाठूला विद्वान्हरूलाई सार्कीहरूको अथवा छालाका आधारमा मूल्याङ्कन गर्नेको संज्ञा दिँदै भनेका छन्- यिनीहरू मेरो छाला देखेर हाँसिरहेका छन्, जसले गर्दा यी छालाकै पारखी हुन् तथा छालाको राम्रो पारखी सार्की मात्र हुन्छ र ज्ञानीले ज्ञानलाई देख्छ। यिनीहरूले ममा भएको ज्ञानलाई देख्न सकेका छैनन्। यसैले यी ज्ञानी हुन सक्तैनन्। यसप्रकारका व्यक्तिहरूलाई यो चोटसहितको प्रहार हो, जसले कसैको शरीरको बनावट, उसको वेशभूषा, उसको रहन-सहनको तरिकाका आधारमा यो कस्तो व्यक्ति हो भन्ने ऊप्रतिको धारणा बनाउँछन्।

भगवान् श्रीशिव भन्नुहुन्छ– जुन शिष्यले गुरुलाई पनि सामान्य शरीरधारी मनुष्य सम्झिएर उनका अगाडि आत्माको प्रशंसा गर्दछ तथा घमण्डसम्पन्न वचन बोल्दछ, आफ्नो विद्वत्ता देखाउने चाहना गर्दै म यस्तो र उस्तो हुँ भन्दै अहङ्कारसम्पन्न वचन बोल्दछ अथवा गुरुलाई तँ भनेर सम्बोधन गर्दछ, त्यसले पाप कर्म गर्दछ। त्यो प्रेत योनिमा रहेर कुनै मनुष्यविहीन मरुभूमिमा ब्रह्मराक्षस भएर बस्दछ। यो अपराधको सजाय उसले त्यहीँ भोग्नुपर्छ। गुरुको शरीर नभएर ज्ञान महत्त्वपूर्ण हुन्छ। राजा जनकले बाह्र वर्षका अष्टावक्रको शिष्य बनेर ज्ञान प्राप्त गरेका थिए। यसैले गुरु जस्तासुकै भए तापनि उनका अगाडि विनयशील हुनुपर्छ।

**अद्वैतं भावयेन्नित्यं सर्वावस्थासु सर्वदा।**
**कदाचिदपि नो कुर्यादद्वैतं गुरुसन्निधौ ॥९॥**

सधैँ र सबै अवस्थाहरूमा अद्वैतको भावना राख्नुपर्दछ। तर गुरुसँग कहिल्यै पनि अद्वैतको भावना राख्नु हुँदैन। ॥९॥

जीव र ब्रह्मको एकता भएको ज्ञान नै मुक्ति प्राप्तिको कारण हो। यो एकता अद्वैतको अवस्था हो। जब कुनै शिष्यले ज्ञान प्राप्त भएपछि अद्वैतको अवस्था प्राप्त गर्दछ, त्यसपछि उसलाई समग्र सृष्टिमा ब्रह्मको मात्र अनुभूति हुन थाल्दछ। यसपछि उसले कसैमा भेदभाव राख्दैन। किनकि अज्ञानको अवस्थामा मात्र भिन्नता भएको अनुभूति हुन्छ। तर पनि गुरुमा अद्वैतको भावना राख्नु हुँदैन। किनकि गुरुलाई आफूभन्दा अलग सम्झिएर सधैँ उनको सम्मान गर्नुपर्छ।

**दृश्यविस्मृतिपर्यन्तं कुर्याद् गुरुपदार्चनम्।**
**तादृशस्यैव कैवल्यं न च तद्व्यतिरेकिणः ॥१०॥**

जुन समयसम्म यो देख्न सकिने संसारलाई बिर्सन सकिँदैन, त्यस समयसम्म गुरुका पवित्र चरणको पूजा–आराधना गरिरहनुपर्छ। यसो गर्नेले मात्र कैवल्य पद अर्थात् मोक्ष प्राप्त गर्न सकिन्छ। ॥१०॥

यो समग्र जगत् प्रकृति भएकाले मायास्वरूपी छ। यसको आफ्नो स्वतन्त्र अस्तित्व नभएर यो चेतन शक्तिको रूपमात्र हो। मनुष्यले अज्ञानका वशमा परेर यसलाई सत्य मान्नु भ्रममात्र हो। जब साधकलाई ज्ञान प्राप्त भइसकेपछि उत्तम चैतन्यको बोध हुन्छ। त्यसपछि उसलाई प्रकृति असत्य भएको तथा ब्रह्ममात्र सत्तत्त्व भएको ज्ञान हुन्छ। यससँगै उसलाई कैवल्य अवस्थामा चैतन्य तत्त्व मात्र

बाँकी रहने तथा प्रकृति त्यसैमा विलीन हुने ज्ञान हुन्छ। यो अवस्थामा उसले प्रकृतिलाई यथार्थ रूपमा बिर्सिदिन्छ। यही जीवको परम अवस्था हो। यसभन्दा पहिले प्रकृति र चैतन्य अलग–अलग भएको ज्ञान हुनु कैवल्य अर्थात् मुक्ति होइन। भगवान् श्रीशिव भन्नुहुन्छ– जबसम्म साधकले मुक्ति प्राप्त गर्दैन, त्यस समयसम्म उसले गुरुका चरणको पूजा–आराधना गरिरहनुपर्छ। किनकि गुरुको कृपाबाट मात्र मुक्ति प्राप्त हुन्छ। जसले यसका विपरीत लाग्दै यसभन्दा पहिले नै गुरुको शरण छाडिदिन्छ त्यो सिद्ध त हुन्छ; तर त्यसले मुक्ति पाउन सक्तैन।

**अपि सम्पूर्णतत्त्वज्ञो गुरुत्यागी भवेद्यदा।**
**भवत्येव हि तस्यान्तकाले विक्षेपमुत्कटम्॥११॥**

यदि समग्र तत्त्वको ज्ञाताले पनि गुरुलाई परित्याग गरिदियो भने मृत्युका समयमा उसमा ठूलो विचलनता वा विघ्नबाधा आउँछ। ॥१॥

जो सबै तत्त्वहरूको ज्ञाता छ। जसलाई मूल तत्त्व परब्रह्मको अनुभूति भइसकेको छ भने पनि दुवैमा द्वैतभाव रहिरहन्छ। आफूलाई मात्र ब्रह्मस्वरूप मान्नाले जुन भाव रहन्छ, त्यो ब्रह्मभन्दा भिन्न हुन्छ, जुन अद्वैतको अवस्था होइन। अद्वैतमा आफूलाई यथार्थ रूपमा बिर्सिएको हुन्छ। त्यहाँ म र तिमीको भेद रहँदैन। किनकि अहङ्कारका कारणले यो भेदको अनुभूति हुन्छ। जुन अद्वैतको अवस्थामा मुख्य बाधक हुन्छ। जसले **अहं ब्रह्मास्मि** भन्दछन्, तिनीहरूमा पनि **म** र **ब्रह्म**मा द्वैतभाव रहेकाले उनीहरूले यसो भन्न सक्तछन्। यो अहङ्कारलाई परित्याग गरेपछि वा छाडेपछि **म** पनि छोडिन्छ, जसले गर्दा **म** भन्ने पनि रहँदैन। त्यसपछि उसले **म ब्रह्म** हुँ भन्दछ; यो अद्वैतको अवस्था हो। जसले यो अवस्था प्राप्त गर्नु भन्दा पहिले गुरुलाई त्याग्छ, त्यसमा मृत्युका समयमा द्वैतभावका कारणले विचलन उत्पन्न हुन्छ। जसका प्रभावले गर्दा उसले मुक्ति पाउन सक्तैन। उसले सिद्धका लोकमा निवास गर्छ अर्थात् ऊ सिद्धको लोकमा पुग्छ।

**गुरौ सति स्वयं देवी परेषां तु कदाचन।**
**उपदेशं न वै कुर्यात् तदा चेद्राक्षसो भवेत्॥१२॥**

हे देवी! गुरुका अगाडि आफूले कहिल्यै पनि कसैलाई उपदेश दिनु हुँदैन। किनकि यसरी उपदेश दिने ब्रह्मराक्षस हुन्छ। ॥१२॥

भगवान् श्रीशिव देवी पार्वतीसँग भन्नुहुन्छ– हे देवी! गुरु आफ्नो नजीकमा रहेका अवस्थामा अनिवार्य रूपमा केही सामान्य शिष्टाचारका नियमहरूको पालना गर्नुपर्छ। गुरु मात्र उपदेश कर्ता हुन्, यसैले उनी भएका अवस्थामा अथवा उनका अगाडि कहिल्यै पनि अर्कालाई उपदेश दिनु हुँदैन। किनकि गुरुभन्दा धेरै ज्ञाता बन्ने प्रयास गर्नु गुरुको अवहेलना गर्नु हो, जुन पाप कर्म हो। यदि कसैले प्रश्न सोध्यो वा कुनै जिज्ञासा राख्यो भने त्यसको जवाफ गुरुले दिऊन्, तर बीचमा आफूले जवाफ दिन कुनै पनि अवस्थामा उचित हुँदैन। यदि कुनै शिष्यले यसरी बीचैमा जवाफ दियो भने त्यो ब्रह्मराक्षस हुन्छ।

**न गुरोराश्रमे कुर्यात् दुष्पानं परिसर्पणम्।**
**दीक्षा व्याख्या प्रभुत्वादि गुरोराज्ञां न कारयेत् ॥१३॥**

गुरुको आश्रममा अभक्ष्य अर्थात् खान नहुने खानेकुरा खान र घुमफिर गर्न हुँदैन। दीक्षा दिने, व्याख्या गर्ने, आफ्नो प्रभुत्व देखाउने तथा गुरुलाई आज्ञा दिने कार्य गर्नु हुँदैन। ॥१३॥

जब कुनै शिष्यले आफूलाई पूर्ण रूपमा गुरुमा समर्पित गर्दछ भने त्यसले अनिवार्य रूपमा गुरुका आश्रमको मर्यादा तथा त्यसको शिष्टाचारको पालना गर्नुपर्छ। उसले त्यहाँ बसेर आफ्नो प्रभुत्व स्थापित गर्ने प्रयास गर्नु हुँदैन। गुरुको आश्रममा बसेर कुनै खान नहुने वस्तु खाने, जतासुकै घुमफिर गर्ने, अरूलाई दीक्षा दिने, गुरुको अनुमतिबिना आफैँ नै उपदेश दिने, आफ्नो प्रभुत्व देखाउने प्रयास गर्ने, गुरुलाई आज्ञा वा सल्लाह दिने, उनको व्यवस्थामा हस्तक्षेप गर्ने र आफ्नो इच्छाअनुसार व्यवहार गर्ने कार्यसमेत गर्न हुँदैन। आफूलाई गुरुभन्दा महत्त्वपूर्ण देखाउने दुःसाहस गर्नु हुँदैन। किनकि यस्तो कार्य गर्ने शिष्यले गुरुको कृपा प्राप्त गर्न सक्तैन।

**नोपाश्रमं च पर्यंकं न च पादप्रसारणम्।**
**नाङ्गभोगादिकं कुर्यान्न लीलामपरामपि ॥१४॥**

गुरुको आश्रममा आफ्नो छानो र खाट बनाउनु हुँदैन। गुरुका अगाडि गोडा पसार्ने, शारीरिक उपभोग गर्नेलगायत अन्य कुनै पनि लीलाहरू गर्नु हुँदैन। ॥१४॥

गुरु आश्रमको पहिलो शिक्षाअनुसार जीवनमा जे–जे अमर्यादित किसिमले चलिरहेको छ, त्यसलाई नियन्त्रण गर्दै आफ्ना सबै कार्यहरूलाई मर्यादित र

अनुशासित बनाउनुपर्छ। यसमा सबैभन्दा पहिले आफ्नो शरीर र मनलाई वशमा राख्न आवश्यक हुन्छ। किनकि यिनीहरूलाई वशमा नराखेसम्म साधना सफल हुन सक्तैन। गुरु आश्रममा बसेर यी नियमहरूको पालना गर्नु शिष्यको पहिलो परीक्षा हो। यो परीक्षामा उत्तीर्ण भएपछि गुरुले उसको योग्यता हेरेर मात्र अगाडिको उपदेश दिन्छन्। गुरुको आश्रममा आफ्ना लागि अलग घर बनाउनु हुँदैन। त्यो आश्रमभन्दा टाढै हुनुपर्छ। शिष्यले गुरुका अगाडि बस्दा गोडा पसार्नु हुँदैन तथा अभद्र व्यवहार देखाउन हुँदैन। यसैगरी शारीरिक भोग उपयोग गर्नु हुँदैन तथा कुनै पनि खानेकुरा खानु हुँदैन। यसरी नै कुनै किसिमको लीलालगायत केही पनि गर्नु हुँदैन। यी सबै क्रियाहरू नगरेपछि शरीर र मनलाई वशमा राख्न सहज हुन्छ। जुन साधनाका लागि पहिलो सिँढी हो।

**गुरुणां सदसद्वापि यदुक्तं तन्न लङ्घयेत्।**
**कुर्वन्नाज्ञां दिवारात्रौ दासवन्निवसेद् गुरौ ॥१५॥**

गुरुले बताएको कुरा सत्य वा असत्य जे भए तापनि त्यसको कहिल्यै अवज्ञा गर्नु हुँदैन। रात–दिन गुरुको आज्ञा पालना गर्दै सेवक जस्तै भएर सधैँ उनको नजिकमा बस्नुपर्छ। ॥१५॥

गुरुले बोलेको कुरा सत्य वा असत्य भएको निर्णय शिष्यले गर्नु हुँदैन। उसले गुरुको कुरा सहर्ष स्वीकार गर्नुपर्छ। गुरुका अगाडि सेवक जस्तै भएर रात–दिन उनको आज्ञा पालन गर्नुपर्छ। जसले यसो गर्दछ, त्यही गुरुबाट ज्ञान वा शिक्षा पाउन योग्य पात्र हुन्छ। उसलाई गुरुले जे दिन्छन्, त्यो प्रसादका रूपमा दिन्छन्, शिष्यले माग्दैमा दिँदैनन्। त्यो प्रसाद प्राप्त गर्नका लागि शिष्यले आफू त्यसका लागि योग्य भएको सिद्ध गर्न सक्नुपर्छ। जुन शिष्य आफ्नो ज्ञान लिएर गुरुको नजीकमा जान्छ, त्यो त्यहाँबाट खाली हात फर्कन्छ। किनकि खाली भएको घडा मात्र भर्न सकिन्छ। जुन पहिलेदेखि भरिएको छ, त्यसमा नयाँ केही थप्न सकिँदैन। यसैले अध्यात्मज्ञान प्राप्त गर्नका लागि त्यो शिष्यले आफूमा भएका सांसारिक मान्यताहरू त्याग्नुपर्छ, त्यसपछि मात्र गुरुले दिएको ज्ञान सार्थक हुन्छ।

**अदत्तं न गुरोर्द्रव्यमुपभुञ्जित कर्हिचित्।**
**दत्तं च रङ्कवद् ग्राह्यं प्राणोऽप्येतेन लभ्यते ॥१६॥**

आफ्ना गुरुले नदिएको द्रव्य अर्थात् वस्तुको उपयोग गर्नु हुँदैन। गुरुले दिएको वस्तु पनि गरीबले जस्तैगरी लिनुपर्छ। उनीबाट प्राण पनि प्राप्त हुन सक्छ। ॥१६॥

जब कुनै शिष्यले आफूलाई यथार्थ रूपमा गुरुका शरणमा समर्पित गरिदिन्छ; त्यसपछि उसको आफ्नो केही रहँदैन। कामनालगायत सबै समर्पित हुन्छन्। यस्तो अवस्थामा उसले आफ्नो गुरुको इच्छानुसारको कार्य मात्र गर्नुपर्छ। किनकि गुरुको इच्छा नै उसको इच्छा हुन्छ। यसैले गुरुबाट जे प्राप्त हुन्छ, त्यो मात्र उपयोग गर्नुपर्दछ र अन्य केही पनि ग्रहण गर्नु हुँदैन तथा यदि गुरुले कुनै वा केही द्रव्य, वस्त्रलगायत दिएमा त्यो गरीबले जस्तैगरी ग्रहण गर्नुपर्छ। त्यसमा असल–खराबको भेद राख्नु हुँदैन। त्यसलाई प्रसादका रूपमा सहर्ष स्वीकार गर्नुपर्छ। यसरी ग्रहण वा स्वीकार गर्नाले गुरुको प्राण शक्ति पनि उसमा प्रवाहित हुन सक्तछ। जहाँ खाल्डो परेको छ, त्यही पानी जम्दछ। यसरी विनम्रताका आधारमा गुरुको कृपा र उनको प्राण शक्ति प्राप्त हुन्छ भने अहङ्कारी व्यक्ति सधैँ खाली रहन्छ।

**पादुकासनशय्यादि गुरुणा यदभिष्टितम्।**
**नमस्कुर्वीत तत्सर्वं पादाभ्यां न स्पृशेत् क्वचित् ॥१७॥**

आफ्नो गुरुको प्रयोगमा आउने अर्थात् उनले प्रयोग गर्ने पादुका आसन, बिछ्यौनालगायतलाई विनयतापूर्वक नमस्कार गर्नुपर्छ तथा तिनीहरूलाई कुनै पनि अवस्थामा गोडाले छुनु हुँदैन। ॥१७॥

आफ्ना गुरुमा भक्तिभाव राख्न आवश्यक छ। यसका लागि साधक वा शिष्यको मनमा गुरुप्रति श्रद्धाभाव हुन जरुरी छ। आफ्ना गुरुले जुन वस्तु प्रयोग गर्दछन्, त्यसलाई पनि पवित्र सम्झिएर नमस्कार गर्नुपर्छ; जसमा पादुका, आसन, बिछ्यौनालगायत पर्दछन्। किनकि गुरुको रौँ–रौँमा चैतन्य शक्ति व्याप्त भएको हुन्छ; जसको प्रभाव उनले उपयोग गरेका वस्तुमा पनि पर्दछ। यसैले ती सबैलाई नमस्कार गर्नुपर्छ तथा तिनीहरूलाई गोडाले छुनु हुँदैन। यसरी गुरुमा भक्तिभाव राख्नाले शिष्यमा मानसिक परिवर्तन आउँछ। जसको प्रभावले उसको साधना सफल हुन्छ।

**गच्छतः पृष्ठतो गच्छेत् गुरुच्छायां न लङ्घयेत्।**
**नोल्बणं धारयेद्वेषं नालङ्कारांस्ततोल्बणाम् ॥१८॥**

आफ्ना गुरु हिँडिरहेका अवस्थामा उनको पछाडि हिँड्नुपर्दछ। किनकि उनको छायालाई पनि नाघ्नु हुँदैन। यसैगरी गुरुका अगाडि मूल्यवान् वेशभूषा तथा आभूषणलगायत लगाउनु हुँदैन। ॥१८॥

जुन शिष्य ज्ञान प्राप्त गर्ने अभिलाषा लिएर गुरुको आश्रममा बस्दछ, उसले पूर्ण रूपमा सामान्य वा सादा जीवन बिताउनुपर्दछ। त्यहाँ आफूलाई जीवननिर्वाह गर्न पुग्ने सामान मात्र राख्नुपर्छ र अनावश्यक सजावट गर्ने प्रयास गर्नु हुँदैन। यसैगरी आश्रममा बस्दाका अवस्थामा मूल्यवान् कपडा वा गरगहना लगाउनु हुँदैन। यसप्रकारको तडकभडक नीच व्यक्तिमा मात्र धेरै देखिन्छ, जसले आफ्नो मानसिक हीनता लुकाउनका लागि बाहिरी आडम्बर देखाउने प्रयास गर्दछ। किनकि मनुष्य मूल्यवान् वस्तुबाट नभएर ज्ञानबाट मात्र शोभयमान हुन सक्तछ। यसकारण ज्ञान प्राप्त गर्ने प्रयासमा एकाग्रतापूर्वक लागिरहनुपर्छ। यदि गुरु कहीँ जाँदै छन् भने उनको पछाडि मात्र हिँड्नुपर्छ, जसले गर्दा उनको छाया ननाघियोस्।

**गुरुनिन्दाकरं दृष्ट्वा धावयेदथ वासयेत्।**
**स्थानं वा तत्परित्याज्यं जिह्वाच्छेदाक्षमो यदि ॥१९॥**

गुरुको निन्दा गर्नेलाई देख्दाका अवस्थामा यदि त्यसको जिभ्रो काट्न सकिँदैन भने पनि त्यसलाई आफ्नो स्थानबाट भगाउनुपर्दछ। यदि ऊ त्यहीँ बस्यो भने आफूले त्यो स्थान छाड्नुपर्दछ। ॥१९॥

कसैको आलोचना गर्नु आफूमा भएको खराबी हो। जो आफैँ व्यक्तित्वविहीन हुन्छ, त्यसैले अर्काको निन्दा गरेर आफू उत्तम वा श्रेष्ठ भएको सिद्ध गर्ने प्रयास गर्दछ। किनकि नीच व्यक्तिले मात्र अर्काको निन्दा गर्दछ। जो आफैँ असल छैन, उसले अन्यलाई खराब बताउँदै आफूलाई श्रेष्ठ देखाउन चाहन्छ, जुन एक प्रकारको मानसिक रोग हो। बिरामी गिदी अथवा विकृत बुद्धि भएकाले मात्र अर्काको निन्दा गर्दा आनन्द प्राप्त भएको अनुभूति गर्दछ। किनकि अर्काको वा कसैको निन्दा गर्दा कहिल्यै श्रेष्ठता प्राप्त गर्न सकिँदैन। यस्तो अवस्थामा जुन गुरुले ज्ञान दिएका छन्, जसले उसको जीवन सर्वोत्कृष्ट बनाउने प्रयास गरेका छन्, ती गुरुको निन्दा गर्नुको कुनै अर्थ छैन। किनकि निन्दा गर्ने व्यक्तिले गुरुबाट ज्ञान प्राप्त गर्न सक्तैन। भगवान् श्रीशिव भन्नुहुन्छ– यदि कसैले तत्त्वदर्शी गुरुको निन्दा गरेको देखियो भने त्यसको जिभ्रो काटिदिनुपर्छ। यदि त्यसको जिभ्रो काट्न सकिएन भने त्यसलाई त्यहाँबाट हटाउनु वा भगाउनुपर्छ र यदि त्यो त्यहाँबाट गएन भने आफू त्यहाँबट हिँड्नुपर्छ। तर जस्तोसुकै अवस्थामा पनि गुरुको निन्दा गर्न वा सुन्न हुँदैन। किनकि निन्दा गर्दा वा सुन्दा आफ्नो मन विकृत हुन्छ। त्यसबाट कुनै उपलब्धि हुँदैन।

**मुनिभिः पन्नगैर्वापि सुरैर्वा शापितो यदि ।**
**कालमृत्युभयाद्वापि गुरुः सन्त्राति पार्वती ॥२०॥**

हे पार्वती! गुरुले आफ्नो शिष्यलाई मुनिहरू, सर्पहरू र देवताहरूको श्राप तथा मृत्युको भयबाट बचाउन सक्तछन् । ॥२०॥

ब्रह्मज्ञानी गुरुमा एउटा यस्तो अलौकिक शक्ति रहेको हुन्छ; जसका आधारमा उनले आफ्नो शिष्यको सबै किसिमका पीडा र श्रापबाट रक्षा गर्छन् । जुन शिष्यले आफूलाई यथार्थ रूपमा गुरुमा समर्पित गर्दछ । उसको सुख–दुःख, पीडा, श्रापलगायतको समग्र दायित्व गुरुमा निहित हुन्छ । उनले जस्तोसुकै अवस्थामा पनि आफ्नो शिष्यको रक्षा गर्दछन् । उसका शारीरिक, मानसिक र आत्मिक कष्टहरू गुरुले नै शान्त बनाइदिन्छन् । यदि शिष्यलाई कुनै कारणले मुनिहरू, सर्पहरू अथवा देवताहरूले श्राप दिए भने पनि गुरुले उसलाई श्रापबाट बचाइदिन्छन् र उसलाई मृत्युको भयबाट मुक्त गर्न सक्तछन् । अज्ञानी मृत्युदेखि धेरै डराउँछ । उसले आफ्नो अस्तित्व समाप्त हुन लागेको सम्भन्छ । उसमा भय उत्पन्न गराउने उसका कामना र वासनाहरू नै हुन् । उसको आसक्ति नै भयको मूलकारण हो । जो संसारमा धेरै आसक्त रहन्छ; त्यही मृत्यु हुने समयमा धेरै डराउँछ । किनकि ऊ संसारलाई छाड्न चाहँदैन । यस्तो समयमा गुरुबाट प्राप्तं भएको ज्ञानले मात्र यो भयबाट उसको रक्षा गर्छ । किनकि अज्ञानका कारणले भय उत्पन्न हुन्छ र ज्ञान प्राप्त भएपछि अज्ञान आफैँ हराउँछ । यथार्थलाई जान्नु ज्ञान भएकाले भय सधैँ काल्पनिक हुन्छ । यसकारण गुरुले ज्ञानका माध्यमद्वारा शिष्यलाई अनेकौँ किसिमका भयबाट मुक्त गराइदिन्छन् । सृष्टिको कार्य प्रणालीका विषयमा यथार्थ रूपमा जान्नु नै वास्तविक मुक्ति हो ।

**विजानन्ति महावाक्यं गुरोश्चरणसेवया ।**
**ते वै सन्न्यासिनः प्रोक्ता इतने वेषधारिणः ॥२१॥**

जसले गुरुका चरणको सेवा गरेर **तत्त्वमसि** महावाक्यको यथार्थ ज्ञान हासिल गर्दछ, त्यही वास्तविक सन्न्यासी हो, अन्य सबैले सन्न्यासीको वेशभूषा धारण गरेका मात्र हुन् । ॥२१॥

गुरु सेवाको अर्थ उनीद्वारा दिइएका उपदेशहरू वा ज्ञानलाई आत्मसात् गर्नु हो । यो ज्ञान श्रद्धा र भक्तिबाट मात्र प्राप्त हुन्छ । गीताका अनुसार श्रद्धावान्लाई मात्र ज्ञान प्राप्त हुन्छ । कसैलाई जबरजस्ती ज्ञान दिन सकिँदैन, त्यसलाई ग्रहण गर्नुपर्छ ।

त्यो ग्रहण गर्ने शक्ति श्रद्धा, भक्ति र सेवा गर्नाले मात्र प्राप्त हुन्छ। गुरुको प्रसन्नता र शिष्यको पात्रता नै ज्ञान प्राप्त गर्ने साधन हो। शिष्यको पात्रता अथवा योग्यता पूर्ण भएपछि मात्र गुरुले उसलाई **तत्त्वमसि** महावक्यद्वारा चम्किलो बनाउँछन्, जसको अर्थ हो तिमीभित्र जुन चेतनतत्त्व आत्मा छ, त्यही परमात्मा वा ब्रह्म हो। त्यही चेतन तत्त्व तिम्रो यथार्थ स्वरूप हो भने यो जड शरीर तिम्रो स्वरूप होइन। यसैले तिमी जड नभएर चेतन हौ, जुन स्वयं ब्रह्म हो र तिमी त्यही हौ। आफूलाई यो चेतन तत्त्वभन्दा अलग सम्झनु नै अज्ञान हो। यही ज्ञानद्वारा शिष्यका हृदयको गाँठो फुक्दछ, उसमा भएका सबै संशय नष्ट हुन्छन् तथा यही ज्ञानका माध्यमद्वारा ऊ सबै किसिमका कर्मरूपी बन्धनबाट मुक्त हुन्छ। ऊ यो अज्ञानरूपी निद्राबाट बिउँझिन्छ। जसबाट उसमा पूर्ण परिवर्तन आउँछ र ऊ नयाँ व्यक्ति बन्दछ। यही वास्तविक सन्न्यासी हुन्छ। ऊ कम, क्रोध, लोभ, मोह, आसक्ति, कामना, वासनालगायतबाट पूर्ण रूपमा मुक्त हुन्छ। यसपछि ऊ परम आनन्दमा अवस्थित हुन्छ। उसको वैराग्य वास्तविक वैराग्य हो तथा यही उसको मुक्तिको कारण हो। सन्न्यास लिइँदैन, ज्ञान प्राप्त भएपछि त्यो आफैँ हुन्छ । यो क्रियाको अङ्ग नभएर एउटा घटना हो, जुन गुरुको महावाक्यद्वारा घटेको हुन्छ। जसले गुरुबाट दीक्षा लिएर, गुरु मन्त्र लिएर तथा वेश बदलेर सन्न्यास लिन्छ, त्यो आरम्भ मात्र हो।

**नित्यं ब्रह्म निराकारं निर्गुणं बोधयेत् परम्।**
**भासयन् ब्रह्मभावं च दीपो दीपान्तरं यथा ॥२२॥**

गुरु ती हुन्, जसले नित्य, निर्गुण, निराकार परमब्रह्मको ज्ञान गराइदिन्छन्। जसरी एउटा दियोबाट अर्को दियो बल्दछ, त्यसैगरी शिष्यमा ब्रह्मभाव प्रकट गराइदिन्छन्। ॥२२॥

यो समग्र जड चेतनात्मक जगत्‌को मूलकारण वा आदिकारण एकमात्र परब्रह्म हुनुहुन्छ; तर उहाँ निराकार हुनुहुन्छ। जसको कुनै आकार छैन, यसैले उहाँलाई देख्न सकिँदैन। उहाँ तीनोटा गुणभन्दा अलग भए तापनि नित्य, सनातन र सर्वव्यापी हुनुहुन्छ। उहाँको अनुभूति भएपछि यो देख्न सकिने संसारको कुनै औचित्य वा अर्थ रहँदैन। यो सृष्टि उहाँको विभिन्न स्वरूप मात्र हो, जुन उहाँभन्दा अलग वा भिन्न छैन। अज्ञानका कारणले गर्दा मात्र भिन्नता भएको अनुभव हुन्छ। जब उहाँको ज्ञान हुन्छ अर्थात् उहाँलाई जानिन्छ, त्यसपछि सृष्टिमा सबैतिर एकत्व भएको अनुभूति हुन्छ। यसप्रकारको अनुभूति नै ज्ञान हो तथा भिन्नता रहेको देख्नु अज्ञान हो। जुन ब्रह्मको अनुभूति नभएसम्म रहिरहन्छ।

जसले यसप्रकारको अनुभूति गरिसकेका छन्, ती सद्‌गुरु हुन्। जसरी एउटा दियोले मात्र अर्को दियो सल्काउन सक्तछ; त्यसैगरी जसले ब्रह्मतत्त्वको ज्ञान हासिल गरिसकेको छ, त्यसैले अन्यलाई त्यसको ज्ञान गराउन सक्तछ। यसैले सद्‌गुरुले मात्र शिष्यमा ब्रह्मभाव उत्पन्न गराउन सक्तछन्।

**गुरूप्रसादतः स्वात्मन्यात्मारामनिरीक्षणात्।**
**समता मुक्तिमार्गेण स्वात्मज्ञानं प्रवर्तते ॥२३॥**

सद्‌गुरुको कृपाद्वारा शिष्यले आफैंभित्र आत्माको आनन्द प्राप्त गर्दै समता र मुक्तिका माध्यमद्वारा आत्मज्ञान प्राप्त गर्दछ। ॥२३॥

आनन्द अनुभूति गर्ने विषय हो। किनकि बाहिरी वस्तुले सुख–सुविधा दिन त सक्तछन्। तर मानसिक शान्ति प्राप्त हुन सक्तैन। किनकि शान्ति प्राप्त गर्नका लागि मनका वृत्तिहरूलाई रोक्नुपर्दछ। जसका लागि धैर्य, सन्तोष, रिस त्याग, निन्दा वा स्तुतिमा सम रहनु, लोभ, मोह र आसक्ति त्यागलगायतका अनेकौं साधन प्रयोगमा ल्याउनुपर्दछ; तर मनुष्यले यो सबै गर्न सक्तैन। त्यसपछि उसले योगको साधना, ध्यानलगायतका साधन प्रयोगमा ल्याउँछ, जसबाट उसलाई केही शान्ति प्राप्त हुन्छ। तर उसले यसबाट पनि आनन्द प्राप्त गर्न सक्तैन। उसले आफूलाई थोरै राहत मिलेको अनुभव अवश्य गर्दछ; तर यो पनि आनन्द प्राप्ति होइन। आनन्द आफूभित्रको अनुभूति हो, जुन आत्माको ज्ञान भएपछि मात्र प्राप्त हुन्छ। शरीरको आनन्दमय कोशमा प्रवेश गर्दा पनि आनन्दको अनुभूति त हुन सक्तछ। तर त्यो आनन्दमय कोश पनि शरीरकै एउटा भाग हो। किनकि अन्नमय, प्राणमय, मनोमय र विज्ञानमय कोशभन्दा माथि वा अगाडि आनन्दमय कोश रहेको छ, जुन शरीरकै एउटा कोश हो। यसैले यसको अनुभूति हुनु आत्माको ज्ञान होइन। किनकि आत्माको ज्ञान त्यो भन्दा पनि माथिको अवस्था हो, जुन गुरुको कृपाबाट मात्र प्राप्त हुन्छ; अन्यथा भ्रमको वशमा परेर साधक यो आनन्दको अनुभूतिलाई नै आत्माको ज्ञान सम्झिएर त्यहीं रोकिन्छ। जब शिष्यलाई आत्माको आनन्दको अनुभूति हुन्छ, त्यसपछि उसले समता र मुक्तिको मार्ग अवलम्बन गर्दछ। यसप्रकारको समता उत्पन्न हुनु नै मुक्तिको पहिलो चरण हो। गीतामा यसैलाई योग भनिएको छ **समत्वं यो उच्यते**। यसपछि ती सद्‌गुरुले त्यो शिष्यलाई आत्माको ज्ञान गराउँछन्। त्यसपछि उसले पूर्णत्व प्राप्त भएको अनुभूति गर्दछ।

**स्फटिके स्फाटिकं रूपं दर्पणे दर्पणो यथा।**
**तथात्मनि चिदाकारमानन्दं सोऽहमित्युत ॥२४॥**

जसरी स्फटिक मणिमा स्फटिक मणि र ऐनामा ऐना देख्न सकिन्छ; त्यसैगरी आत्मामा जुन चैतन्य र आनन्दस्वरूप देखिन्छ त्यो **म नै हुँ**। ॥२४॥

जब साधकलाई आनन्दमय कोशको अनुभूति हुन्छ। त्यसपछि उसले परम आनन्द प्राप्त भएको अनुभूति गर्दछ। यसप्रकारको अनुभूति मनलाई मात्र हुन्छ। किनकि मन कहिल्यै नष्ट हुँदैन। त्यसैले आत्मा तथा परमात्माको अनुभूति गराउँछ। यो अवस्थामा पनि मन विद्यमान रहनु द्वैतको अवस्था हो। मनले अनुभव गर्दछ, जुन आत्मा होइन। जब गुरुको कृपाका प्रभावले मन शिथिल हुन थाल्दछ। त्यसपछि जीव परम चैतन्य आत्माका अगाडि यसरी प्रकट हुन्छ; जसरी स्फटिक मणिमा स्फटिक मणि तथा ऐनामा ऐना देख्न सकिन्छ; त्यसैगरी उसको चैतन्यस्वरूप आफैँ आनन्द स्वरूप भएर त्यो आत्मामा देखिन्छ। त्यसपछि दुवैमा कुनै भेद रहँदैन। त्यस समयमा साधकले जुन मेरो चैतन्य छ, त्यो आत्मस्वरूप छ र म पनि त्यही आत्मा हुँ भन्ने कुरा प्रत्यक्ष रूपमा जान्दछ। यसैलाई आत्माको अनुभूतिको अवस्था भनिन्छ। यस अवस्थामा पनि जीवलाई आत्माको अनुभूति त हुन्छ; तर **म** र आत्माको भेद पनि विद्यमान रहेको हुन्छ। जब यो **म** भाव आत्मामा विलीन हुन्छ; त्यसपछि म भन्ने भाव रहँदैन। यसैलाई जीवको परमगति भनिन्छ अर्थात् यही जीवको परमगति हो।

**अङ्गुष्ठमात्रं पुरुषं ध्यायेच्च चिन्मयं हृदि।**
**तत्र स्फुरति यो भावः शृणु तत्कथयामि ते ॥२५॥**

आफ्नै हृदयमा विद्यमान हातको बूढी औँला बराबरको चैतन्य पुरुषको ध्यान गर्नुपर्छ। म तिमीलाई त्यहाँ स्पष्ट हुने भावका विषयमा बताउँछु ध्यानपूर्वक सुन। ॥२५॥

आत्माको ज्ञान प्राप्त गर्ने साधन ध्यान मात्र हो तथा ध्यानको विधिका विषयमा विभिन्न शास्त्रहरूमा वर्णन गरिएको छ। जसमा ध्यानलाई नाभिमा केन्द्रित गर्नु, आज्ञाचक्रमा केन्द्रित गर्नु, हृदयमा केन्द्रित गर्नु, निर्विचारताको अभ्यास, योगनिद्राको अभ्यासलगायत पर्दछन्। तर यसमा भगवान् श्रीशिव हृदयमा भएको कमलको ध्यान गर्नुपर्ने कुरा बताइरहनुभएको छ। किनकि जीवात्माको शरीरमा जुन

तत्त्व छ, त्यसको निवासस्थान हृदयरूपी कमल हो। त्यो चैतन्य हातको बुढी औँला बराबरको छ। कठोपनिषद्लगायतका उपनिषद्हरूमा पनि जीवात्माको स्वरूप हातको बूढी औँला बराबर भएको मानिएको छ तथा त्यसको निवासस्थान हृदय बताइएको छ। भगवान् श्रीशिवले त्यसैको ध्यान गर्नु पर्ने बताइरहनुभएको हो। त्यो चैतन्य स्वरूप नै पुरुषको आत्मा हो। जसको ध्यान गर्नाले साधकको मनमा अनेकौँ भाव स्पष्ट वा उदय हुन्छन्। जसबाट यथार्थमा **म को हुँ** भन्ने ज्ञान हुन्छ।

**अजोऽहममरोऽहं च ह्यनादिनिधनोह्यहम्।**<br>
**अविकारश्चिदानन्दो ह्यणीयान् महतो महान् ॥२६॥**

म अजन्मा र अमर छु, मेरो आदि छैन, मेरो मृत्यु हुँदैन। म विकाररहित र परब्रह्म हुँ। म सानोभन्दा सानो र ठूलोभन्दा पनि ठूलो छु। ॥२६॥

गीता १५।१६ मा बताइएअनुसार यस संसारमा विनाशशील र अविनाशी दुई प्रकारका पुरुषहरू छन् र यिनीहरूमध्ये समग्र प्राणीहरू विनाशशील छन् तथा जीवात्मा अविनाशी छ।

परब्रह्म परमात्मा सबैतिर व्याप्त हुनुहुन्छ। उहाँ गुणविहीन, आकारविहीन र चिन्तन गर्न नसकिने हुनुहुन्छ। तर उहाँ मायाशक्ति अर्थात् प्रकृतिबाट ढाकिएपछि **पुरुष** बन्नु हुन्छ। यो मायाशक्तिबाट ढाकिएपछि परमात्मालाई पनि **पुरुष** भनिन्छ। उहाँ **परम पुरुष** हुनुहुन्छ। त्यही चैतन्यतत्त्व शरीरसँग आबद्ध भएपछि त्यसलाई पनि **पुरुष** भनिन्छ। त्यही **पुरुष** जीवात्मा हो, जुन अविनाशी छ। हाम्रो यो भौतिक शरीरलाई पनि **पुरुष** नै भनिन्छ, जुन विनाशशील छ। भगवान् श्रीशिवले त्यो जीवात्माको कुरा गरिरहनुभएको छ, जुन हाम्रो अविनाशी आत्मा हो।

यो आत्मतत्त्वका विषयमा गीतामा यसरी बताइएको छ। जस्तै– गीताको १०।१२ मा परमात्माले आफैँलाई जीवहरूको चेतना बताउनुभएको छ। यसैगरी १०।२० मा उहाँले जीवहरूको हृदयमा बसेको आत्मा म नै हुँ भन्नुभएको छ। यसरी नै १३।२२ मा जीवको शरीरमा अवस्थित आत्मालाई परमात्मा बताउनुभएको छ। यसैगरी १५।७ मा जीवको शरीरमा रहेको आत्मालाई आफ्नो सनातन अंश बताउनुभएको छ। यसबाट जीवात्मा परमात्माकै सनातन अंश भएको सिद्ध हुन्छ।

यो जीवात्मा परब्रह्म परमात्माको चेतनशक्तिको एउटा सनातन अंश हो, जुन उहाँभन्दा अलग छैन। किनकि त्यसमा परब्रह्म एउटाका सबै गुण विद्यमान

छन्। जुन साधकले हृदयमा विद्यमान जीवात्माको ध्यान गर्दछ; त्यसलाई आफू शरीर मात्र नभएर शुद्ध चैतन्यस्वरूप आत्मा भएको ज्ञान हुन्छ। यसपछि उसले आफू आत्मा भएकाले अजन्मा, अमर, आदि र अन्तविहीन, ब्रह्म जस्तै विकाररहित तथा परब्रह्मस्वरूप भएको अनुभूति गर्दछ। त्यो ध्यानको फल यही हो।

**अपूर्वमपरं नित्यं स्वयं ज्योतिर्निरामयम्।**
**विरजं परमाकाशं ध्रुवमानन्दमव्ययम् ॥२७॥**
**अगोचरं तथाऽगम्यं नामरूपविवर्जितम्।**
**निःशब्दं तु विजानीयात्स्वभावाद् ब्रह्म पार्वती ॥२८॥**

हे पार्वती! ब्रह्म स्वभावैले अपूर्व अर्थात् उहाँभन्दा पहिले कोही थिएन, अद्वितीय, नित्य, ज्योतिस्वरूप, निरोग, पवित्र, आकाशस्वरूप, अचल अर्थात् हलचलविहीन, आनन्दस्वरूप, अविनाशी, जान वा जान्न नसकिने, देख्न नसकिने, नाम र स्वरूपरहित तथा शब्दविहीन हुनुहुन्छ। ॥२७॥ ॥२८॥

यो समग्र सृष्टिको मूल तत्त्व एउटै छ, जसबाट यो जड र चेतनात्मक सृष्टिको विस्तार भएको छ। किनकि परब्रह्म नै सृष्टिका रूपमा अभिव्यक्त हुनुभएको छ। यसैले यो सृष्टि उहाँभन्दा अलग नभएर उहाँकै विभिन्न रूप मात्र हो। जसरी बाफ, कुइरो, बादल, पानी र हिउँ बाफकै विभिन्न रूप हुन्, जसरी समुद्र र त्यसको तरङ्ग अलग हुँदैन, जसरी यन्त्र र उपकरणहरूमा एउटै बिजुलीले काम गर्छ, त्यसैगरी परब्रह्म परमात्मा मात्र समग्र सृष्टिको आदिकारण हुनुहुन्छ। तर उहाँ कस्तो हुनुहुन्छ भन्ने विषयमा बताउने सिलसिलामा उहाँलाई अपूर्व अर्थात् पहिले नभएको भनिएको छ। किनकि उहाँभन्दा पहिले केही पनि थिएन। यसैले उहाँ मात्र हुनुहुन्छ। यो सृष्टि शून्यबाट उत्पन्न नभएर उहाँकै विभिन्न स्वरूप हो। उहाँ अद्वितीय, नित्य, सनातन, अजन्मा, अविनाशी, शाश्वततत्त्व, ज्योतिस्वरूप, पवित्र हुनुहुन्छ। उहाँ कुनै पदार्थ वा वस्तु जस्तो हुनुहुन्न अर्थात् उहाँको कुनै निश्चित शरीर छैन। उहाँ आकाश जस्तै सूक्ष्म तथा सबैतिर व्याप्त हुनुहुन्छ अर्थात् उहाँ नभएको कुनै स्थान छैन। आकाश जस्तैगरी उहाँको कुनै रूप, रङ्ग र आकार नभए तापनि उहाँको अस्तित्व छ। उहाँ अचल हुनुहुन्छ, जसको आश्रयमा यो समग्र सृष्टिचक्र चलिरहेको छ। किनकि यो सृष्टिको स्वतन्त्र अस्तित्व छैन। उहाँ आनन्दस्वरूप हुनुहुन्छ। आनन्द चेतनाकै गुण हो र जडमा आनन्दको अभाव हुन्छ। मनुष्यले जुन

आनन्दको अनुभूति गर्दछ; त्यो ब्रह्मको चेतनाशक्तिका कारणले भएको हो। यो जड प्रकृति विनाशशील छ। चेतनाशक्तिको कहिल्यै विनाश हुँदैन। उहाँ जन्म र मृत्युविहीन हुनुहुन्छ। उहाँ ज्यादै सूक्ष्म हुनुभएकाले उहाँसम्म जान र उहाँलाई जान्न नसकिने हुनुहुन्छ। किनकि उहाँलाई बुद्धि, तर्कलगायतका उपायहरूद्वारा जान्न सकिँदैन। उहाँ बुद्धिको क्षमताभन्दा धेरै टाढाको तत्त्व हुनुहुन्छ। उहाँलाई देख्न नसकिए तापनि उहाँ हुनुभएको अनुभूति हुन्छ। जो अव्यक्त छ, त्यसको कुनै नाम हुँदैन। किनकि व्यक्त भएपछि मात्र नामकरण हुन्छ। उहाँ आफैँ नभएर मायाशक्ति अर्थात् प्रकृतिका माध्यमद्वारा व्यक्त हुनुहुन्छ। यसैले सबै नाम र रूप प्रकृतिकै हुन्। उहाँलाई शब्दहरूका माध्यमद्वारा व्यक्त गर्न सकिँदैन। उहाँको कुनै ध्वनि पनि छैन, जसलाई कानद्वारा सुन्न सकियोस्। यो परब्रह्मको स्वभाव हो। मनुष्यका इन्द्रियहरूको शक्ति सीमित हुन्छ, जुन असीमितसम्म जान सक्तैनन्। यसैले उहाँलाई जान्ने उपाय वा साधन ध्यान मात्र हो। समाधि गर्दाका अवस्थामा मन र बुद्धिका सबै गतिविधिहरू रोकिएपछि परमात्माको अनुभूति हुन्छ। यो कुरा ज्ञानीहरू, ऋषिहरूले अनुभव गरेर बताएका हुन्। यसकारण यिनीहरूलाई नै प्रमाण मान्न सकिन्छ।

**यथा गन्धस्वभावत्वं कर्पूरकुसुमादिषु।**
**शीतोष्णत्वस्वभावत्वं तथा ब्रह्मणि शाश्वतम्॥२९॥**

जसरी कपूर, फूललगायतमा सुगन्ध, अग्निमा तातोपन, हिउँमा चिसोपन स्वाभाविक रूपमा रहन्छ; त्यसैगरी परब्रह्ममा शाश्वतता स्वतःसिद्ध रूपमा रहन्छ।॥२९॥

जसरी कपूर, फूललगायतमा सुगन्ध, चिनीमा मिठास वा गुलियोपन, अग्निमा तातोपन, हिउँमा चिसोपन स्वाभाविक रूपमा रहन्छ, जुन यिनीहरूको आफ्नो गुण हो। जसरी सबै किसिमका वस्तुहरूको परिचय तिनीहरूको स्वाभाविक गुणहरूका आधारमा हुन्छ तथा यसैबाट ती चिनिन्छन्। त्यसैगरी ब्रह्ममा भएको शाश्वतता नै उहाँको विशेषता हो। यदि उहाँको पनि जन्म-मृत्यु हुने, उहाँमा परिवर्तन आउने हुन्थ्यो भने उहाँलाई ब्रह्म भन्न सकिने थिएन र उहाँलाई सत्य भन्न पनि सकिने थिएन। उहाँलाई पनि प्रकृतिकै अंश मानिने थियो। यो शाश्वतताका कारणले नै उहाँलाई **ब्रह्म** र **सत्य** बताइएको हो।

**यथा निजस्वभावेन कुण्डलकटकादयः।**
**सुवर्णत्वेन तिष्ठन्ति तथाऽहं ब्रह्म शाश्वतम् ॥३०॥**

जसरी पाखुरा वा नारीको कडा अर्थात् बाला, कुण्डल–लगायतका गरगहना स्वभावैले सुन हुन्छन्, त्यसैगरी म स्वभावैले शाश्वत ब्रह्म हुँ। ॥३०॥

जसरी हातमा लगाउने बाला, कुण्डललगायतमा सुन नै मूलतत्त्व हुन्छ। किनकि बाला र कुण्डलको स्वरूप परिवर्तन हुन सक्तछ; तर सुन आफ्नै रूपमा रहन्छ। जसरी माटो र घडामा मूलतत्त्व माटै हुन्छ; त्यसैगरी आत्माको अनुभूति गर्दाका समयमा साधकलाई शरीर, मन, बुद्धिलगायत प्रकृतिको रचना भएको र जुन जड छ तथा म शुद्ध चैतन्यस्वरूप हुँ, जुन ब्रह्म हुनुहुन्छ भन्ने ज्ञान हुन्छ। यसैगरी उसलाई आफैँ ब्रह्म भएको र चैतन्य आफ्नो स्वभाव भएको अनुभूति हुन्छ।

**स्वयं तथाविधो भूत्वा स्थातव्यं यत्रकुत्रचित्।**
**कीटो भृङ्ग इव ध्यानात् यथा भवति तादृशः ॥३१॥**

आफैँ त्यस्तो भएर कुनै न कुनै स्थानमा रहनु। जसरी कीरा भमराको चिन्तन गर्दा–गर्दा भमरो हुन्छ; त्यसैगरी जीव ब्रह्मको धेरै समय ध्यान गरेपछि ब्रह्मस्वरूप हुन्छ। ॥३१॥

मनुष्यको समग्र व्यक्तित्व उसका विचारहरूकै परिणाम हो। किनकि विचारले नै मनुष्यलाई माथि पुऱ्याउँछ तथा त्यसैले तल झार्दछ। उच्च विचार भएकाले कहिल्यै नीच कार्य गर्दैन र नीच व्यक्तिले कहिल्यै उच्चता प्राप्त गर्न सक्तैन। मनोवैज्ञानिक सत्यताअनुसार जसले जस्तो सोच्दछ, त्यो त्यस्तै बन्दछ। यसमा मन धेरै शक्तिशाली हुन्छ। त्यसले जुन कार्य गर्ने निश्चय गर्दछ, त्यसका विचारहरूको सबै प्रवाह त्यतैतिर केन्द्रित हुन्छ। यसका प्रभावले त्यो त्यस्तै बन्दछ। यदि ऊ गुरुको आश्रममा बस्दछ भने उसले त्यहाँको नियम पालना गर्नुपर्छ। त्यस ठाउँमा बस्दा उसले आफ्ना पुराना विचारहरू परित्याग गर्नुपर्छ। जसले गर्दा उसलाई गुरुले दिएको ज्ञान प्राप्त हुन सकोस्। उसका विचारहरू र चिन्तनमा सूक्ष्मता आउँछ। त्यसले त्यहाँ सधैँ एकाग्रतापूर्वक परब्रह्मको चिन्तन गरिरहनुपर्छ। जसरी एउटा कीरो धेरै लामो समयसम्म भमराको चिन्तन गरेर भमरो बन्दछ; त्यसैगरी गुरुको आश्रममा बसेर सधैँ एकाग्रतापूर्वक ब्रह्मको चिन्तन गरेपछि जीव आफैँ ब्रह्म हुन्छ। यसैले मनुष्य विचारकै आधारमा उच्च हुन्छ।

**गुरोर्ध्यानेनैव नित्यं देही ब्रह्ममयो भवेत्।**
**स्थितश्च यत्रकुत्रापि मुक्तोऽसौ नात्र संशयः ॥३२॥**

निरन्तर रूपमा गुरुको ध्यान गर्नाले मात्र जीव ब्रह्ममय हुन्छ। यसपछि ऊ जुनसुकै स्थानमा भए तापनि मुक्त हुनेमा कुनै द्विविधा छैन। ॥३२॥

ब्रह्म निराकार अर्थात् आकारविहीन हुनुभएकाले उहाँमा ध्यान केन्द्रित गर्न असहज हुन्छ भने यस्तो अवस्थामा निरन्तर रूपमा गुरुकै ध्यान गर्नुपर्छ। किनकि ब्रह्मज्ञानी गुरु स्वयं ब्रह्मस्वरूप हुने भएकाले उनको निरन्तर रूपमा ध्यान गरिरहनाले पनि जीव ब्रह्ममय हुन्छ। त्यसपछि त्यो जुनसुकै स्थानमा बसको भए तापनि निश्चित रूपमा मुक्त हुन्छ। किनकि एक पटक ब्रह्मस्वरूप भएपछि, ऊ कुनै पनि विकार र बन्धनबाट प्रभावित हुँदैन। जबसम्म ब्रह्मलाई प्राप्त गर्न सकिँदैन, त्यस समयसम्म बाधाहरूबाट टाढा रहनका लागि कठिन नियम र संयम पालना गर्न आवश्यक हुन्छ। त्यसपछि सबै नियम, संयम, मर्यादा उसको स्वभाव बन्दछन्।

**ज्ञानं वैराग्यमैश्वर्यं यशः श्रीः समुदाहृतम्।**
**षड्गुणैश्वर्ययुक्तो हि भगवान् श्रीगुरुः प्रिये ॥३३॥**

हे प्रिये! भगवान्स्वरूप गुरु ज्ञान, वैराग्य, ऐश्वर्य, यश, लक्ष्मी र सुमधुर वचनलगायतका गुणले सम्पन्न हुन्छन्। ॥३३॥

भगवान् श्रीशिव देवी पार्वतीसँग भन्नुहुन्छ– हे देवी! गुरु स्वयं भगवान्–स्वरूप हुन्छन्। यसैले उनी भगवान्का सबै गुणले सम्पन्न हुन्छन्। उनी पनि भगवान् जस्तैगरी ज्ञान, वैराग्य, ऐश्वर्य, यश, श्री (लक्ष्मी) र सुमधुर वचनसम्पन्न हुने भएकाले उनलाई भगवान्कै स्वरूप मान्नुपर्छ।

**गुरुः शिवो गुरुर्देवो गुरुर्बन्धुः शरीरिणाम्।**
**गुरुरात्मा गुरुर्जीवो गुरोरन्यन्न विद्यते ॥३४॥**

मनुष्यहरूका लागि गुरु नै शिव, गुरु नै देवता, गुरु नै बन्धु–बान्धव, गुरु नै आत्मा र गुरु नै जीव हुन्। गुरुबाहेक अन्य केही छैन। ॥३४॥

यो देख्न सकिने समग्र जगत्को रचना जड प्रकृतिबाट भएको हो। मनुष्यको शरीर पनि पृथ्वी, जल, अग्नि, वायु, आकाशलगायतका भूतहरूबाट

बनेको हो। यसैगरी मन, बुद्धि, चित्त, अहङ्कार पनि जड प्रकृतिबाटै बनेका हुन्, जसले त्यो चैतन्य तत्त्व आत्माको शक्तिद्वारा सक्रिय भएर आआफ्नो गुणअनुसारको कार्य गर्दछन्। यसैले सबै क्रियाहरू प्रकृतिका गुणहरूअनुसार हुन्छन्। तर चैतन्य तत्त्व आत्मा यी सबैको कारण हो। यो आफैँले कुनै क्रिया नगरे तापनि सबै क्रियाहरूको कारकतत्त्व आत्मा नै हो। त्यसको सहयोग नपाएसम्म प्रकृतिले कुनै पनि कार्य गर्न सक्तैन।

मनुष्यले अज्ञानका वशमा परेर शरीरलाई मात्र सबै मानेकाले त्यसको रक्षामा एकाग्रतापूर्वक लागेर आत्मालाई बिर्सिरहेको हुन्छ। यसैले उसले अनेकौँ किसिमका दुःख भोगिरहेको हुन्छ। यो चैतन्य तत्त्व आत्माको ज्ञान प्राप्त भएपछि मनुष्य सबै प्रकारका दुःखहरूबाट पूर्ण रूपमा मुक्त हुन्छ। यो तत्त्वको ज्ञान गुरुबाहेक अन्य कसैले पनि दिन वा गराउन सक्तैन। यसैले गुरुलाई सामान्य मनुष्य नसम्झिँदै उनलाई साक्षात् शिव, देवता, बन्धु–बान्धव, सुहृदयी मित्र, कल्याणदायक मानेर अर्जुन भगवान् श्रीकृष्णका शरणमा परे जस्तैगरी गुरुका शरणमा पर्नुपर्छ। गुरुले मात्र आत्मज्ञानका माध्यमद्वारा मनुष्यलाई मुक्ति दिलाउन सक्तछन्। यसैले गुरुलाई आत्मस्वरूपी मान्नुपर्छ र अन्य सबैलाई परित्याग गर्नुपर्छ। भगवान् श्रीकृष्णले अर्जुनलाई अन्तिम उपदेश दिने सिलसिलामा गीताको १८।६६ मा भन्नुभएको छ– सबै धर्महरू परित्याग गरी समग्र कर्महरूप्रति सन्न्यास लिएर एउटै सर्वात्मा परमेश्वर म वासुदेवका शरणमा पर। म तिमीलाई सबै पापहरूबाट मुक्त गराइदिनेछु। तिमी कति पनि शोक नगर र दुःख पनि नमान।

**एकाकी निस्पृहः शान्तः चिन्तासूयादिवर्जितः।**
**बाल्यभावेन यो भाति ब्रह्मज्ञानी स उच्यते ॥३५॥**

जो एकान्त स्थानको बसाइ, कामनाविहीन, शान्त, चिन्तारहित, ईर्ष्यारहित र बालक जस्तैगरी बस्दछ, त्यसलाई ब्रह्मज्ञानी भनिन्छ। ॥३५॥

ब्रह्मज्ञानी र सामान्य व्यक्तिमा कुनै व्यवहारगत परिवर्तन हुँदैन। किनकि ब्रह्मज्ञानीले पनि सामान्य व्यक्तिहरूले जस्तै हिँड्डुल, खानपिन, कर्म, सुत्ने–उठ्ने, कुराकानी गर्ने गर्दछ। तर उसले यी सबै क्रियाहरू नाटकीय रूपमा गरिरहेको हुन्छ। किनकि ऊ यिनीहरूमा आसक्त हुँदैन, उसको कुनै कामना, सङ्कल्प, आग्रहलगायत केही हुँदैन। ऊ आत्मामा अवस्थित भएको हुन्छ। यसैले ऊ त्यसैको अनुशासनमा चल्दछ। उसले आत्मालाई नै आफ्नो स्वरूप मान्दछ। यसैले उसले कसैप्रति मोह

राख्दैन। ऊ एकान्तमा बस्न रुचाउँछ। जे प्राप्त हुन्छ, त्यसैमा सन्तोष गर्दछ तथा धेरै प्राप्तिको कामना गर्दैन र थोरै प्राप्त भएकोमा दुःखी हुँदैन। ऊ शान्त, चिन्तारहित, ईर्ष्यारहित र बालक जस्तै निर्दोष तथा विकाररहित रहन्छ। यी ब्रह्मज्ञानीका लक्षण हुन् तथा अन्य व्यक्तिले उसलाई सामान्य व्यक्ति सम्भिरहेका हुन्छन्। तर उसमा आन्तरिक परिवर्तन हुन्छ, जसले गर्दा ऊ सामान्यबाट असामान्य अर्थात् विशेष हुन्छ। उसका बाहिरी कार्यहरूका आधारमा उसलाई चिन्न सकिँदैन।

**न सुखं वेदशास्त्रेषु न सुखं मन्त्रयन्त्रके।**
**गुरोः प्रसादादन्यत्र सुखं नास्ति महीतले ॥३६॥**

वेदहरू, शास्त्रहरू, मन्त्र, यन्त्रबाट सुख प्राप्त हुन सक्तैन। किनकि यो पृथ्वी लोकमा गुरुको कृपारूपी प्रसादबाहेक अन्यत्र कहीँ पनि सुख छैन। ॥३६॥

वेद र शास्त्रहरूको अध्ययन गर्नाले सुख प्राप्त हुँदैन। यिनीहरूको अध्ययन गरेर विद्वान् हुन सकिन्छ। तर यिनीहरूबाट सत्यको ज्ञान हुन सक्तैन। किनकि सत्यको ज्ञान गुरुले मात्र गराउन सक्तछन्, जसले स्वयं जानेका छन् तथा सुख प्राप्त गर्ने एकमात्र उपाय सत्यको ज्ञान मात्र हो; जसबाट सबै किसिमका भ्रम नष्ट हुन्छन्। मन्त्रको जप तथा मन्त्रको पूजा गरिरहनाले पनि सुख प्राप्त हुन सक्तैन। केवल गुरुको प्रसादस्वरूप साधकलाई आत्माको ज्ञान हुन्छ; त्यसपछि उसलाई वास्तविक सुख प्राप्त हुन्छ तथा अन्य कुनै पनि विधि–विधान वा क्रियाद्वारा सुख प्राप्त हुन सक्तैन। यसैले यथार्थ सुख प्राप्तिका लागि गुरुका शरणमा पर्नै पर्छ।

**चार्वाकवैष्णवमते सुखं प्राभाकरे न हि।**
**गुरोः पादान्तिके यद्वत्सुखं वेदान्तसम्मतम् ॥३७॥**

वेदान्तमा बताइएअनुसार गुरुका चरणमा जुन सुख छ, त्यो सुख चार्वाक, वैष्णव, प्राभाकर अर्थात् साङ्ख्यमतमा छैन। ॥३७॥

वेदान्त दर्शन यसप्रकारको दर्शन हो, जसमा जीवनको अखण्डताका बारेमा यथार्थ रूपमा प्रकाश पारिएको छ। त्यसले संसार र मोक्ष, कर्म र सन्न्यास, ज्ञान र कर्म, सृष्टि र ईश्वर, आत्मा र परमात्मा, जीव र जगत्, सुख र दुःख, हानि र लाभ, विजय र पराजयलगायतका द्वन्द्वहरूमा भेदभाव नराख्दै यिनीहरूलाई समान रूपमा स्वीकार गरेको छ। त्यसले समग्र सृष्टिको मङ्गलमय कामना गर्दछ। त्यसले सबैलाई ब्रह्मस्वरूप सम्भन्छ। वेदान्तमा बताइएको जस्तो तत्त्वज्ञान अन्य कुनै पनि

सम्प्रदायमा छैन। वेदान्त दर्शन वेदहरूका सार हो, जुन उपनिषद्हरूमा सङ्गृहीत छ। ज-जसले परम आनन्द प्राप्त गरेका छन्, ती सबै वेदान्तका उपासक थिए। वेदान्त दर्शनले मात्र विश्वमा शान्ति, अहिंसा, प्रेम, दया, करुणालगायतको विकास गरेर समग्र मानवको कल्याण गर्न सक्तछ। वेदहरूमा बताइएको यो वेदान्त दर्शन मात्र सुखको आधार हो। चार्वाकमतले भौतिकवादको मात्र समर्थन गर्दछ, जसबाट आजसम्म कोही सुखी हुन सकेका छैनन्। किनकि भौतिक वस्तुहरूले मनुष्यलाई कहिल्यै पनि सुख दिन सक्तैनन्। तिनीहरू वासना बढाएर अन्तमा दुःखकै साधन बन्दछन्। अर्कातिर साङ्ख्यमत रहेको छ, जुन रुखासुखा दर्शन हो। यसका अनुसार जान्नु नै पर्याप्त हुन्छ। तर जानेर मात्र सुख प्राप्त हुन सक्तैन। किनकि आत्मज्ञानबाट, अज्ञानको निवृत्तिबाट र सत्यको ज्ञानबाट मात्र सुख प्राप्त हुन्छ; जसको रहस्यका विषयमा वेदान्तमा स्पष्ट रूपमा वर्णन गरिएको छ। वैष्णवमतले थोरै राहत दिने भए तापनि त्यो पनि परमतत्त्वका बारेमा अनभिज्ञ छ वा रहन्छ। अन्य मतावलम्बीले त सृष्टि रचनाको प्रक्रियासम्म पनि जान्दैनन् भने सुख र शान्तिको बाटोका सम्बन्धमा कसरी बताउन सक्तछन्। वेदान्तमा सुख प्राप्तिका लागि गुरुका शरणमा जानु पर्ने बताइएको छ। गुरु स्वयं वेदान्तका प्रतिमूर्ति हुन्। उनको जीवन नै वेदान्तको आदर्श हो। यसैले उनको नजीकमा बसेर तथा उनको शरणमा परेर यो सुख प्राप्त गर्न सकिन्छ।

**न तत्सुखं सुरेन्द्रस्य न सुखं चक्रवर्तिनाम्।**
**यत्सुखं वीतरागस्य मुनेरेकान्तवासिनः ॥३८॥**

एकान्त स्थानमा बस्ने सांसारिक इच्छा वा ममतामा वैराग्य उत्पन्न भएको मुनिले जुन सुख प्राप्त गर्दछ, त्यो सुख देवराज इन्द्र र चक्रवर्ती राजाहरूलाई पनि प्राप्त हुन सक्तैन। ॥३८॥

राग र विराग दुवैमा सुख छैन। किनकि वास्तविक सुख वैराग्यमा मात्र छ। नैतिकवान् व्यक्तिले खराबलाई परित्याग गरेर असललाई ग्रहण गर्ने अभिलाषा राख्दछ; तर त्यो असल पनि मनकै कल्पना हो। जबसम्म मन रहन्छ, त्यस समयसम्म सुख प्राप्त गर्न असम्भव हुन्छ। मनभन्दा पर चेतना छ। त्यसलाई प्राप्त गरेपपिछ असल र खराब दुवैको त्याग हुन्छ। यदि खराब दुःखको कारण हो भने असल पनि दुःखको कारण बन्दछ। यी दुवै बन्धनदायक हुन्। यसैले संसारमा कोही पनि दुःखहरूबाट मुक्त छैन। देवराज इन्द्र पनि वासनाबाट पीडित छन्, ती पनि सुखी छैनन्। उनलाई दैत्यहरूले चुनौती दिइरहेका हुन्छन्, जसले गर्दा उनले पनि

छलकपट गर्नुपर्छ। यसैगरी चक्रवर्ती राजाहरू पनि कामनाहरूका कारणले सधैँ दुःखी भइरहेका हुन्छन्। सुखी त त्यो मुनि मात्र हुन्छ, जो एकान्तमा बस्दछ, जसले सबै कामनाहरू परित्याग गरिसकेको छ, जसमा कुनै वासना छैन, जो सधैँ सन्तुष्ट रहन्छ, जसमा कसैप्रति राग छैन। किनकि रागबाट द्वेष उत्पन्न हुन्छ। यसैले जो वैराग्यवान् छ, त्यो सबैभन्दा सुखी हुन्छ।

**नित्यं ब्रह्मरसं पीत्वा तृप्तो यः परमात्मनि।**
**इन्द्रं च मन्यते रङ्कं नृपाणां तत्र का कथा ॥३९॥**

जो निरन्तर रूपमा ब्रह्मरस पिएर परमात्मामा तृप्त भएको हुन्छन्, ती मुनिले देवराज इन्द्रलाई पनि गरीब सम्झन्छन् भने राजाहरूको त कुरै नगरौँ। ॥३९॥

जोसँग केही पनि छैन, त्यो गरीब नभएर जसले धेरै प्राप्त गर्ने चाहना राख्दछ त्यो गरीब हो। जसले धेरैको चाहना राख्दछ, त्यो सबैभन्दा ठूलो भिखारी हो। जोसँग हुँदैन त्यसैले चाहना गर्दछ। जसले धन, सम्मान, पूजा–प्रतिष्ठा, प्रशंसालगायतको चाहना राख्छ, त्यो माग्ने हो। यदि उसको चाहना पूर्ण हुन सकेन भने त्यो दुःखी हुन्छ। इच्छाहरू कसैका कहिल्यै पूर्ण हुँदैन। यसकारण इच्छा नै दुःखको कारण हो। यसैगरी अर्काको सहयोगको अपेक्षा गर्नु पनि दुःखहरूको कारण हो। यसैले अपेक्षारहित हुँदा मात्र सुख प्राप्त हुन्छ। यसकारण एकान्तमा बस्ने मुनि जसले आत्माको अनुभव गरिसकेका छन्, ती परमात्माबाटै तृप्त रहन्छन्, वासनाभन्दा माथि उठेका हुन्छन्, उनले कसैको सहयोगको आशा राख्दैनन्। किनकि उनका सबै अभिलाषाहरू परमात्माले पूर्ण गरिदिनुहुन्छ। मुनिले सांसारिक भोगहरूको चाहना राख्दैनन्। किनकि उनलाई परमभोग प्राप्त भइसकेको हुन्छ, जसबाट ऊ सधैँ तृप्त रहन्छ। यसरी निरन्तर ब्रह्मरस पिउने अवसर देवराज इन्द्रले पनि पाउँदैनन् भने चक्रवर्ती राजाहरूको त कुरै नगरौँ। जुन ब्रह्मरस मुनिले पिउँछन्; त्यो तिनीहरूलाई कहिल्यै प्राप्त हुँदैन। जसमा मुनि अवस्थित भएका हुन्छन्, त्यही परम आनन्दको अवस्था हो।

**यतः परमकैवल्यं गुरुमार्गेण वै भवेत्।**
**गुरुभक्तिरतिः कार्या सर्वदा मोक्षकाङ्क्षिभिः ॥४०॥**

मोक्ष प्राप्त गर्ने अभिलाषा भएकाले एकाग्रतापूर्वक गुरुको भक्ति गर्नुपर्छ। किनकि गुरुका माध्यमद्वारा मात्र मोक्ष प्राप्त हुन्छ। ॥४०॥

यसकारण सबैमा मोक्ष प्राप्त गर्ने अभिलाषा उत्पन्न हुँदैन। जसले पहिलो जन्ममा साधना पूर्ण गरिसकेको छ तथा जसका संस्कार दृढ भइसकेका छन्, त्यसैले मोक्ष प्राप्त गर्ने अभिलाषा राख्दछ। यसैले जसमा मोक्ष प्राप्त गर्ने अभिलाषा उत्पन्न भएको छ, त्यसले निष्ठापूर्वक गुरुको भक्ति गर्नुपर्छ। गुरुले सबैभन्दा पहिले उसमा भएका विकारहरू हटाइदिन्छन्। यसपछि जब ऊ पूर्ण रूपमा शुद्ध हुन्छ, त्यसपछि उसलाई गुरुले मोक्ष प्राप्तिको रहस्य बताउँछन्। जबसम्म उसको मानसिक अवस्था त्यस किसिमको बन्दैन, त्यस समयसम्म उसले गुरुको सेवा गर्नुपर्छ।

**एक एवाद्वितीयोऽहं गुरुवाक्येन निश्चितः।**
**एवमभ्यास्यता नित्य न सेव्यं वै वनान्तरम्॥४१॥**
**अभ्यासान्निमिषेणैव समाधिमधिगच्छति।**
**आजन्मजनितं पापं तत्क्षणादेव नश्यति॥४२॥**

जसले गुरुका वचनको सहयोगमा म एकमात्र हुँ अथवा मबाहेक अर्को कोही छैन भन्ने निश्चय गर्दछ र जो त्यसैको अभ्यासमा निरन्तर एकाग्रतापूर्वक लागिरहन्छ; त्यसले वनमा बस्न आवश्यक छैन। किनकि अभ्यासद्वारा तत्कालै समाधि लाग्दछ र त्यसै समयमा यो जन्मसम्मका सबै पाप नष्ट हुन्छन्। ॥४१॥ ॥४२॥

आफ्नो यथार्थ स्वरूपको ज्ञान प्राप्त हुनु नै यो जीवनको सर्वोत्कृष्ट उपलब्धि हो। आफूलाई शरीर, मन, बुद्धि सम्झनु अज्ञान हो। किनकि यी सबै जड प्रकृतिबाट बनेका हुन् र चेतनशक्तिद्वारा सक्रिय भएर आआफ्नो कार्य गर्छन्। यसकारण मनुष्यको यथार्थ स्वरूप जड नभएर चेतनतत्त्व हो। मनुष्यले अज्ञानका वशमा परेर शरीरलाई आफ्नो स्वरूप सम्झिरहेको हुन्छ र चेतनको अनुभूति भएपछि अज्ञान आफैँ नष्ट हुन्छ। यो चेतनको प्रत्यक्ष रूपमा अनुभव गर्नका लागि मनुष्यले सन्न्यास लिन्छ, ऊ वनमा गएर बस्छ, कठिन तपस्या र साधना गर्दछ। यसैगरी पापबाट मुक्त हुनका लागि दान, सेवा, सहयोग गर्दछ, नियम र संयमको पालना गर्दछ तथा अन्य अनेकौँ उपायहरू गर्दछ। तर भगवान् श्रीशिव भन्नुहुन्छ– गुरुबाट उपदेश नपाएसम्म आत्माको ज्ञान प्राप्त हुन सक्तैन। गहन ध्यानका अवस्थामा गुरुले **तत्त्वमसि** महावाक्यका माध्यमद्वारा शिष्यलाई **जुन चैतन्यतत्त्व छ, त्यो तिमी नै हौ** भन्ने ज्ञान गराइदिन्छन्। अन्य सबै प्रकृतिजन्य भएकाले तिम्रो स्वरूप होइन भन्ने स्पष्ट गरिदिन्छन्। यो महावाक्यका प्रभावले शिष्यमा भएको अज्ञान नष्ट हुन्छ तथा

उसलाई आफ्नो यथार्थ स्वरूपको ज्ञान हुन्छ। यसपछि ऊ सबै भ्रमबाट मुक्त हुन्छ। त्यसपछि जब उसले त्यो चैतन्य नै ब्रह्म हुनु हो र उहाँ एकमात्र हुनुहुन्छ र म स्वयं चैतन्य भएकाले आफैं ब्रह्म हुँ भन्ने निश्चय गरेपछि ऊ तत्कालै समाधिमा मग्न हुन्छ। जब–जब उसले यसको अभ्यास गर्दछ, त्यस समयमा ऊ समाधिमा पुग्दछ। यसका लागि अन्य कुनै प्रयास गरिरहन आवश्यक छैन। यसरी एकपटक उसलाई यो चैतन्यस्वरूपको ज्ञान भएपछि उसको यो ज्ञानरूपी अग्निमा यो जन्मसम्मका सबै पाप नष्ट हुन्छन्। यो पाप र पुण्य वास्तविक नभएर मनको संस्कार मात्र हो। जब ज्ञान प्राप्त हुन्छ, त्यसपछि मन नरहने भएकाले पाप र पुण्य, कर्तव्य र अकर्तव्य, लिनु र त्याग्नुलगायत सबै समाप्त हुन्छ। त्यसपछि निरञ्जन मात्र बाँकी रहन्छ। यो सबै गुरुको प्रसाद हो। किनकि यसप्रकारको निश्चय गुरुको वाक्यबाट मात्र हुन्छ, अन्य कुनै उपाय छैन।

**गुरुर्विष्णुः सत्त्वमयो राजसश्चतुराननः।**
**तामसो रुद्ररूपेण सृजत्यवति हन्ति च ॥४३॥**

गुरुले नै सत्त्वगुणी भएर भगवान् श्रीविष्णुका रूपमा जगत्को पालन–पोषण गर्दछन्, रजोगुणी भएर ब्रह्माका रूपमा जगत्को सृष्टि गर्दछन् र तमोगुणी भएर श्रीशङ्करका रूपमा जगत्को संहार गर्दछन्। ॥४३॥

परब्रह्म परमात्मा सर्वव्यापी, निर्गुण, निराकार, निरञ्जन र सबैमा अनासक्त हुनुहुन्छ। तर जब उहाँको चेतनशक्ति यी तीनोटा गुणसम्पन्न मायाशक्ति प्रकृतिबाट ढाकिन्छ, त्यसपछि उहाँ निर्गुणबाट सगुण बन्नु हुन्छ। प्रकृतिका सत्त्व, रज र तमोगुणका कारणले एकमात्र परब्रह्म तीन रूपमा प्रकट हुनुहुन्छ। यसैले सत्त्वगुणको संयोगबाट उहाँले भगवान् श्रीविष्णुको रूप धारण गरेर सृष्टिको पालन–पोषण गर्नुहुन्छ। यसैगरी उहाँले रजोगुणको संयोगबाट ब्रह्माको रूप धारण गरेर सृष्टि गर्नुहुन्छ। सत्त्वगुण परब्रह्म परमात्माको ज्ञानरूपी शक्ति हो। यही ज्ञानका माध्यमद्वारा सृष्टिको पालन–पोषण हुन्छ। उहाँको क्रियारूपी शक्ति रजोगुण हो, जसका माध्यमद्वारा उहाँले सृष्टि गर्नुहुन्छ। उहाँले आफ्नो तमोगुणी शक्तिका माध्यमद्वारा सृष्टिको संहार गर्नुहुन्छ, जुन महेशको स्वरूप हो। यसैले ब्रह्मा, विष्णु र महेश सृष्टिको कारण बन्दछन् भने परब्रह्म परमात्मा आफैं एउटा निरपेक्ष तत्त्व हुनुहुन्छ, जो आफैंले सृष्टिको रचना नगरे तापनि यसको कारणतत्त्व बन्नुहुन्छ।

गुरु पनि स्वयं ब्रह्मस्वरूप नै हुन्छन्, जो यो मायारूपी सृष्टिबाट निरपेक्ष रहन्छ; तर यो जगत्को कल्याणका लागि आफैँ सक्रिय भएर कार्य गर्दछन्। यिनले तीनोटै गुणसम्पन्न भएर विष्णु, ब्रह्मा र रुद्रको रूप धारण गरेर पालन, सृष्टि र संहार गर्दछन्। यसको अर्थ गुरु परमात्माको कार्य गर्न सक्षम हुन्छन् भन्ने नभएर उनले अनुभव गर्दछन् कि म स्वयं ब्रह्मस्वरूप छु; यसैले यो सृष्टिको पालन, सृजना र संहार मैद्वारा हुन्छ। उनले आफूलाई परब्रह्म परमात्मा बराबर सम्झन्छन्।

**तस्यावलोकनं प्राप्य सर्वसङ्गविवर्जितः ।**
**एकाकी निस्पृहः शान्तः स्थातव्यं तत्प्रसादतः ॥४४॥**

उनको अर्थात् गुरुको दर्शन पाएपछि उनको कृपारूपी प्रसादका माध्यमद्वारा सबै किसिमको आसक्ति परित्याग गरेर, एक्लो, कामनारहित र शान्त भएर बस्नुपर्छ। ॥४४॥

जब गुरुको प्रसादका माध्यमद्वारा साधक आफैँले आत्माको अनुभव गर्दछ। त्यसपछि उसले सांसारिक कामनाहरू, वासनाहरू, आसक्ति, मोह, ममतालगायत परित्याग गरेर एक्लै बस्नुपर्छ। किनकि सर्वोत्कृष्टको प्राप्ति भएपछि तुच्छको केही काम हुँदैन। यसैले परम आनन्द प्राप्त गरिसकेपछि तुच्छ सांसारिक भोगहरूमा रमाउनुको कुनै अर्थ रहँदैन। यसप्रकारको आत्मज्ञानीले एकान्तमा बसेर ममतारहित र शान्त भएर आफ्नै आत्मामा रमाउनुपर्छ। यो अवस्थामा सांसारिक मनुष्यहरूसँग भेटघाट गर्नु हुँदैन। यदि गरियो भने तिनका गलत विचारहरूका तरङ्गहरूले उसलाई फेरि पहिलेकै स्थितिमा पुऱ्याउन सक्तछन्। यस्तो अवस्थामा उसले साधना, ध्यान, समाधिलाई पनि परित्याग गरिदिनुपर्छ, अन्यथा यी पनि बन्धनको कारण बन्दछन्। यसैगरी सम्झना पनि बन्धन हो, यसैले सबै पुराना सम्झनाहरू परित्याग गरेर आत्माको आनन्दमा मात्र रमाउनुपर्छ।

**सर्वज्ञपदमित्याहुर्देही सर्वमयो भुवि।**
**सदाऽनन्दः सदा शान्तो रमते यत्रकुत्रचित् ॥४५॥**

जुन जीव यो संसारमा सर्वमय, आनन्दमय र शान्त भएर सबैतिर घुम्दछ, त्यो जीवलाई सर्वज्ञ भनिन्छ। ॥४५॥

जुन साधकलाई परमको उपलब्धि भएको छ अर्थात् जसले आफ्नो वास्तविक स्वरूप आत्मामा विषयमा ज्ञान हासिल गरिसकेको छ, उसलाई यो मायाको कुनै औचित्य रहँदैन। यसप्रकारको व्यक्ति सर्वज्ञ हुन्छ। किनकि उसले

सबैलाई आत्मस्वरूप मात्र देख्दछ। उसको द्वैतभाव समाप्त हुन्छ। यस्तो व्यक्तिले कसैसँग राग–द्वेष राख्दैन र कसैलाई घृणा गर्दैन। जो जान्नु थियो, त्यो जानिसकेपछि फेरि जान्न केही बाँकी रहँदैन। जुन सुख प्राप्त गर्ने कामना थियो, जुन आनन्द प्राप्त गर्ने अभिलाषा थियो, जसका लागि सांसारिक दुःखहरूका पछाडि दौडिरहेको थियो, तर त्यहाँ उसलाई त्यो प्राप्त हुन सकेन। जब उसले चाहेको वस्तु प्राप्त हुन्छ, त्यसपछि उसले संसारको कामना गर्दैन। यसप्रकारको जीव मात्र आत्माको आनन्दमा डुबेर शान्त हुँदै सबैतिर घुम्दछ। अब पाउन केही बाँकी छैन भने उसले किन प्राप्त गर्ने अभिलाषा राख्नु ? जसले जति चाहना राख्दछ, त्यो त्यति नै ठूलो भिखारी हुन्छ। यसप्रकारको ज्ञानी सर्वज्ञ हुन्छ तथा उसले शान्त र आनन्दमय जीवन बिताउँछ।

**यत्रैव तिष्ठते सोऽपि स देशः पुण्यभाजनः।**
**मुक्तस्य लक्षणं देवी तवाग्रे कथितं मया ॥४६॥**

> यसप्रकारको पुरुष जहाँ बस्दछ, त्यो स्थान पुण्यदायक तीर्थ हुन्छ। हे देवी! मैले तिमीलाई मुक्त पुरुषको लक्षणका विषयमा बताएँ। ॥४६॥

तीर्थको अर्थ पवित्र गराउने हुन्छ। जहाँ साधु, सन्त र ज्ञानीहरूले तपस्या गर्दछन्, जहाँ सधैँ ज्ञानको चर्चा भइरहन्छ, त्यों स्थानलाई तीर्थ भनिन्छ। जहाँ उनीहरूका विचाररूपी तरङ्गहरू आज पनि विद्यमान छन्। जसले त्यहाँ पुग्नेलाई अचानक शान्तिको अनुभूति गराउँछन्। त्यो स्थानमा साधना गर्दा तत्कालै फल प्राप्त हुन्छ। तर भगवान् श्रीशिव देवी पार्वतीसँग भन्नुहुन्छ– हे देवी! जहाँ यसप्रकारका वैराग्य सम्पन्न ज्ञानी बस्दछन्, त्यो स्थान पुण्यदायक तीर्थस्थल नै हो। यदि उनका चरण छुन पाइयो, यदि उनका गोडा धोएको पानी पिउने सुअवसर पाइयो, यदि उनको सेवा गर्ने मौका पाइयो, यदि उनका वचनबाट ज्ञानरूपी अमृत पिउने सौभाग्य प्राप्त भयो भने त्यो कुनै तीर्थभन्दा थोरै फलदायक हुँदैन। किनकि त्यही जीवित तीर्थ हो। जीवनलाई गति दिने, सद्गुणहरूको विकास गर्ने, जीवनलाई प्रकाशमय बनाउने, अज्ञानरूपी अन्धकार हटाउने, जीवनमा सौन्दर्य बढाउने तथा यो सांसारिक समुद्रबाट पार लगाउने कार्य ज्ञानले मात्र गर्न सक्तछ, जुन ज्ञान गुरुको कृपारूपी प्रसादबाट प्राप्त हुन सक्तछ। उनको वचनले जीवनमा परिवर्तन ल्याउँछ। यस्ता मुक्त पुरुष जहाँ बस्छन्, त्यो पुण्यदायक तीर्थ हो।

**यद्यप्यधीता निगमाः षडङ्गा आगमाः प्रिये ।**
**अध्यात्मादिनि शास्त्राणि ज्ञानं नास्ति गुरुं बिना ॥४७॥**

हे प्रिये! मनुष्यले वेदका छओटै अङ्गहरूसहित चारोटै वेदहरूलगायत अध्यात्मसहितका अन्य सबै शास्त्रहरूको अध्ययन गरे तापनि गुरुबिना ज्ञान प्राप्त हुँदैन । ॥४७॥

यसमा जुन ज्ञानको प्रसङ्ग आएको अथवा कुरा भइरहेको छ, त्यो अनुभूतिको विषय हो, जुन आफैँलाई हुन्छ। यो अनुभूति कसैलाई देखाउन वा यसका विषयमा शब्दका माध्यमद्वारा वर्णन गर्न सकिँदैन। ज्ञानीलाई जुन परम आनन्दको अनुभूति हुन्छ, त्यो कसरी व्यक्त गर्ने भन्ने चिन्ताले ज्ञानीहरूलाई पीडित बनाइरहेको हुन्छ; यसैले उनीहरू मौन रहन्छन्। यो अनुभूतिलाई तर्क, प्रमाण, उदाहरणलगायतबाट पनि सिद्ध गर्न सकिँदैन। यसलाई नाप्ने उपकरण वैज्ञानिकहरूसँग पनि छैन, जसबाट उनीहरूले कति प्रतिशत आनन्द प्राप्त भयो भनेर नाप्न सकून्। आनन्द कसको गुण भनेर जान्न नसकिए तापनि व्यक्तिले आनन्दित भएको छु भन्दछ। जसरी गुलियो स्वाद चाखेर मात्र जान्न सकिन्छ, त्यसको वर्णन गर्न सकिँदैन। त्यसैगरी आत्मानुभवको ज्ञान पनि त्यस्तै छ, जसको आनन्द लिन त सकिन्छ; तर बताउन सकिँदैन।

भगवान् श्रीशिव देवी पार्वतीसँग भन्नुहुन्छ– हे देवी! यो ज्ञान शास्त्रहरू, वेद र वेदका अङ्गहरूको अध्ययन गरेर प्राप्त गर्न सकिँदैन। यदि कसैले अनेकौँ अध्यात्म शास्त्रहरूको अध्ययन गर्दछ भने पनि उसले ज्ञान प्राप्त गर्दैन। यसप्रकारको व्यक्ति पण्डित बन्न सक्तछ, उसले तर्क–वितर्क गर्न, शास्त्रका विषयमा प्रवचन दिन, आफू सत्य र अन्य गलत भएको सिद्ध गर्न सक्तछ; तर उसलाई ज्ञानी भन्न सकिँदैन। यी सबै शास्त्र वचनरूपी जाल मात्र हुन्, जसले मनुष्यलाई धेरै घुमाउँछन्, तर बाटो देखाउन सक्तैनन्। यी शास्त्रहरूका ज्ञाताहरू अत्यन्तै घमण्डी भएकाले उनीहरूले अन्य सबैलाई मूर्ख सम्झन्छन्। यो अहङ्कार उनको ज्ञान प्राप्तिमा बाधक बन्दछ। यसका तुलनामा शास्त्रहरूको अध्ययन नगरेका कयौँ व्यक्तिले गुरुको कृपाका माध्यमद्वारा ज्ञान प्राप्त गरेको उदाहरण धेरै छन्। किनकि गुरुको उपदेशबिना यसका विषयमा कसैले जान्न सक्तैन। यसैले जसले ज्ञान प्राप्त गर्ने अभिलाषा राख्दछ, उसले अनिवार्य रूपमा सद्गुरुका शरणमा जानै पर्छ।

**शिवपूजारतो वापि विष्णुपूजारतोऽथवा ।**
**गुरुतत्त्वविहीनश्चेत्तत्सर्वं व्यर्थमेव हि ॥४८॥**

शिवको पूजामा एकाग्रतापूर्वक लागोस् वा विष्णुको पूजामा, तर गुरु तत्त्वको ज्ञानरहित छ भने त्यो सबै व्यर्थ हुन्छ । ॥४८॥

भगवान् श्रीशिव भन्नुहुन्छ– पूजा जोसुकैको गरियोस् अर्थात् शिवको अथवा विष्णुको जसको पूजा गरे तापनि जसको कुनै गुरु छैन, जसले गुरुमा श्रद्धा र विश्वास राख्दैन, जसले गुरु तत्त्वको महिमाका विषयमा जानेको छैन, त्यसले गरेको पूजा, प्रार्थना, तपस्या, जपलगायत सबै व्यर्थ हुन्छन् अर्थात् उसलाई त्यसको फल प्राप्त हुँदैन। गुरुबिना तिनीहरूको विधि–विधानको ज्ञान पनि हुँदैन। किनकि पुस्तक पढेर मात्र, कसैले बताएका भरमा अथवा अर्काले गरेको देखेर जसले विभिन्न देवताहरू र सिद्धहरूलगायतको उपासना, पूजालगायत गर्दछ भने त्यो उसको अनावश्यक अर्थात् व्यर्थको परिश्रम हो। किनकि त्यसबाट दुष्परिणाम मात्र हात लाग्दछ। गुरु मन्त्र पनि यस्तै हुन्छ। किनकि गुरु मन्त्र त सामान्य नै हुन्छ; तर गुरुले दिएको मन्त्रमा विशेष किसिमको प्रभाव हुन्छ। त्यो मन्त्रका आधारमा मात्र गुरुसँग सम्बन्ध जोडिन्छ तथा त्यसको सहयोगमा गुरुको सामीप्य प्राप्त हुन्छ अर्थात् उनीसँग नजीक हुने अवसर प्राप्त हुन्छ। यसैले गुरुले देखाएको बाटो अवलम्बन गर्नाले मात्र त्यो ज्ञान प्राप्त गर्न योग्य हुन्छ तथा योग्य भएपछि गुरुले उसलाई आत्मस्वरूपको ज्ञान गराउँछन्। यसैले आत्मज्ञान प्राप्त गर्ने अभिलाषा भएको मनुष्यले अनिवार्य रूपमा गुरुका शरणमा पर्नै पर्छ।

**सर्वं स्यात्सफलं कर्म गुरुदीक्षाप्रभावतः ।**
**गुरुलाभात्सर्वलाभो गुरुहीनस्तु बालिशः ॥४९॥**

गुरुबाट प्राप्त भएको दीक्षाका प्रभावले सबै कर्म सफल हुन्छन्। गुरु प्राप्तिरूपी परम लाभद्वारा अन्य सबै लाभ प्राप्त हुन्छन्। जसको गुरु छैन, त्यो मूर्ख हो। ॥४९॥

ज्ञान संसार, अध्यात्म, विज्ञान, कला, सङ्गीत, नृत्य, साहित्य, धर्म, मोक्ष जेसुकैको भए तापनि ती सबैमा गुरुको आवश्यकता अनिवार्य भएको कुरा सबैलाई ज्ञान भएकै विषय हो। किनकि गुरुबिना कसैको मानसिक शक्तिको विकास हुन सक्तैन र न आत्मचेतनाकै विकास हुन्छ। यसै जसको कुनै गुरु छैन, त्यो पशु मात्र

नभएर जङ्गली पशु जस्तैगरी यता–उता घुमिरहन्छ। त्यो स्वेच्छाचारी हुने भएकाले उसले यो लोक र परलोक दुवैमा सुखको अनुभव गर्न सक्तैन। किनकि पशुले त आफ्नो स्वाभाविक प्रकृतिका अनुसार जीवननिर्वाह गर्दछ; तर मनुष्यले सबै सिक्नुपर्छ। मनुष्यभित्र जुन शक्ति सुषुप्तावस्थामा रहेका छन्, तिनीहरूलाई जाग्रत बनाउन आवश्यक हुन्छ अन्यथा ती सुषुप्तावस्थामै रहिरहन्छन्। यसैले सबै ज्ञान मनुष्यका लागि मात्र हो। मनुष्यमा अनगिन्ती शक्तिहरू सुषुप्तावस्थामा रहेका हुन्छन्, जसलाई गुरुले मात्र जाग्रतावस्थामा ल्याउन सक्तछन् तथा गुरु त्यही हुन्छन्, जसले यी सुषुप्तावस्थामा रहेका शक्तिहरूलाई जाग्रत् गराएर उसलाई आफ्नो वास्तविक स्वरूपको ज्ञान गराइदिन्छन्।

गुरुले सबैभन्दा पहिले आफ्नो आश्रयमा आएको शिष्यको चित्त शुद्धि गराउँछन्। त्यसका लागि उसलाई कठिन साधनामा लगाउँछन्। त्यसपछि ऊ ज्ञान प्राप्त गर्न योग्य भएपछि मात्र उसलाई दीक्षा दिएर आफ्नो शिष्य बनाउँछन्। यसपछिको सम्पूर्ण दायित्व गुरुकै हुन्छ। जब कुनै गुरुले शिष्यलाई एक पटक दीक्षा दिन्छन्, त्यसपछि ती दिव्य गुरुको चेतना त्यो शिष्यमा प्रवाहित भइरहन्छ; जसको प्रभावले गर्दा ऊ फेरि कुमार्गमा लाग्दैन तथा उसका सबै मनोकामनाहरू र इच्छाहरू गुरु आफैँले पूर्ण गरिदिन्छन्। उसको सबै कर्म सफल हुन्छ। गुरु पाउनु नै त्यो शिष्यका लागि ठूलो उपलब्धि हो। यसपछि साधारण लाभ त आफैँ प्राप्त हुन्छन्। यसैले मनुष्यको लागि गुरु अनिवार्यता हो। किनकि उनैले उसको जीवनमा परिवर्तन ल्याउन सक्तछन्।

**तस्मात्सर्वप्रयत्नेन सर्वसङ्गविवर्जितः ।**
**विहाय शास्त्रजालानि गुरुमेव समाश्रयेत् ॥५०॥**

यसैले सबै किसिमका विषयवासनाहरू अथवा प्रयासहरूमा अनासक्त भएर, शास्त्रको मायाजाल परित्याग गर्दै गुरुका शरणमा जानुपर्छ। ॥५०॥

परमात्मालाई प्रयासद्वारा प्राप्त गर्न सकिँदैन। किनकि उहाँलाई प्राप्त गर्नका लागि कर्म परित्याग गरेर अकर्ममा लाग्नुपर्छ। कर्मद्वारा सांसारिक भोग र सुख प्राप्त गर्न सकिए तापनि परमात्मालाई प्राप्त गर्न सकिँदैन। परमात्माको प्राप्ति पुरुषार्थबाट नभएर उहाँको कृपाबाट हुन्छ। यसैले प्रयत्न गर्दा पनि अनासक्त भएर गर्नुपर्छ। किनकि आसक्तिले सांसारिक बन्धनमा पार्दछ। यो संसार आफैँ बन्धन नभए तापनि जहाँ आसक्ति, मोह, वासना, फल प्राप्तिको इच्छा छ, त्यहीँ संसार हुने

भएकाले यसबाट मुक्त हुनुपर्छ। यी शास्त्रहरू पनि मायाजाल हुन्, जुन परमात्मा प्राप्तिका साधन होइनन्। किनकि शास्त्रीय ज्ञानद्वारा विद्वान् र दार्शनिक बन्न सकिए तापनि ज्ञानी बन्न सकिँदैन। किनकि जो शास्त्रहरूमा अल्भिन्छ, त्यो घुमिरहन्छ र अझ धेरै अल्मलिन्छ, जसले गर्दा ऊ सत्य के हो भन्ने निर्णयमा पुग्न सक्तैन। यस्तो अवस्थामा गुरुका शरणमा जानुपर्छ तथा उनका उपदेशहरूको पालना गरिरहँदा अन्तमा उनले तत्त्वको ज्ञान गराउन सक्तछन्।

**ज्ञानहीनो गुरुत्याज्यो मिथ्यावादी विडम्बकः।**
**स्वविश्रान्ति न जानाति परशान्तिं करोति किम् ॥५१॥**

ज्ञानरहित, असत्य बोल्ने र देखावटी गर्ने गुरुलाई त्याग गरिदिनुपर्छ। किनकि जसले आफैँले शान्ति प्राप्त गर्न जान्दैन वा जानेको छैन, त्यसले अरूलाई शान्ति दिन सक्तैन। ॥५१॥

ती मात्र वास्तविक गुरु हुन्, जसले आत्माको अनुभव गरिसकेका छन्, जसले संसारलाई यथार्थ रूपमा चिनेका छन्, जो आत्माको आनन्दमा अवस्थित भएका छन्, जसको ज्ञानरूपी ज्योति बलिसकेको छ, जो ममतारहित, शान्त, कामनाविहीन र अभिलाषारहित तथा ज्ञान–विज्ञानद्वारा परिपूर्ण छन्। जसमा यसप्रकारका गुण छैनन्, जो आत्मज्ञानी पनि हैन, जसले असत्य बोल्दछ, जो अहङ्कारी र कपटी छ, जसले ज्ञानी भएको घमण्ड मात्र गर्दछ तथा पटक–पटक आफ्नै प्रशंसा गर्दछ, आफूलाई परमात्माभन्दा कम सम्झँदैन, हजारौँ शिष्य बनाउँछ, तर एउटालाई पनि आत्माको अनुभूति गराउन सक्तैन, जसले ज्ञान र परमात्माका नाममा पैसा सङ्कलन गर्दछ, त्यस्तो गुरुलाई त्याग्नुपर्छ। किनकि जसले आफैँले शान्ति प्राप्त गर्न सकेको छैन, त्यसले अरूलाई शान्ति दिन सक्तैन। यसैले कामवासनामा आसक्त, लोभी, पाखण्डी, अज्ञानी गुरुको पदमा आसीन हुन योग्य हुँदैन। त्यसलाई परित्याग गर्नुपर्छ।

**शिलायाः किं परं ज्ञानं शिलासङ्घप्रतारणे।**
**स्वयं तर्तुं न जानाति परं निस्तारयेत्कथम् ॥५२॥**

ढुङ्गाको समूहलाई पानीबाट बाहिर ल्याउने ज्ञान ढुङ्गालाई हुन सक्तैन। किनकि जो आफू पौडिन जान्दैन, त्यसले अरूलाई पानीबाट बाहिर ल्याउने काम गर्न सक्तैन। ॥५२॥

ढुङ्गो आफैँ डुब्ने भएकाले त्यसले अरूलाई बाहिर निकाल्न सक्तैन। त्यसको सङ्गतमा लाग्ने स्वयं डुब्छ। जसले आफू पौडिन सक्तैन, त्यसले अरूलाई बचाउन सक्तैन अर्थात् जो आफैँ असहाय छ, त्यसले अरूलाई सहयोग गर्न सक्तैन। सद्‌गुरु चिन्न ज्यादै कठिन छ। गुरुलाई शिष्यले चिन्न सक्तैन। किनकि उसमा चिन्ने योग्यता नै हुँदैन। गुरुको पहिचान कर्महरूद्वारा नभएर उनको ज्ञानका आधारमा मात्र गर्नुपर्छ। गुरुका कर्म अति विचित्रमय हुन्छन्। उनी हाँस्छन्, बोल्छन्, उनले बालकको जस्तो व्यवहार पनि गर्दछन्, सामान्य मनुष्यहरूले जस्तै कर्म गर्दछन्, राजा जनकले जस्तैगरी सबै भोग उपयोग गरे तापनि उनी त्यसमा आसक्त हुँदैनन्। उनले घर परित्याग गरेर जङ्गलमा बसिरहन आवश्यक छैन अर्थात् उनी गृहस्थ पनि हुन सक्तछन्। यस्तो अवस्थामा शिष्यले सद्‌गुरु चिन्न नसके तापनि गुरु आफैँले शिष्य चिन्दछन्। यसरी योग्य पात्र छानिसकेपछि आफूमा भएको ज्ञान त्यसलाई दिन इच्छुक हुन्छन्। यसैले शिष्यले आफूलाई योग्य बनाउने कार्यमा तत्परतापूर्वक लाग्नुपर्छ। यदि ऊ गुरुको खोजीमा घुम्न थाल्यो भने त्यो निश्चित रूपमा गलत गुरुको सङ्गतमा पुग्दछ। गुरु मानिसकेपछि उनको योग्यताको परीक्षा लिने प्रयास पनि गर्नु हुँदैन।

**न वन्दनीयास्ते कष्टं दर्शनाद् भ्रान्तिकारकाः।**
**वर्जयेत्तान् गुरुन् दूरे धीरानेव समाश्रयेत्॥५३॥**

जुन गुरुले आफ्नो दर्शन अर्थात् देखावटीपनद्वारा शिष्यलाई भ्रममा पार्दछन्, यसप्रकारका गुरुलाई प्रणाम गर्नु हुँदैन, यत्ति मात्र नभएर तिनलाई टाढैबाट परित्याग गर्नुपर्छ। यस्तो अवस्थामा धैर्यवान् गुरुको मात्र आश्रय लिनुपर्दछ।॥५३॥

कुनै व्यक्तिले विचित्र किसिमको वेशभूषा धारण गरेर अरूलाई प्रभावित बनाउँछ तथा दम्भसम्पन्न आचरण गर्दछ। समाजका अगाडि त्यागी, तपस्वी भएको नाटक गर्दछ। यस सिलसिलामा उसले भोकै बस्ने, काँडामा सुत्ने, एउटा गोडामा उभिने, पैसा नछुने व्रतलगायतका माध्यमद्वारा मनुष्यहरूलाई प्रभावित बनाउँछ। तर भगवान् श्रीशिव भन्नुहुन्छ– उसको दर्शनबाट प्रभावित हुनु हुँदैन र उसलाई प्रणाम पनि गर्नु हुँदैन। त्यसलाई टाढैबाट परित्याग गरिदिनुपर्छ। किनकि ज्ञानी गुरुले कुनै किसिमको आडम्बर गर्दैनन् अर्थात् उनमा देखावटीपन हुँदैन। उनले सामान्य जीवन बिताउँछन्। उनी धैर्यवान् र शान्त हुन्छन्। उनले ज्ञानलाई मात्र महत्त्व दिन्छन्। यसप्रकारका गुरु छान्नुपर्छ।

पाखण्डिनः पापरता नापिस्तका भेदबुद्धयः।
स्त्रीलम्पट्य दुराचाराः कृतघ्ना बकवृत्तयः ॥५४॥
कर्मभ्रष्ट्यः क्षमानष्ट्यः निन्द्यतर्कैश्च वादिनः।
कामिनः क्रोधनश्चैव हिंस्राश्चण्डाः शठास्तथा ॥५५॥
ज्ञानलुप्ता न कर्तव्या महापापास्तथा प्रिये।
एभ्यो भिन्नो गुरुः सेव्य एकभक्त्या विचार्य च ॥५६॥

हे प्रेयसी! पाखण्डी, पाप कर्ममा तत्परतापूर्वक लाग्ने, नास्तिक, बुद्धिमा भेद उत्पन्न गराउने, स्त्रीमा आसक्त, दुराचारी, उपकार नसम्झने, बकुल्लाहरूको जस्तै व्यवहार भएको, असत् कर्म गर्ने, क्षमाविहीन, निन्दनीय तर्कहरूका माध्यमद्वारा आतङ्क फैलाउने, कामवासनासम्पन्न, रिसाहा, हिंस्रक, उग्र, मूर्ख, अज्ञानी र महापापी पुरुषलाई आफ्नो गुरु बनाउनु हुँदैन। यसरी विचार गरेर माथि बताइएका लक्षणहरूभन्दा अलग किसिमका लक्षणहरू भएका गुरुको मात्र एकाग्रतापूर्वक भक्तिसम्पन्न सेवा गर्नुपर्दछ। ॥४५॥ ॥५५॥ ॥५६॥

भगवान् श्रीशिव देवी पार्वतीसँग भन्नुहुन्छ– हे देवी! गुरुमा पूर्णनिष्ठा राख्दै उनलाई साक्षात् ईश्वर अर्थात् परमात्मास्वरूप सम्झिएर उनको सेवा गरेपछि मात्र उनले यो सांसारिक समुद्रबाट मुक्त अथवा पार गराइदिन्छन्। तर ती गुरु सांसारिक भोगहरूको अभिलाषा परित्याग गरेका, सद्कर्महरू र सदाचारसम्पन्न जीवननिर्वाह गर्ने हुनुपर्छ। जो शास्त्रीय विधिअनुसारका सबै कर्म गरिरहे तापनि तिनीहरूमा आसक्त हुँदैनन्, जसले निन्दनीय कर्महरू परित्याग गरिसकेका छन्, जो सरल स्वभावसम्पन्न छन् जसमा पाखण्ड छैन, जसले परमात्मामा विश्वास नगरेर आफैँले तर्क गरेर वितण्डा मच्चाउँछ, जसले मनुष्य–मनुष्यमा भेद बुद्धि राख्दछ वा अरूलाई घृणा गर्दछ, जो स्त्रीमा लम्पट वा अति आसक्त छ, कामवासनासम्पन्न, रिसाहा, दुराचारी, हिंस्रक छ, जसले अरूलाई आफ्नो वचनको जालमा बेरेर ठग्ने गर्दछ, जसले अर्काले गरेको उपकार सम्झँदैन, जो कर्म भ्रष्ट, कर्तव्यच्यूत तथा ज्ञान शून्य छ यस्तो व्यक्तिलाई कुनै पनि अवस्थामा गुरु बनाउनु हुँदैन। किनकि यसप्रकारको व्यक्तिलाई गुरु बनाउने शिष्य ऊसँगै नरकमा पर्दछ। जो सदाचारी छन्, जसले आफ्नो ज्ञानका अनुसार सदाचारसम्पन्न जीवननिर्वाह गर्दछन्, जसले शिष्यलाई सद्मार्गमा लगाउन सक्तछन्। यसप्रकारका व्यक्तिको मात्र

एकाग्रभावपूर्वक सेवा गर्नुपर्छ। यदि आफ्नो सौभाग्यले यस किसिमका गुरु पाउन सकियो भने उनले आफ्नो शिष्यको उद्धार गर्न सक्तछन्।

**सत्यं सत्यं पुनः सत्यं धर्मसारं मयोदितम्।**
**गुरुगीता समं स्तोत्रं नास्ति तत्त्वं गुरोः परम् ॥५७॥**

गुरुगीता जस्तो अन्य कुनै स्तोत्र छैन भने गुरु जस्तै अर्को कुनै तत्त्व छैन। तिमीलाई मैले यो सबै शास्त्रहरूको सार बताएको हुँ। यो सत्य हो, यो सत्य हो र पटक-पटक सत्य हो। ॥५७॥

मनुष्यलाई गुरुबाहेक अन्य कसैले पनि यो संसाररूपी मायाजालबाट मुक्त गराउन सक्तैन। किनकि यसको यथार्थता जानेका गुरुले मात्र संसार र परमात्माको वास्तविक ज्ञान गराउन सक्तछन्। जुन मूर्खले वा अज्ञानीले यिनीहरूको रहस्य जान्दैन, त्यसले सांसारिक समुद्रको छालमा अलमलिएर जन्म-जन्मान्तरसम्म दुःख भोग्दछ तथा उसले यो संसारमा र परलोकमा पनि सुख-शान्ति प्राप्त गर्न सक्तैन। त्यसलाई उपनिषद्हरूमा आत्माको हत्या गर्ने बताइएको छ। जसले आफूभित्र रहेको चिन्तामणिलाई चिन्न नसकेर ढुङ्गा जम्मा गरेर त्यसैलाई बहुमूल्य सम्झन्छ, त्यो भन्दा मूर्ख अरू कोही हुँदैन। यो जीवनको यथार्थ ज्ञान गुरुबाट मात्र प्राप्त हुन सक्तछ। ती गुरुको महिमाका विषयमा यो गुरुगीतामा मात्र वर्णन गरिएको छ। यसैले यो जस्तो उत्तम स्तोत्र अन्य कुनै छैन, जसमा गुरुको महत्त्वमा प्रकाश पारिएको छ तथा गुरु मात्र त्यो तत्त्व हुन्, जसले मनुष्यलाई यो मूर्खता अथवा अज्ञानबाट मुक्त गराइदिन्छन्। यसैले गुरुका शरणमा पर्नु सबै धर्महरूको सार हो। भगवान् श्रीशिव भन्नुहुन्छ- यसैका विषयमा तिमीलाई मैले बताइदिएँ, जुन पटक-पटक सत्य छ, यही परम सत्य हो। यो म पटक-पटक बताउँछु।

**अनेन यद् भवेद् कार्यं तद्वदामि तव प्रिये।**
**लोकोपकारकं देवी लौकिकं तु विवर्जयेत् ॥५८॥**

हे प्रिये! अब म तिमीलाई यो गुरुगीता पाठ गर्दा सिद्ध हुने कार्यका विषयमा बताउनेछु। हे देवी! यो मनुष्यहरूका लागि कल्याणदायक छ तथा यसमा लौकिकलाई अनिवार्य रूपमा परित्याग गर्नुपर्छ। ॥५८॥

यसपछि भगवान् श्रीशिव देवी पार्वतीसँग भन्नुहुन्छ - हे प्रिये ! अहिलेसम्म मैले तिमीलाई मानव सृष्टिमा गुरुको के महत्त्व छ, शिष्यका लागि

उनको भूमिका कस्तो हुनुपर्छ भन्ने विषयमा प्रकाश पार्दै गुरुको महिमाका विषयमा बताएँ। अब म तिमीलाई यो गुरुगीताको सधैँ पाठ गर्नाले सिद्ध हुने कार्य र त्यसको फलका सम्बन्धमा बताउनेछु; तिमी ध्यानपूर्वक सुन। जुन मनुष्यले यो पृथ्वीबाट मुक्त हुने अभिलाषा राख्दछ; जसले आफ्नो परम कल्याणको कामना गर्दछ, उसका लागि यो कल्याणदायक छ। उसले लौकिक पदार्थहरूमा भएको आसक्ति, कामना, इच्छाहरू र अपेक्षाहरूको परित्याग गर्नुपर्छ। जसले गर्दा उसले गुरुगीता पाठ गरेको फल प्राप्त गर्न सक्तछ। किनकि गुरुगीताले मात्र मनुष्यहरूको कल्याण गर्न सक्तछ।

**लौकिकाद्धर्मतो याति ज्ञानहीनो भवार्णवे।**
**ज्ञानभावे च यत्सर्वं कर्म निष्कर्म शाम्यति ॥५९॥**

जसले यसको उपयोग लौकिक कार्यका लागि गर्दछ; त्यो ज्ञानविहीन भएर संसाररूपी महासागरमा पर्दछ। ज्ञानभावपूर्वक जुनसुकै कर्ममा यसको उपयोग गऱ्यो भने त्यो कर्म अकर्ममा परिणत भएर शान्त हुन्छ। ॥५९॥

आनन्द प्राप्ति, मुक्ति, सुख, सन्तोष प्राप्तिसहित परम आनन्दमा अवस्थित हुनु ज्ञानको फल हो। जसले लौकिक कार्यसम्पन्न गर्न यो ज्ञानको उपयोग गर्दछ, भोग प्राप्ति, मनोकामनापूर्ति, यश वा सम्मान प्राप्तिका लागि गर्दछ, त्यो ज्ञानको फलविहीन भएर सांसारिक समुद्रमा पर्दछ। किनकि उसले परमात्मा तथा आनन्द प्राप्त गर्न सक्तैन। यसैले त्यो सांसारिक बन्धनबाट कहिल्यै मुक्त हुन सक्तैन। जीवनमा कर्म अनिवार्य भएकाले त्यसलाई परित्याग गर्न सकिँदैन। तर जुन कर्म सांसारिक भोगहरू प्राप्त गर्ने उद्देश्यले गरिन्छ, त्यसबाट सांसारिक भोग त अवश्य प्राप्त हुन्छ। तर ज्ञानको यथार्थ फल जुन मोक्ष छ, त्यसबाट ऊ सधैँका लागि बञ्चित रहन्छ। यदि कुनै कर्म ज्ञानभावपूर्वक गरिएको छ, जसमा सांसारिक भोगको कामना छैन भने त्यो कर्म मात्र अकर्म बन्दछ, जसको फल उसले भोग्नु पर्दैन। यही ज्ञान प्राप्तिको सर्वोच्च फल हो, जुन अकर्म अर्थात् निष्काम कर्मबाट प्राप्त हुन्छ। यसैले कर्म त्याग नगरेर त्यसलाई अकर्म बनाउनुपर्छ। यही ज्ञानको यथार्थ उपयोग हो।

**इमां तु भक्तिभावेन पठेद्वै शृणुयादपि।**
**लिखित्वा यत्प्रसादेन तत्सर्वं फलमश्नुते ॥६०॥**

जसले भक्तिभावपूर्वक यो गुरुगीता पाठ गर्दछ, सुन्दछ र लेख्छ त्यसले सबै फल प्राप्त गर्दछ। ॥६०॥

ज्ञानको फल मुक्ति, परमात्माको प्राप्ति र परम आनन्दको अवस्था हो। जसले ज्यादै श्रद्धापूर्वक र धेरै भक्तिभावसहित सधैँ यो गुरुगीताको पाठ गर्दछ अथवा यो सुन्दछ वा लेखेर अरूलाई दिन्छ, त्यसले परा भक्तिसहित मोक्ष प्राप्त गर्दछ अर्थात् ऊ यथार्थ रूपमा मोक्ष हुन्छ। उसलाई त्यो परम फल प्राप्त हुन्छ, जुन अन्य कर्महरूद्वारा प्राप्त हुन सक्तैन।

**गुरुगीतामिमां देवीहृदि नित्यं विभावय।**
**महाव्याधिगतैर्दुःखैः सर्वदा प्रजपेन्मुदा ॥६१॥**

हे देवी! यसैले यो गुरुगीतालाई सधैँ अनन्यभावपूर्वक आफ्नो हृदयमा धारण गर। यसैगरी महाव्याधिबाट पीडित भएका मनुष्यहरूले निरन्तर आनन्दपूर्वक यसको जप गर्नुपर्छ। ॥६१॥

भगवान् श्रीशिव देवी पार्वतीसँग भन्नुहुन्छ– हे देवी! यो गुरुगीता पढेर राख्ने मात्र साधारण पुस्तक होइन। किनकि यसमा भएका सबै स्तोत्र मन्त्र हुन्। जसको सधैँ पाठ गरेर त्यसलाई हृदयमा धारण गर्नुपर्छ अर्थात् यसको भाव ग्रहण गर्नुपर्छ। जसरी गुरुले दिएको मन्त्रको सधैँ जप गर्नाले शिष्यलाई ती गुरुको सान्निध्य प्राप्त हुन्छ तथा गुरुको कृपा प्राप्त हुन्छ; त्यसैगरी सधैँ भक्तिभावपूर्वक गुरुगीताको पाठ गर्नाले गुरुको कृपारूपी प्रसाद प्राप्त हुन्छ। जुन व्यक्ति महाव्याधिद्वारा पीडित भएको छ र यदि सधैँ यो गुरुगीताको पाठ गर्छ भने उसले गुरुको कृपाका प्रभावले आनन्द प्राप्त गर्दछ।

**गुरुगीताक्षरैकैकं मन्त्रराजमिदं प्रिये।**
**अन्ये च विविधा मन्त्राः कलां नार्हन्ति षोडशीम् ॥६२॥**

हे प्रिया! गुरुगीताका एक एक अक्षर महामन्त्र हुन् तथा अन्य जति पनि विविध मन्त्र छन्, ती सबै यसको सोह्रौं भाग बराबर पनि छैनन्। ॥६२॥

भगवान् श्रीशिव देवी भन्नुहुन्छ– हे देवी! यो गुरुगीताका सबै अक्षर महामन्त्र हुन्। मन्त्रहरूमा असीमित शक्ति रहेको हुन्छ, जसको जप गर्नाले सबै किसिमका सिद्धिहरू प्राप्त गर्न सकिन्छ। किनकि मन्त्रको शब्द र ध्वनिमा आश्चर्यजनक प्रभाव रहेको हुन्छ। जसद्वारा आश्चर्यजनक कार्य सम्पन्न हुन सक्तछ। तर गुरुगीताका सबै अक्षर महामन्त्र हुन्। यसका मन्त्रको जप गर्नाले अन्य

मन्त्रहरूको जपभन्दा सोह्र गुना धेरै फल वा लाभ प्राप्त हुन्छ। यसैले यो गुरुगीताको जप सधैँ गर्नुपर्छ। यो गुरुको कृपा प्राप्त गर्ने अमोघ साधन हो।

**अनन्तफलमाप्नोति गुरुगीताजपेन तु।**
**सर्वपापहरा देवी सर्वदारिद्र्यनाशिनी ॥६३॥**

हे देवी! गुरुगीताको जप गर्नाले अनन्त फल प्राप्त हुन्छ तथा यसले सबै किसिमको पाप र गरिबीपन विनाश गरिदिन्छ। ॥६३॥

भगवान् श्रीशिव भन्नुहुन्छ–हे देवी! यो गुरुगीताको जप गर्ने साधकले अनन्त फल प्राप्त गर्दछ। संसारमा गरिएका कर्महरूद्वारा जुन फल प्राप्त हुन्छन्, तिनीहरूको अन्त हुन्छ अर्थात् ती नित्य हुँदैनन्। किनकि ती समयसँगै नष्ट हुन्छन्। संसारमा फल प्राप्तिका लागि जे जति कर्म गरिन्छ; तिनीहरूबाट धेरै जसो पापहरूकै सञ्चय हुन्छ; जसको प्रभावले मनुष्यको दुर्गति हुन्छ। तर यो गुरुगीताको जपद्वारा सबै पाप नष्ट हुन्छन्, चित्त निर्मल अथवा पवित्र हुन्छ, आत्मशुद्धि हुन्छ तथा आत्मज्ञान प्राप्त हुने भएकाले उसको गरिबीपन पूर्ण रूपमा समाप्त हुन्छ र उसले परम आनन्दको अनुभव गर्न थाल्दछ; जसको कहिल्यै अन्त हुँदैन। उसले परम शान्ति प्राप्त गर्दछ। अज्ञानका कारणले नै उसले पापहरूमा आसक्त भएर दुःखको भोग गर्नु परेको हो।

**अकालमृत्युहन्त्री च सर्वसङ्कटनाशिनी।**
**यक्षराक्षसभूतादिचोरव्याघ्रविघातिनी ॥६४॥**

यो गुरुगीताले अकाल मृत्युलाई रोक्दै सबै किसिमका सङ्कटहरूको तथा यक्ष, राक्षस, भूत, चोर र बाघलगायतको विनाश गरिदिन्छ। ॥६४॥

जसले सधैँ गुरुगीताको पाठ गर्दछ, उसले अवश्य पनि गुरुको कृपा प्राप्त गर्दछ तथा त्यही कृपाका प्रभावले ऊ सबै किसिमका भयबाट सधैँका लागि मुक्त हुन्छ। गुरुको कृपाद्वारा असीमित बल प्राप्त हुन्छ। किनकि राजा जनक गुरुको कृपाद्वारा नै जीवन्मुक्त भए। गुरुको कृपाबाटै नचिकेताले मृत्युलाई पराजित गरे। यसैले गुरुको कृपारूपी प्रसाद प्राप्त गर्नका लागि सधैँ गुरुगीताको पाठ गर्नुपर्छ। यसको नित्य पाठ गर्ने साधक सबै किसिमका भयबाट मुक्त हुन्छ।

**सर्वोपद्रवकुष्ठादिदुष्टदोषनिवारिणी ।**
**यत्फलं गुरुसान्निध्यात्तत्फलं पठनाद् भवेत् ॥६५॥**

यो गुरुगीतका प्रभावले उत्पातहरू, कुष्ठलगायतका प्राणघातक रोगहरू र दोषहरू नष्ट हुन्छन्। गुरुको सान्निध्यबाट जुन फल प्राप्त हुन्छ, यसको पाठ गर्नाले त्यही फल प्राप्त हुन्छ। ॥६५॥

यदि कुनै सद्‌गुरुको सान्निध्य प्राप्त भयो भने त्यसलाई आफ्नो सौभाग्य सम्झिनुपर्छ। तर यो सृष्टिमा अनेकौँ अदृश्य अर्थात् देख्न नसकिने गुरु छन्। जसले आफ्नो दिव्य चेतनाका माध्यमद्वारा योग्य पात्रहरूलाई सहयोग गर्दछन्। जो जीवन्मुक्त ज्ञानी पुरुष छन्, तिनीहरूले आफ्नो अज्ञात प्रेरणाद्वारा सत्पात्रहरूलाई बाटो देखाउँछन्।

यस स्तोत्रमा बताइएअनुसार जसलाई सद्‌गुरुको सान्निध्यमा बस्ने सौभाग्य प्राप्त भएको छैन, त्यसले पनि यदि श्रद्धापूर्वक सधैँ गुरुगीताको पाठ गऱ्यो भने त्यसलाई अदृश्य गुरुको कृपा अवश्य प्राप्त हुनेछ तथा तिनै गुरुले उसलाई शारीरिक र मानसिक रोगहरूबाट मुक्त गराउन सक्नेछन्। उसको मन शान्त हुन्छ तथा मानसिक दोष नष्ट भएर उसले स्वस्थ जीवन बिताउन सक्तछ।

**महाव्याधिहरा सर्वविभूतेः सिद्धिदा भवेत् ।**
**अथवा मोहने वश्ये स्वयमेव जपेत्सदा ॥६६॥**

यो गुरुगीताको पाठ गर्नाले महाव्याधिबाट मुक्त हुन सकिन्छ र सबै किसिमको ऐश्वर्य तथा सिद्धिहरूको प्राप्ति हुन्छ एवं मोह अर्थात् मायामा फसाउनका लागि यसको पाठ आफैँले गर्नुपर्छ। ॥६६॥

कुनै कार्य सिद्ध गर्नका लागि मन्त्रको शक्ति प्रयोग गर्न सार्थक हुन्छ। यसैले अनेकौँ किसिमका कार्य सिद्धिका विभिन्न मन्त्र छन्। यी मन्त्रहरूको प्रयोग मुस्लिम, जैन र बौद्ध धर्ममा पनि भएको छ। भूत–प्रेतहरूको सिद्धिलगायत देवताहरू र परमात्मासम्मका सिद्धिका मन्त्र छन्। मार्ने, मायामा फसाउने, मन विरक्त बनाउने, वशमा पार्नेलगायतका मन्त्र छन्, जसको प्रयोग प्राचीनकालदेखि नै हुँदै आएको छ। तर भोगमा आसक्त भएका मनुष्यहरूले यसको धेरै दुरुपयोग गरे। जसले गर्दा अहिले यिनीहरूको साधनामा कमी आएको छ तथा वेदान्तले यसलाई

तिरस्कार गरिदिएको छ। गुरुगीताको पाठ गर्दा पनि व्यक्तिमा ऐश्वर्यको अभिवृद्धि हुन्छ तथा अनेकौँ किसिमका सिद्धिहरू पनि प्राप्त हुन्छन् तथा सबै किसिमका सिद्धिहरूको कारण मन हो। मन्त्रको जप गर्नाले मन एकाग्र हुन्छ; जसबाट सिद्धि प्राप्त हुन्छ। तर दुष्ट मानसिकता भएकाले यसको दुरुपयोग गर्न पनि सक्तछ। यदि कसैले मायामा फसाउने अभिप्रायले यो गुरुगीताका मन्त्रहरू उपयोग गर्न चाहन्छ भने उसले आफैँले विधिपूर्वक यसको पाठ गर्नुपर्छ। तर यसको दुरुपयोग गर्ने प्रयास गरियो भने हानि हुन सक्तछ।

**मोहनं सर्वभूतानां बन्धमोक्षकरं परम्।**
**देवराज्ञां प्रियकरं राजानं वशमानयेत् ॥६७॥**

यो गुरुगीताका पाठ गर्नेको मायाजालमा सबै प्राणी फस्दछन् र पाठ गर्ने व्यक्ति बन्धनबाट पूर्ण रूपमा मुक्त हुन्छ। ऊ देवराज इन्द्रको पनि प्रिय पात्र हुन्छ तथा राजाहरू उसको वशमा पर्दछन्। ॥६७॥

भगवान् श्रीशिवले बताउनुभएअनुसार जसले यो गुरुगीताको पाठ गर्दछ; त्यसको मायाजालमा सबै प्राणी फस्दछन्। ऊ ज्यादै नम्र, विनयशील, गुरुको भक्त र आज्ञाकारी बन्दछ। यसको प्रभावले उसको व्यक्तित्व आकर्षक हुन्छ। किनकि विनम्र व्यक्तिप्रति सबै आकर्षित हुन्छन्। यसैले सबैले उसको नजीकमा बस्ने इच्छा गर्दछन्। ऊ सद्गुणहरूले सम्पन्न हुन्छ। उसको लक्ष्य गुरुको भक्ति मात्र हुन्छ। जसले गर्दा ऊ माया, मोह, वासनालगायतका सबै बन्धनहरूबाट यथार्थ रूपमा मुक्त हुन्छ। यस्तो व्यक्ति देवराज इन्द्रका लागि पनि प्रिय हुन्छ तथा सबै राजाहरू उसको वशमा पर्दछन्। यसको सधैँ पाठ गर्नाले उसका विचारहरूमा परिवर्तन आउँछ, जुन जीवनको सर्वोत्कृष्ट उपलब्धि हो।

**मुखस्तम्भकरं चैव गुणानां च विवर्धनम्।**
**दुष्कर्मनाशनं चैव तथा सत्कर्मसिद्धिदम् ॥६८॥**

यो गुरुगीताको पाठ गर्नाले शत्रुको मुख बन्द हुन्छ अर्थात् यसको पाठ गर्नेको कसैले विरोध गर्न सक्तैन, यसले सद्गुण बढाउँछ, दुष्कर्महरू नष्ट गराउँछ र सत्कर्म सिद्ध गराइदिन्छ। ॥६८॥

सत्सङ्ग अथवा सद्ग्रन्थहरूको अध्ययनद्वारा मनुष्यको जीवनमा परिवर्तन आउँछ। जब ऊ विनयशील, जिज्ञासु, भक्तिभावसम्पन्न, सेवामुखी, आज्ञाकारी,

अहङ्कारविहीन तथा गुरुमा पूर्ण श्रद्धा र निष्ठा राख्ने हुन्छ; त्यसपछि उसले सद्गुरु पनि पाउँछ। यदि कसैले यो गुरुगीताको पाठ गर्दछ भने उसमा सद्गुणहरूको अभिवृद्धि भएर गुरु भक्ति बढ्छ। जसको प्रभावले ऊ ज्ञान प्राप्त गर्न योग्य हुन्छ। यसप्रकारको व्यक्तिबाट प्रसन्न भएर गुरुले उसलाई आफ्नो शिष्य स्वीकार गर्दछन्। जसमा गुरु भक्ति छैन, त्यो शिष्य हुन योग्य हुँदैन। यस्तो अवस्थामा उसमा गुरुको उपदेशको कुनै प्रभाव पर्दैन, जसले गर्दा ऊ शून्य नै रहन्छ। यो गुरुगीताको पहिलो फल हो।

**असिद्धं साधयेत्कार्यं नवग्रहभयापहम्।**
**दुःस्वप्ननाशनं चैव सुस्वप्नफलदायकम् ॥६९॥**

यसको पाठले असाध्य कार्यहरू सिद्ध गराइदिन्छ, नवग्रहहरूको भय रहँदैन, खराब स्वप्ना नष्ट हुन्छ र असल स्वप्नाको फल प्राप्त हुन्छ। ॥६९॥

गुरुगीता पाठको फलअनुसार पाठ गर्नेका विचारहरूमा परिवर्तन आउँछ। जसका प्रभावले उसको असाध्य कार्य पनि सिद्ध हुन्छ। गुरुको भक्ति र कृपाका प्रभावले उसको मनोबल बढ्छ। जसरी पिताको आश्रय पाएर, उनको नजीकमा बसेर बालक निश्चिन्त हुन्छ; त्यसैगरी गुरुको सान्निध्य प्राप्त भएपछि ऊ निश्चिन्त हुन्छ। मनुष्यलाई ज्योतिषीले नवग्रहको डर देखाइरहन्छन्। तर यसप्रकारका भयबाट उसलाई गुरुले मुक्त गराइदिन्छन्। मनुष्यले खराब विचारहरूका कारणले खराब स्वप्ना देख्दछ, जसबाट ऊ भयभीत हुन्छ। सद्ग्रन्थहरूको पाठ गरेपछि खराब स्वप्ना नष्ट हुन्छन् तथा असल र आनन्ददायक स्वप्ना देख्न सकिन्छ। यो सबै गुरुगीता पाठको फल हो।

**मोहशान्तिकरं चैव बन्धमोक्षकरं परम्।**
**स्वरूपज्ञाननिलयं गीताशास्त्रमिदं शिवे ॥७०॥**

हे पार्वती! यो गुरुगीतारूपी अतुलनीय शास्त्रले मायाजाललाई शान्त बनाउँछ, बन्धनबाट यथार्थ रूपमा मुक्त गराउँछ र यो आफ्नो स्वरूपको ज्ञानको भण्डार हो। ॥७०॥

भगवान् श्रीशिव देवी पार्वतीसँग भन्नुहुन्छ– हे पार्वती! यो गुरुगीता एउटा यस्तो शास्त्र हो, जसको नित्य पाठ र यसअनुसारको आचरण गर्नेको यो

संसारप्रतिको जुन मोह, आसक्ति र कामना छ, त्यो सबै शान्त वा नष्ट हुन्छ। गुरु मात्र उसको इष्टदेवता हुनेछन्, जसको प्रभावले संसारप्रतिको आसक्ति परित्याग गरेर ऊ यी सांसारिक बन्धनहरूबाट सधैँका लागि मुक्त हुन्छ। यसबाहेक गुरुका कृपाले उसलाई आफ्नो यथार्थ स्वरूपको ज्ञान हुन्छ तथा यही ज्ञान उसको मुक्तिको कारण बन्दछ।

**यं यं चिन्तयते कामं तं तं प्राप्नोति निश्चयम्।**
**नित्य सौभाग्यदं पुण्यं तापत्रयकुलापहम् ॥७१॥**

मनुष्यले जे जे अभिलाषा राखेर यो गुरुगीताको पाठ र चिन्तन गर्दछ, उसले त्यो निश्चित रूपमा प्राप्त गर्दछ। यो गुरुगीता सधैँ सौभाग्य र पुण्य प्रदायक तथा तीनोटै तापहरू अर्थात् आध्यात्मिक, आधिभौतिक र आधिदैविकलाई शान्त गराउन सक्षम छ। ॥७१॥

कुनै पनि फल मनुष्यको इच्छा र अभिलाषाअनुसार प्राप्त हुन्छ। जसले जस्तो अभिलाषा राख्दछ, उसको सङ्कल्प त्यसैअनुसारको हुने भएकाले ऊ त्यो प्राप्त हुने कर्ममा एकाग्रतापूर्वक लाग्छ। जो जुन कर्ममा दृढतापवूर्वक लाग्दछ; त्यसमा परमात्माले पनि उसलाई सहयोग गर्नुहुन्छ। खराब काममा लाग्दा प्रकृतिको नियमअनुसार खराब शक्तिहरू उसलाई सहयोग गर्नका लागि आफैँ आउँछन् तथा सद्कर्मको सङ्कल्प गर्दा ईश्वरीय शक्तिहरू उसको सहयोग गर्न आफैँ आउँछन्। संसारमा भइरहेका श्रेष्ठ कार्यहरूमा ईश्वरीय शक्तिहरूको योगदान हुने भएकाले अनेकौँ महान् कार्यसम्पन्न भएका छन्। यी दिव्य शक्तिहरूको योगदान प्राप्त नभएको अवस्थामा अल्प बुद्धि भएको मनुष्यले कुनै महान् कार्य गर्न सक्तैन।

यसैगरी यदि मनुष्यमा आत्मज्ञान प्राप्त गर्ने अभिलाषा रहेको छ र त्यसैलाई ध्यानमा राखेर सङ्कल्प गर्दै यो गुरुगीताको पाठ र चिन्तन गर्दछ भने उसको यो अभिलाषा निश्चित रूपमा पूर्ण हुने छ। यसबाट उसको सौभाग्य उदय हुने छ, जसले पुण्यरूपी फल दिन्छ। यो कार्यमा उसलाई उत्तम शक्तिहरूले अवश्य सहयोग गर्ने छन्। यही ईश्वरीय कृपाका प्रभावले तीनोटै ताप शान्त भएर उसले परमशान्ति प्राप्त भएको अनुभव गर्दछ।

**सर्वशान्तिकरं नित्यं तथा वन्ध्यासुपुत्रदम् ।**
**अवैधव्यकरं स्त्रीणां सौभाग्यस्य विवर्धनम् ॥७२॥**

यो गुरुगीता सबै किसिमको शान्ति प्रदान गर्न, सन्तानविहीन स्त्रीलाई पुत्रवती बनाउन, पति जीवित भएकी स्त्रीहरूको विधवापन रोक्न र सौभाग्य अभिवृद्धि गराउन सक्षम छ । ॥७२॥

यो गुरुगीताको पाठ गर्ने साधकले सबै किसिमको शान्ति प्राप्त गर्दछ। उसलाई गुरुको कृपाले निश्चिन्त बनाइदिन्छ। किनकि गुरुका कृपाले उसका सबै अभिलाषा परिपूर्ण हुन्छन्। यसैगरी सन्तानविहीन स्त्री पुत्रवती हुन्छे तथा पति भएकी स्त्रीले विधवा हुनु पर्दैन र उसको सौभाग्य वृद्धि हुन्छ। गुरुमा विश्वास राख्नाले यी सबै फल उसले प्राप्त गर्दछ। परमात्माले पनि गुरुकै माध्यमद्वारा फल दिनु हुन्छ। जुन फल देवताहरूका कृपाले प्राप्त हुन्छ, त्यो पनि परमात्माबाटै प्राप्त भएको हो। किनकि सबैमा परमात्माको शक्तिले काम गरिरहेको हुन्छ र त्यही शक्तिले गुरुमा पनि काम गर्दछ। जसले गर्दा गुरुमा श्राप र वरदान दिने शक्ति विद्यमान रहन्छ। यो गुरुगीताको मन्त्रले त्यो शक्ति आह्वान गर्दछ, जसबाट उचित फल प्राप्त हुन्छ।

**आयुरोग्यमैश्वर्यं पुत्रपौत्रप्रवर्धनम् ।**
**निष्कामजापी विधवा पठेन्मोक्षमवाप्नुयात् ॥७३॥**

यो गुरुगीताले आयु, आरोग्य, ऐश्वर्य र छोरा–नातिको अभिवृद्धि गराउँछ। यसैगरी कुनै विधवाले निष्कामभाव–पूर्वक यसको पाठ गरिन भने उनले मोक्ष प्राप्त गर्दछिन् । ॥७३॥

कामना राखेर गरिएको कर्मको फल त्यो कामना पूर्तिका रूपमा प्राप्त हुन्छ तथा निष्कामभावपूर्वक गरिएको कर्म मोक्षको साधन बन्दछ। गीतामा भगवान् श्रीकृष्णले अर्जुनलाई दिनुभएको सर्वोत्कृष्ट उपदेशअनुसार निष्कामभावपूर्वक तथा फल प्राप्त गर्ने अभिलाषा परित्याग गरेर आफ्नो कर्तव्य सम्झिएर युद्ध गर्‍यौ भने तिमीलाई पाप लाग्दैन भनिएको छ। यसमा पनि यदि आयु, आरोग्य, ऐश्वर्य र छोरा–नातिलगायतको कामना राखेर गुरुमा श्रद्धा राख्दै गुरुगीताको पाठ गर्नेले यसको फल अवश्य प्राप्त गर्दछ र उसको वंशको अभिवृद्धि हुन्छ तथा यदि कुनै विधवाले निष्कामभावपूर्वक यसको पाठ गरिन् भने उनले मोक्ष प्राप्त गर्ने कुरा

बताइएको छ। ईश्वरीय विधानअनुसार कुनै पनि कर्म फल नदिई समाप्त वा नष्ट हुँदैन।

**अवैधव्यं सकामा तु लभते चान्यजन्मनि।**
**सर्वदुःखभयं विघ्नं नाशयेत्तापहारकम् ॥७४॥**

यदि विधवाले यसको सकामभावपूर्वक जप गरिन् भने उनले अर्को जन्ममा सन्ताप विनाश गर्ने सौभाग्य प्राप्त गर्दछिन् तथा उनको सबै दुःख, भय, विघ्न र सन्ताप विनाश वा नष्ट हुन्छ। ॥७४॥

प्रकृतिको नियमअनुसार सबै कर्मको फल अवश्य प्राप्त हुन्छ। यसैले असल कर्मको असल र खराब कर्मको खराब फल प्राप्त हुन्छ। किनकि कुनै पनि कर्म फल नदिई नष्ट हुँदैन। यसैले कर्महरूबाटै संस्कार बन्दछ र त्यही संस्कारले अर्को जन्ममा आफ्नो फल दिन्छ। जो आज सुखी, सम्पन्न, ऐश्वर्यशाली, रोग–व्याधिबाट मुक्त छ, त्यो उसको पहिलेको जन्मको सुसंस्कारको फल हो। यसका विपरीत जो दुःखी, गरीब, विघ्न–बाधासम्पन्न र पीडित छ, त्यो उसले पहिले गरेका खराब कर्महरूको फल भोगिरहेको हो। यसै सन्दर्भमा भनिएको छ, यदि कुनै विधवा स्त्रीले सकामभावपूर्वक गुरुगीताको पाठ गरिन् भने अर्को जन्ममा उनले विधवा हुनु पर्दैन तथा उनलाई सौभाग्य प्राप्त हुन्छ। किनकि उनले पहिलो जन्मका खराब कर्महरूको फल यो जन्ममा भोगिसकेकी हुन्छिन्, यसैले त्यसबाट मुक्त भइन्। अब सद्कर्म मात्र गर्नुपर्छ।

**सर्वपापप्रशमनं धर्मकामार्थमोक्षदम्।**
**यं यं चिन्तयते कामं तं तं प्राप्नोति निश्चितम् ॥७५॥**

यो गुरुगीताको पाठले सबै पाप नष्ट गराउँदै धर्म, अर्थ, काम र मोक्ष प्राप्त गराउँदछ। जे–जेको अभिलाषा राखेर यसको पाठ गरिन्छ, त्यो अवश्य पूर्ण वा सिद्ध हुन्छ। ॥७५॥

मनुष्यमा भएको अज्ञानका कारणले उसमा कुविचार उत्पन्न हुन्छ र यसको कारकतत्त्व पाप कर्म हो। यो कुविचार मनको उपज हो, जुन पूर्व जन्महरूका संस्कारहरूबाट उत्पन्न हुन्छ। यिनै संस्कारहरूका कारणले उसलाई यस जन्ममा त्यसैअनुसारको वातावरण प्राप्त हुन्छ। जसका प्रभावले ऊ पाप कर्ममा लाग्दछ तथा उसले त्यसको फल अनिवार्य रूपमा भोग्नुपर्छ। यसबाट बच्ने उपायस्वरूप उसले

कुनै सद्गुरुका शरणमा गएर ज्ञान प्राप्त गर्नुपर्छ किनकि गुरुबाट प्राप्त भएको शिक्षा र ज्ञानले मात्र उसलाई सन्मार्गमा लगाउन सक्तछ। जसको प्रभावले उसलाई ईश्वरीय सहयोग प्राप्त हुन्छ। गुरुलाई परमात्मा सम्झिएर उनको सेवामा गर्नाले उसलाई धर्म, अर्थ, काम र मोक्षको प्राप्ति हुन्छ तथा यसैबाट उसका सबै पापहरू नष्ट भएर ऊ परम शुद्ध हुन्छ। यसपछि उसले जे जे अभिलाषा गर्दछ, त्यो सबै पूर्ण हुन्छ। गुरुगीताको पाठ गर्नाले गुरुको कृपा र सान्निध्य प्राप्त हुन्छ।

**लिखित्वा पूजयेद्यस्तु मोक्षश्रियमवाप्नुयात्।**
**गुरुभक्तिर्विशेषेण जायते हृदि सर्वदा ॥७६॥**

यदि कसैले यो गुरुगीता लेखेर त्यसको पूजा गऱ्यो भने उसले लक्ष्मी र मोक्ष प्राप्त गर्दछ र उसको हृदयमा सधैँ विशेष रूपमा गुरुभक्ति उत्पन्न भइरहन्छ। ॥७६॥

गुरुको भक्तिलाई सुदृढ बनाउनका लागि शिष्यले सधैँ गुरुका गुणहरूको स्मरण गर्नुपर्छ, उनको नाम तथा उनलाई सधैँ सम्झनुपर्छ। यसरी सधैँ उनका गुणको कीर्तन गर्नाले उनकै नजीकमा भएको अनुभव हुन्छ अर्थात् उनी सधैँ मसँगै छन् भन्ने अनुभूति हुन्छ। जसले गुरुलाई बिर्सन्छ, त्यसलाई उनले पनि बिर्सन्छन्। यसैले गुरु भक्तिलाई सुदृढ बनाउनका लागि यो गुरुगीता लेखेर यसको पूजा गर्नुपर्छ। यसैगरी थोरै समयसम्म मात्र गुरुका नजीकमा बस्ने अवसर प्राप्त भए तापनि त्यो क्षणलाई सधैँ सम्झनुपर्छ तथा यो गुरुको महिमास्वरूपी गीता लेखेर यसको सधैँ पूजा गर्नाले उनको कृपा प्राप्त भइरहन्छ। जुन कार्य गुरुले गर्न सक्तैनन्, त्यो भन्दा धेरै कार्य उनको वचन, शब्द, जप र कीर्तनले गर्दछ। यदि कसैले शुद्ध मनद्वारा गुरुका वचन स्वीकार गर्न सक्यो भने उसलाई लक्ष्मी, ऐश्वर्य तथा मोक्षको प्राप्ति पनि हुन सक्तछ। यसैले गुरुभन्दा गुरुका वचन धेरै फलदायक हुन्छन्।

**जपन्ति शाक्ताः सौराश्च गाणपत्याश्च वैष्णवः।**
**शैवाः पाशुपताः सर्वे सत्यं सत्यं न संशयः ॥७७॥**

शक्ति, सूर्य, गणपति, वैष्णव, शैव र प्रशुपतिका मतवादीले यो गुरुगीताको पाठ गर्दछन्, यो सत्य हो, यो सत्य हो, यसमा कुनै सन्देह छैन। ॥७७॥

अध्यात्म जगत्मा सबैतिर गुरुको महत्त्वलाई स्वीकार गरिएको छ। किनकि जुनसुकै मतवादी भए तापनि बिना गुरु कसैले पनि परमात्मा वा मोक्ष प्राप्त

गर्न सक्तैन। किनकि यो अज्ञात मार्ग हिँड्ने र अन्तिम लक्ष्यमा पुग्ने रहस्यका विषयमा अन्यले नभएर गुरुले मात्र बताउन सक्तछन्। यसैले गुरुको महिमालाई शक्तिका उपासक, सूर्यका उपासक, गणेशका उपासक, शिवका उपासक, पशुपतिका उपासक, वैष्णवका उपासकलगायत सबैले सहर्ष स्वीकार गर्दछन्। यो गुरुगीतामा गुरुको महिमाका विषयमा वर्णन गरिएको छ। जसले गर्दा यी सबैले यो गीताको सधैँ पाठ गर्दछन् र गुरुको कृपारूपी प्रसाद प्राप्त गर्दछन्। किनकि बिना गुरु कोही पनि आध्यात्मको मार्गमा हिँड्न सक्तैन। यो एकमात्र सत्य हो, यसमा कुनै सन्देह अथवा द्विविधा छैन।

**जपं हीनासनं कुर्वन् हीनकर्माफलप्रदम्।**
**गुरुगीतां प्रयाणे वा सङ्ग्रामे रिपुसङ्कटे ॥७८॥**
**जपन् जयमवाप्नोति मरणे मुक्तिदायिका।**
**सर्वकर्माणि सिद्ध्यन्ति गुरुपुत्रे न संशयः ॥७९॥**

आसनमा नबसी गरिएको जप नीच कर्म हुन्छ र निष्फल हुन्छ। यात्रामा, युद्धमा, शत्रुले उत्पात मच्चाएको अवस्थामा गुरुगीताको पाठ गर्नाले विजय प्राप्त हुन्छ। यसैगरी अन्त समयमा जप गर्नाले मोक्ष प्राप्त हुन्छ। गुरु पुत्रका अर्थात् शिष्यका सबै कार्य सिद्ध हुनेमा कुनै द्विविधा छैन। ॥७८॥ ॥७९॥

मनुष्यलाई सबै किसिमको सहयोग परमात्माबाटै प्राप्त हुन्छ। तर उहाँले सीधै सहयोग गर्नुहुन्न; किनकि उहाँ आफैँ निर्गुण–निराकार हुनुहुन्छ। उहाँले कसैलाई निमित्त बनाएर त्यसका माध्यमद्वारा कसैलाई सहयोग गर्नुहुन्छ। मनुष्यले मनुष्यलाई सहयोग गर्छ भने त्यसले पनि परमात्माको शक्तिद्वारा नै गर्दछ। तर त्यो सहयोग गर्ने मनुष्य निमित्त मात्र हुन्छ। यदि कसैले मैले फलानालाई सहयोग गरेँ भन्ने सम्झन्छ भने त्यो उसको अज्ञान र घमण्ड मात्र हो। यसैगरी गुरुका माध्यमद्वारा जुन कृपा र सहयोग प्राप्त हुन्छ, त्यो पनि परमात्माबाटै भएको हो तथा गुरु माध्यम मात्र हुन्। यसैले गुरुको कीर्तन वा जप गर्नु परमात्माकै कीर्तन वा जप गर्नु हो। गुरुगीताको पाठ गर्नु नै गुरुको सान्निध्य प्राप्त गर्ने सर्वोत्कृष्ट साधन हो। तर पाठ गर्ने विधिका विषयमा प्रकाश पार्ने सिलसिलामा बताइएअनुसार जप सधैँ आसनमा बसेर मात्र गर्नुपर्छ, जसले गर्दा ध्यान केन्द्रित होस्। किनकि अन्य अवस्थामा गरिएको जप नीच कर्म हुन्छ तथा त्यसको कुनै फल प्राप्त हुँदैन। यसैले ध्यान गर्दाका अवस्थामा मात्र गुरु र शिष्यको सम्बन्ध स्थापित हुन्छ तथा यदि ध्यान

गर्दाको स्थितिमा गुरुगीताको जप गर्ने साधक यात्रामा, युद्धमा, शत्रुद्वारा मच्चाइएको उत्पातमा सफल हुन्छ। यदि कसैले अन्त समय अर्थात् मृत्यु हुन लागेको अवस्थामा गुरुको स्मरण गऱ्यो भने उसले मोक्ष प्राप्त गर्छ। यदि कसैले सधैँ गुरुको स्मरण गर्दछ भने उसका सबै कार्य सिद्ध हुन्छन्। यसप्रकारको मनुष्यलाई गुरुका माध्यमद्वारा परमात्माले आफैँ सहयोग गर्नु हुनेमा कुनै द्विविधा छैन।

**गुरुमन्त्रो मुखे यस्य तस्य सिद्ध्यन्ति नान्यथा।**
**दीक्षया सर्वकर्माणि सिद्ध्यन्ति गुरुपुत्रके ॥८०॥**

जसको मुखमा गुरु मन्त्र रहेको छ, त्यसका सबै कर्म सफल हुन्छन्। दीक्षाका प्रभावले शिष्यका सबै कार्य सिद्ध हुन्छन्। ॥८०॥

कुनै पनि सद्गुरुले समूहलाई दीक्षा दिँदैनन्। जसले गुरुको शिष्य बन्न स्वीकार गर्दछ; त्यसलाई आफ्नो नजीकमा राखेर केही नियम र संयमको पालना गराउँछन्, उसलाई अध्यात्मविद्यासँग परिचित गराउँछन्, वेद पढाउँछन्, उसमा भएका मानसिक विकारहरू हटाइदिन्छन्, उसलाई ज्ञानको महत्त्वका विषयमा बताइदिन्छन् तथा उसको चित्त शुद्ध बनाइदिन्छन्। त्यसपछि ऊ दीक्षा दिन योग्य भएको वा नभएको भन्ने निश्चय गर्न कठिन परीक्षा लिन्छन्। यदि उसमा कुनै कमी रहेको छ भने उसलाई अर्को अवसर दिन्छन्। जब गुरु यो दीक्षा दिन योग्य छ र यसले प्राप्त भएको ज्ञानको दुरुपयोग गर्दैन भन्ने निश्चयमा पुग्छन्, त्यसपछि कुनै राम्रो समयमा उसलाई दीक्षा दिएर आफ्नो वास्तविक शिष्य बनाउँछन्। त्यस समयमा उनले विधि–विधानअनुसारको आवश्यक कर्म सम्पन्न गरिसकेपछि सबैभन्दा पहिले उसको जीवनसँग सम्बन्ध विच्छेद गराइदिएर उसलाई नयाँ जीवन बाँच्ने उपदेश दिन्छन्। त्यस समयमा उसको नाम, गोत्रलगायत सबै परिवर्तन हुन्छ र उसको वेशभूषा पनि फेरिन्छ। यो उसको नयाँ जीवनको शुरुवात हो। यससँगै उनले शिष्यलाई गुरुमन्त्र दिन्छन्, जसको सधैँ अनिवार्य रूपमा जप गर्नुपर्छ। किनकि मन्त्र सामान्य भए तापनि त्यो मन्त्रमा गुरुको शक्ति विद्यमान रहेको हुन्छ, जसको लाभ शिष्यले चाँडै प्राप्त गर्दछ। उसलाई आत्माको अनुभूति गराउने दायित्व पनि गुरुकै हुन्छ। किनकि दीक्षा पाइसकेपछि शिष्य पूर्ण रूपमा गुरुमा समर्पित हुन्छ। यसपछि उसले सधैँ गुरु मन्त्रको जप गर्छ र यसैका प्रभावले उसका सबै कार्य सिद्ध हुन्छन्, तथा यसपछि ऊ यथार्थ रूपमा रूपान्तरित हुन्छ।

**भवमूलविनाशाय चाष्टपाशनिवृत्तये।**
**गुरुगीताम्भसि स्नानं तत्त्वज्ञः कुरुते सदा ॥८१॥**

**सर्वशुद्धः पवित्रोऽसौ स्वभावाद्यत्र तिष्ठति।**
**तत्र देवगणाः सर्वे क्षेत्रपीठे चरन्ति च ॥८२॥**

तत्त्वज्ञ पुरुष संसाररूपी जड नष्ट गर्नका लागि आठ प्रकारका बन्धन अर्थात् संशय, दया, भय, सङ्कोच, निन्दा, प्रतिष्ठा, कुलको अभिमान र सम्पत्ति परित्याग गर्नका लागि यो गुरुगीतारूपी गङ्गामा स्नान गरिरहन्छन्। किनकि जहाँ स्वभावैले यथार्थ रूपमा शुद्ध र पवित्र महापुरुष बस्दछन्, त्यो तीर्थमा सबै देवता घुमिरहेका हुन्छन्। ॥८१॥ ॥८२॥

जो तत्त्वका ज्ञाता पुरुष छन्, जसले यो सृष्टिको मूल तत्त्व परब्रह्मका विषयमा ज्ञान हासिल गरिसकेका छन्, ती सांसारिक भोगबाट निवृत्त हुन्छन् अर्थात् तिनीहरूले सांसारिक भोग परित्याग गर्दछन्। उनीहरू त्यसमा आसक्त रहँदैनन्। तर जो संसारको आदिकारण हुनुहुन्छ; जसका माध्यमद्वारा यो संसाररूपी रूख मौलाउँछ, त्यो मूल पनि नष्ट गर्नका यी तत्त्वज्ञ पुरुष पनि गुरुका शरणमा परिरहन्छन्। तिनीहरूले पनि सधैँ यो गुरुगीतारूपी गङ्गामा स्नान गर्दछन्, जसको प्रभावले उनीहरूले बन्धनबाट यथार्थ रूपमा मुक्त हुँदै परम आनन्दस्वरूप परब्रह्ममा निवास गर्छन्। यो संसाररूपी रूख नष्ट भएपछि पनि उनीहरूले जुन त्यसका आठ प्रकारका अति सूक्ष्म बन्धन छन्, त्यसको विनाशका लागि सधैँ गुरुगीताको पाठ गर्दछन्। जसले गर्दा गुरुसँग सम्बन्ध स्थापित भइरहन्छ। यी आठ प्रकारका सूक्ष्म बन्धनअन्तर्गत संशय, दया, भय, सङ्कोच, निन्दा, प्रतिष्ठा, कुलको अभिमान र सम्पत्ति पर्छन्। यिनको अस्तित्व रहिरह्यो भने यिनीहरूले फेरि संसारमा आसक्त बनाउन सक्तछन्। यसैले तत्त्वज्ञ पुरुषले पनि गुरु परित्याग गर्दैनन्। जसले यी पाशाहरूलाई पनि छिनाइसकेका छन्, ती स्वभावैले शुद्ध र परमात्मा समान हुन्छन्। यस्ता ब्रह्मज्ञानी महापुरुष जहाँ बस्छन्, त्यही तीर्थ बन्छ। त्यहाँ देवताहरू पनि घुमिरहेका हुन्छन्। तिनीहरू सबैका लागि पूज्य हुन्छन्।

**आसनस्था शयना वा गच्छतस्तिष्ठन्तोऽपिवा।**
**अश्वारूढाः गजारूढाः सुषुप्ता जाग्रतोऽपिवा ॥८३॥**
**शुचिभूता ज्ञानवन्तो गुरुगीतां जपन्ति ये।**
**तेषां दर्शसंस्पर्शात् पुनर्जन्म न विद्यते ॥८४॥**

जुन पवित्र ज्ञानी पुरुषले आसनमा बसेर वा सुतेर, उभिएर वा हिँड्दै गरेको घोडा या हात्तीमा सवार भएर, जाग्रतावस्था

वा सुषुप्तावस्थामा यो गुरुगीताको जप गर्छन्, तिनको दर्शन
र स्पर्श गर्नाले पुनर्जन्म हुँदैन। ॥८३॥ ॥८४॥

यो गुरुगीताको अतुलनीय महिमाका विषयमा प्रकाश पार्ने सिलसिलामा भगवान् श्रीशिव भन्नुहुन्छ– जुन साधकले यो गुरुगीता पाठ गर्छ, उसले साधना पूर्ण भएपछि सिद्धि प्राप्त गर्छ। यसमा गुरुको कृपा पनि आवश्यक हुन्छ। तर यस्ता कुनै सद्गुरु प्राप्त हुन्, जुन तत्त्वज्ञानी पनि हुन् र जसले आत्माको अनुभूति गरिसकेका छन्, जो सबै किसिमका बन्धनहरूबाट यथार्थ रूपमा मुक्त भइसकेका छन्, जसमा कुनै वासना छैन, जो ममतारहित र शान्त छन्, जो करुणाले परिपूर्ण छन्, जसको कुनै अभिलाषा छैन। उनले पनि यदि यो गुरुगीता जप गरिरहेको भेटियो भने उसको दर्शन मात्र र उसका चरणको स्पर्श गर्ने व्यक्ति पुनर्जन्मबाट मुक्त हुन्छ अर्थात् उसको पुनर्जन्म हुँदैन। यसप्रकारका ज्ञानी गुरु जुनसुकै आसनमा बसेका हुन्, सुतेका हुन्, उठेका हुन् अथवा हिँडिरहेका हुन्, हात्ती वा घोडामा सवार हुन् अथवा जग्रतावस्था वा निद्रावस्थामा हुन् यसमा कुनै अन्तर छैन। जसले उनको दर्शन गर्ने सौभाग्य पायो त्यो धन्य हुन्छ।

**कुशदूर्वासने देवी ह्यासने शुभ्रकम्बले।**
**उपविश्य ततो देवी जपेदेकाग्रमानसः ॥८५॥**

हे देवी! कुश र दूबोको आसनमा सेतो कम्बल ओछ्याएर
त्यसमा बसेर एकाग्र मनद्वारा यसको अर्थात् गुरुगीताको जप
वा पाठ गर्नुपर्छ। ॥८५॥

भगवान् श्रीशिव गुरुगीता जप वा पाठ गर्ने विधिमा प्रकाश पार्ने सिलसिलामा देवी पार्वतीसँग भन्नुहुन्छ– हे देवी! साधकले शुद्ध आसनमा बसेर यो गुरुगीताको जप वा पाठ गर्नुपर्छ। जुन आसन कुश र दूबोबाट बनेको होस् तथा त्यसमाथि सेतो कम्बल ओछ्याएर त्यसमा बस्नुपर्छ र एकाग्र गरिएको मनद्वारा यो गुरुगीताको जप वा पाठ गर्नुपर्छ। यसरी जप वा पाठ गर्दाका अवस्थामा मन शान्त भयो भने मात्र त्यसबाट लाभ हुन्छ।

**शुक्लं सर्वत्र वै प्रोक्तं वश्ये रक्तासनं प्रिये।**
**पद्मासने जपेन्नित्यं शान्तिवश्यकरं परम् ॥८६॥**

सामान्यतया सेतो आसन उत्तम हुन्छ। तर मायाको जालमा
फसाउनका लागि रातो आसनको आवश्यकता पर्दछ। हे

प्रेयसी! शान्ति प्राप्त गर्न वा मायाजालमा फसाउन सधैँ पद्मासनमा बसेर जप वा पाठ गर्नुपर्छ। ॥८६॥

गुरुगीताको जप गर्दाका अवस्थामा आसनमा पनि ध्यान पुऱ्याउन आवश्यक हुन्छ। यसैले भगवान् श्रीशिव भन्नुहुन्छ– हे प्रेयसी! कुश र दूबोको आसनमाथि सेतो कम्बल ओछ्याउनुपर्छ। किनकि सेतो वस्त्रले शान्ति प्रदान गर्दछ। तर यदि कुनै साधकले मायाजालको प्रयोग गर्ने अभिलाषा राख्छ भने उसले रातो कम्बल प्रयोग गर्नुपर्छ र दुबै अवस्थामा पद्मासनमा बसेर जप गर्नुपर्छ। जसले शरीर अचल होस् र थकावटको अनुभूति नहोस्। जप गर्दाका अवस्थामा जुन ऊर्जा प्रवाह हुन्छ, त्यो जमीनमा जान नपाउने आसन उपयुक्त हुन्छ।

**वस्त्रासने च दारिद्र्यं पाषाणे रोगसम्भवः।**
**मेदिन्यां दुःखमाप्नोति काष्ठे भवति निष्फलम् ॥८७॥**

कपडाको आसनमा बसेर जप गर्दा गरिबीपन आउँछ, ढुङ्गामाथि बसेर जप गर्दा रोग लाग्छ, जमिनमा बसेर जप गर्दा दुःख आइलाग्छ र काठको आसनमा बसेर गरिएको जप निष्फल हुन्छ। ॥८७॥

जुन किसिमको जप गर्नु पर्ने छ, त्यसैअनुसारको विधि अपनाउनुपर्छ। यसरी नियम, संयम र अनुशासनको पालना गर्ने साधकले चाँडै लाभ प्राप्त गर्दछ। मर्यादाविहीन कुनै पनि कार्यबाट राम्रो फल पाउन सकिँदैन। मनका वृत्तिहरूलाई एकाग्र गराउनका लागि उचित आसन, बस्ने तरिका, मुद्रालगायत आवश्यक हुन्छ। किनकि जप गर्दाका अवस्थामा मन स्थिर हुनुपर्छ। यसैले उपयुक्त आसनमा बसेर मात्र जप गर्नुपर्छ। यसकारण जप गर्दा कपडाको आसन उपयुक्त हुँदैन। यसैगरी ढुङ्गामा, जमिनमा अथवा काठमा बसेर पनि जप गर्नु हुँदैन। किनकि यसबाट लाभभन्दा हानि हुने सम्भावना धेरै हुन्छ तथा विधिविहीन जपद्वारा कुनै कार्य सफल हुँदैन।

**कृष्णाजिने ज्ञानसिद्धिः मोक्षश्री व्याघ्रचर्मणि।**
**कुशासने ज्ञानसिद्धिः सर्वसिद्धिस्तु कम्बले ॥८८॥**

कालो मृगको छाला र कुशको आसनमा बसेर जप गर्नाले ज्ञान प्राप्त हुन्छ। यसैगरी बाघको छालामा बसेर जप गर्दा

मुक्ति प्राप्त हुन्छ। तर कम्बलमा बसेर जप गर्दा सबै सिद्धि प्राप्त हुन्छ। ॥८८॥

आसनका सम्बन्धमा बताइएअनुसार कालो मृगको छाला र कुशको आसनमा बसेर जप गर्ने साधकले ज्ञान प्राप्त गर्दछ। यसैगरी बाघको छालामा बसेर जप गर्नेले मुक्ति प्राप्त गर्दछ। तर कम्बलको आसनमा बसेर जप गर्नेले सबै सिद्धि प्राप्त गर्छ। यसैले साधकका लागि कम्बलको आसनलाई सर्वोत्कृष्ट बताइएको छ। किनकि कम्बलको आसनले ताप रोक्ने भएकाले शरीरको ऊर्जाले जमीनमा प्रवेश गर्न पाउँदैन, जसले गर्दा शरीरमा उत्पन्न भएको ऊर्जाको प्रवाह माथितिर जान्छ र त्यसले मस्तिष्कमा सुषुप्तावस्थामा रहेका शक्तिहरूलाई जाग्रतावस्थामा ल्याइदिन्छ। जसका माध्यमद्वारा आत्माको अनुभूति हुन्छ।

**आग्नेय्यां कर्षणं चैव वायव्यां शत्रुनाशनम्।**
**नैर्ऋत्यां दर्शनं चैव ईशान्यां ज्ञानमेव च ॥८९॥**

आग्येनकोणतिर मुख फर्काएर जप गर्नाले आकर्षण बढ्छ, वायव्यकोणतिर मुख फर्काएर जप गर्नाले शत्रुको विनाश हुन्छ, नैर्ऋत्यकोणतिर मुख फर्काएर जप गर्नाले परमात्माको दर्शन हुन्छ भने ईशानकोणतिर मुख फर्काएर जप गर्नाले ज्ञान प्राप्त हुन्छ। ॥८९॥

मन्त्रको जपका लागि दिशाहरू पनि प्रभावशाली हुन्छन्। त्यसलाई ध्यानमा राख्दै विशेष कार्यको सिद्धिका लागि विशेष दिशातिर मुख फर्काएर बस्नुपर्छ। किनकि विभिन्न दिशाहरूबाट विभिन्न किसिमको ऊर्जाका तरङ्गहरू प्रवाहित भइरहेका हुन्छन्। जसले मनुष्यको शरीरमा प्रवेश गरेर उसको ऊर्जालाई प्रभावित बनाउँछन्, जसको शरीर र मनमा अलगअलग प्रभाव पर्दछ। यसैले जप गर्न बस्दा दिशामा ध्यान पुऱ्याउन आवश्यक हुन्छ। आग्नेयकोण अर्थात् दक्षिणपूर्व दिशातिर मुख फर्काएर जप गर्नाले आकर्षण बढ्छ। यसैगरी वायव्यको अर्थात् उत्तर–पश्चिम दिशातिर मुख फर्काएर जप गर्नाले शत्रुहरू नष्ट वा शक्तिविहीन हुन्छन्। यसरी नै नैर्ऋत्यकोण अर्थात् दक्षिण–पश्चिम दिशातिर मुख फर्काएर जप गर्नाले परमात्माको दर्शन हुन्छ। यसैगरी ईशानकोण अर्थात् उत्तर–पूर्व दिशातिर मुख फर्काएर जप गर्नाले ज्ञान प्राप्त हुन्छ। यसैले यो नियममा ध्यान पुऱ्याउन आवश्यक हुन्छ।

**उदङ्मुखः शान्तिजाप्ये वश्ये पूर्वमुखस्तथा।**
**याम्ये तु मारणं प्रोक्तं पश्चिमे च धनागमः ॥९०॥**

उत्तर दिशातिर मुख फर्काएर जप वा पाठ गर्नाले शान्ति प्राप्त हुन्छ; पूर्व दिशातिर फर्किएर जप वा पाठ गर्नाले वशमा गराउने कार्य सिद्ध हुन्छ, दक्षिणदिशातिर फर्किएर जप गर्नाले मारण (मार्नु) सिद्ध हुन्छ तथा पश्चिम दिशातिर फर्किएर जप गर्नाले धन प्राप्त हुन्छ। ॥९०॥

दिशाहरूलाई मुख्य रूपमा आठ भागमा विभाजन गरिएको छ। जसमा चार दिशाहरूतिर फर्किएर जप वा पाठ गर्दा प्राप्त हुने फलका विषयमा यसभन्दा पहिलेको श्लोकमा बताइसकिएको छ भने अन्य चार दिशाको फलका सम्बन्धमा यसमा स्पष्ट पारिने छ। जसमध्ये उत्तर दिशातिर फर्किएर जप गर्नाले शान्ति प्राप्त हुन्छ। पूर्वतिर फर्किएर जप गर्नाले अरूलाई वशमा राख्ने शक्ति प्राप्त हुन्छ। दक्षिणतिर फर्किएर जप गर्नाले मारण (मार्नु) सिद्ध हुन्छ। पश्चिमतिर फर्किएर जप गर्नाले धन प्राप्त हुन्छ। यसकारण साधकले आफ्नो उद्देश्यलाई दृष्टिगत गर्दै दिशा निर्धारण गर्नुपर्छ।

यसैगरी कुनै पनि मन्त्रलाई सिद्ध गर्नका लागि स्थान, समय, आसन र दिशामा ध्यान पुऱ्याउन आवश्यक हुन्छ, जसले गर्दा त्यसका अनुसारको फल प्राप्त हुन्छ। केही साधनाहरू पवित्र स्थानमा गरिन्छ भने कुनै श्मशानघाटमा, कुनै आधा रात्रिमा गरिन्छ भने कुनै प्रातःकालमा वा सन्ध्याकालीन समयमा गरिन्छ। यसरी नै केही साधनाहरू एउटै आसनमा बसेर गरिन्छ भने केहीका लागि अलग-अलग आसन र मुद्राहरूको आवश्यकता पर्दछ। यी सबैमा ध्यान पुऱ्याउँदै गुरुले दिएको मार्ग निर्देशनअनुसार यिनीहरूको चयन गर्नुपर्छ अन्यथा स्वेच्छाचारी भएर गर्दा त्यसको दुष्परिणाम मात्र भोग्नुपर्छ।

सतीशिरेमणि माताश्री स्व. चोलकुमारी तथा साहित्यशिरोमणि पिताश्री स्व. लोकमणि दाहालको मध्यम सुपुत्र खाँदबारी नगरपालिका-९ माथिल्लो पाङ्ठा सङ्खुवासभा जिल्ला निवासी नारायण शर्माद्वारा परब्रह्म परमात्माको असीम अनुकम्पा, अभिप्रेरणा र अमोघ आशीर्वादबाट सरल नेपाली भाषामा अनूदित लोकमणि टीकासहितको गुरुगीताको
दोस्रो अध्याय पूर्ण भयो ॥२॥



**अथ काम्यजपस्थानं कथयानि वरानने।**
**सागरान्ते सरित्तीरे तीर्थे हरिहरालये ॥१॥**
**शक्तिदेवालये गोष्ठे सर्वदेवालये शुभे।**
**वटस्य धात्र्या मूले वा मठे वृन्दावने तथा ॥२॥**
**पवित्रे निर्मले देशे नित्यानुष्ठानतोऽपि वा।**
**निर्वेदनेन मौनेन जपमेतत् समारभेत् ॥३॥**

हे सुन्दरी! अब सकामभाव भएका मनुष्यहरूले जप गर्ने स्थानहरूका विषयमा बताउँछु; ध्यानपूर्वक सुन। सागर वा नदीको किनारमा, तीर्थमा, शिवालयमा, विष्णु वा देवीको मन्दिरमा, गाईको गोठमा, सबै शुभ देवालयहरूमा, बरको रूख वा अमलाको रूखको फेदमा, मठमा, तुलसीको वनमा, पवित्र स्थानमा निरन्तरको अनुष्ठानका रूपमा, अनासक्त भएर मौनतापूर्वक यसको जप आरम्भ गर्नुपर्छ। ॥१॥ ॥२॥ ॥३॥

जुनसुकै कार्यको सिद्धिका लागि स्थानको उपयुक्तता सबैभन्दा महत्त्वपूर्ण हुन्छ। किनकि सबै ठाउँ सबै कार्यका लागि उपयुक्त हुँदैन। यसैले ध्यान र साधना एकान्त र ज्यादै राम्रो स्थानमा मात्र हुन सक्तछ। तान्त्रिक साधनका लागि शक्ति पीठ उत्तम हुन्छ। यसकारण ध्यान र साधनाका लागि सर्वोत्तम स्थान हिमालय हो।

यसैले भगवान् श्रीशिव देवी पार्वतीसँग भन्नुहुन्छ– हे सुन्दरी! जसले सांसारिक कामनाहरू परिपूर्तिका लागि गुरुगीताको जप गर्न चाहन्छ, उसले कुनै पवित्र स्थान छान्नुपर्छ। यसकारण सागर वा नदी किनारमा, तीर्थमा, शिवालयमा, विष्णुको मन्दिरमा, देवीको मन्दिरमा, गाईको गोठमा अथवा कुनै मन्दिरमा बसेर जप गर्नुपर्छ। यदि यसप्रकारको स्थान उपलब्ध हुन सकेन भने बर वा अमलाको रूखको फेदमा बसेर जप गर्न सकिन्छ। यसैगरी कुनै सन्तको आश्रम वा मठ तथा तुलसीको वनलाई पनि उत्तम स्थान मानिएको छ। यसप्रकारको पवित्र स्थान छानेर जपको अनुष्ठान सुरु गर्नुपर्छ। यो अनुष्ठानमा अनासक्त हुँदै मौनतापूर्वक जप गर्नुपर्छ। यसका लागि उपयुक्त स्थान आवश्यक हुन्छ।

**जाप्येन जयमाप्नोति जपसिद्धिं फलं तथा ।**
**हीनकर्म त्यजेत्सर्वं गर्हितस्थानमेव च ॥४॥**

जपद्वारा जय प्राप्त हुन्छ तथा जपको सिद्धिरूपी फल मिल्दछ। जपको अनुष्ठान गर्दाका अवस्थामा सबै नीच कर्म र निन्दनीय स्थान त्याग गर्नुपर्छ। ॥४॥

जुनसुकै साधनको मुख्य अङ्ग जप साधना हो। किनकि मन्त्रको जप वा पाठ गर्नाले मनका बाहिरतिर आकर्षित भएका वृत्तिहरू केन्द्रीकृत भएर अन्तर्मुखी बन्दछन्, जसका प्रभावले मनुष्यलाई मानसिक सिद्धिहरूको प्राप्ति हुन्छ। जब मन कुनै वस्तु वा स्थानमा केन्द्रित हुन्छ, त्यस समयमा त्यसको शक्ति दुई गुना बढ्छ। जसको प्रभावले उसले सबै कार्यहरूमा विजय प्राप्त गर्छ। जसका आधारमा उसले आश्चर्यजनक कार्य गर्न सक्तछ। यदि त्यस समयमा साधकको मनमा खराब विचार उत्पन्न भयो भने उसले त्यो शक्तिद्वारा खराब कर्म गर्छ, जसले गर्दा ऊ साधनाबाट भ्रष्ट वा विचलित हुन्छ। यसैले जपको अनुष्ठान गर्दाका समयमा मनमा मङ्गलदायक विचार उत्पन्न हुन आवश्यक हुन्छ तथा खराब कर्महरू पूर्ण रूपमा परित्याग गर्नुपर्छ।

**श्मशाने बिल्वमूले वा वटमूलान्तिके तथा ।**
**सिद्ध्यन्ति कानके मूले चूतवृक्षस्य सन्निधौ ॥५॥**

श्मशान घाटमा, बेल, बर वा तेंदूको रूखको फेदमा र आँपको रूखको नजीकमा जप गर्नाले चाँडै सिद्धि प्राप्त हुन्छ। ॥५॥

जुन साधकले जपको अनुष्ठानबाट चाँडै सिद्धि प्राप्त गर्न चाहन्छ; उसले श्मशानघाटमा, बेलको रूखको फेदमा वा बरको रूखको फेदमा अथवा तेंदूको रूखको फेदमा र आँपको रूखको नजीकमा बसेर जप गर्नुपर्छ। यसप्रकारको साधना कुनै सांसारिक कामना पूर्तिका लागि गरिन्छ।

**आकल्पजन्मकोटीनां यज्ञव्रततपः क्रियाः ।**
**ताः सर्वाः सफला देवी गुरुसन्तोषमात्रतः ॥६॥**

हे देवी! गुरु सन्तुष्ट भएपछि मात्र कल्पसम्मका करोडौं जन्महरूमा गरिएका यज्ञ, व्रत, तपस्या, शास्त्रीय क्रियालगायत सबै सफल हुन्छन्। ॥६॥

भगवान् श्रीशिव भन्नुहुन्छ– हे देवी! साधकले यज्ञ, तपस्या, व्रतलगायतका शास्त्रद्वारा बताएका साधना गुरुको मार्ग निर्देशनमा गर्नुपर्छ। गुरुले मात्र त्यसको वास्तविक विधि बताउन सक्तछन् र विधिविहीन कार्य साधकका लागि लाभदायक नभएर हानिकारक हुन्छ। गुरुले देखाएको बाटोमा हिँड्दै उनले बताएको विधिअनुसार कार्य गर्दा जब गुरु पूर्ण रूपमा सन्तुष्ट हुन्छन्, त्यसपछि मात्र उसका क्रियाहरू सफल हुन्छन्। आफ्नो इच्छाअनुसार गरिएको कुनै पनि कार्य सफल हुँदैन।

**मन्दभाग्या ह्यशक्ताश्च ये जना नानुमन्वते।**
**गुरुसेवासु विमुखाः पच्यन्ते नरकेऽशुचौ ॥७॥**

जुन भाग्यविहीन, शक्तिविहीन र गुरुको सेवा नगर्ने मनुष्यले
यो उपदेश मान्दैन, त्यो घोर नरकमा पर्दछ। ॥७॥

सांसारिक क्रियाहरू गर्नका लागि पनि ज्ञान आवश्यक हुन्छ। किनकि ज्ञानविहीनबाट गरिएको कुनै पनि कार्य सफल हुन सक्तैन। यसमा पनि पुस्तकीय ज्ञान मात्र पर्याप्त नभएर उत्तम कार्यका लागि कुनै अनुभवी व्यक्तिले मार्ग निर्देशन गर्न आवश्यक हुन्छ भने अध्यात्म ज्ञानका लागि तथा त्यसका क्रियाहरूका लागि त कुनै सद्गुरुको अनिवार्यता नै हुन्छ। जुन साधकले गुरुविहीन भएर आफ्नो इच्छाअनुसार कुनै साधना गर्दछ, त्यो भाग्यविहीन नै हो। किनकि उसलाई भाग्यले कहिल्यै साथ दिँदैन। जो शक्तिविहीन छ तथा जसले गुरुको सेवा गर्दैन ऊद्वारा गरिएका जप, अनुष्ठानलगायतले विपरीत फल दिन्छन्। उसलाई यसप्रकारका क्रियाहरूले घोर नरकमा पुऱ्याउँछन्। यसैले गुरुविहीन भएर अध्यात्मको मार्गमा हिँड्न सकिँदैन। यो परम सत्य हो।

**विद्या धनं बलं चैव तेषां भाग्यं निरर्थकम्।**
**येषां गुरुकृपा नास्ति अधो गच्छन्ति पार्वती ॥८॥**

जसलाई गुरुको कृपा प्राप्त भएको छैन, त्यसको विद्या, धन,
बल र भाग्य निरर्थक हुन्छ। किनकि हे पार्वती! त्यसको
निश्चित रूपमा अधःपतन अर्थात् दुर्दशा हुन्छ। ॥८॥

तल झर्नका लागि परिश्रम गर्नु पर्दैन। किनकि त्यसमा कुनै शक्ति, साधना, सहयोग, ज्ञान, धनलगायतको आवश्यकता पर्दैन तथा भाग्य र पुरुषार्थ पनि आवश्यक छैन। भाग्यले पनि पुरुषार्थबिना फल दिँदैन। यसैले मनुष्यले माथि

उठ्नका लागि परिश्रम र पुरुषार्थ गर्नुपर्छ। त्यसका लागि शक्ति लगाउनुपर्छ, ज्ञान प्राप्त गर्नुपर्छ, धन खर्च गर्नुपर्छ; त्यसपछि मात्र भाग्यले साथ दिन्छ। यो सबै गरेपछि मनुष्य माथि उठ्छ भने केही नगर्दा उसको पतन हुन्छ अर्थात् ऊ तल झर्दछ।

यो सबै गर्नका लागि गुरुको मार्ग दर्शन अति महत्त्वपूर्ण हुन्छ। किनकि उनको मार्ग दर्शनबिना विद्या, धन, बल र भाग्य सबै निरर्थक हुन्छन्। यिनीहरूको सदुपयोग गर्नका लागि गुरुको शिक्षा अनिवार्य हुन्छ।

**धन्या माता पिता धन्यो गोत्रं धन्यं कुलोद्भवः।**
**धन्या च वसुधा देवी यत्र स्याद् गुरुभक्तता ॥९॥**

जसमा गुरु भक्ति रहेको छ, त्यसका माता, पिता तथा वंश धन्य हुन्। यसैगरी उसको वंश वा कुल धन्य छ र समग्र पृथ्वी माता धन्य छिन्। ॥९॥

गुरुविहीनले ज्ञान प्राप्त गर्न सक्दैन तथा ज्ञानविहीन मनुष्यको जीवन पशु समान रहन्छ वा हुन्छ। किनकि ऊभित्र रहेको शक्तिको विकास गुरुको कृपाबाट मात्र हुन्छ, जसका लागि गुरुमा भक्तिभाव हुन आवश्यक हुन्छ। अर्जुन जस्ता परम भक्तले मात्र परमात्माको विराट्स्वरूपको दर्शन पाउन सक्तछन्। जोसुकै पनि गुरुको कृपाले मात्र सन्त, ज्ञानी, महात्मा बन्दछ। जसलाई ज्ञान प्राप्त भएको छ, त्यसैले गुरुपदमा आसीन भएर जगत्को कल्याण गर्दछ। यसप्रकारको गुरुभक्त जहाँ जन्मछ, त्यसका माता, पिता, उसको वंश पनि धन्य हुन्छ र उसको वंशमा जन्मने पनि धन्य हुन्छन्। यसबाहेक जुन पृथ्वीमा यस्तो गुरु भक्त जन्मन्छ, त्यो स्थान पनि धन्य हुन्छ।

**शरीरमिन्द्रियं प्राणञ्चार्थः स्वजनबन्धुतां।**
**मातृकुलं पितृकुलं गुरुदेव न संशय ॥१०॥**

शरीर, इन्द्रियहरू, प्राण, धन, स्वजन, बन्धु–बान्धव, माताको कुल तथा पिताको कुललगायतका सबै गुरु भएकोमा कुनै द्विविधा छैन। ॥१०॥

असाहाय भएर जन्मिएको मुनष्यले कुराकानी गर्न, शिष्टाचार, सभ्यता, नैतिकता, उठ्न, बस्नलगायत सबै सिक्नुपर्छ। यसका लागि उसका अनेकौं गुरु हुन्छन्, जसले उसलाई उचित मार्ग निर्देशन गरेर उसको जीवन यात्रा सुगम बनाइदिन्छन्। यसमध्ये शरीर, इन्द्रियहरू, प्राण र धन कसरी सदुपयोग गर्ने भन्ने

शिक्षा पहिलो आवश्यकता हो। यसका लागि स्वजन, बन्धु–बान्धव, माता र पिताका कुल सहयोगी हुन्छन्, जो उसका प्रारम्भिक गुरु हुन्। यी सबै गुरुहरूको सहयोगमा ऊ सफल जीवननिर्वाह गर्न योग्य हुन्छ। यसपछि परम ज्ञान प्राप्तिका लागि उसले कुनै आत्मज्ञानी गुरुका शरणमा जानुपर्छ। जसले उसलाई परमात्मा तुल्य बनाइदिन्छन्, जहाँ पुगेपछि उसको जीवन यात्रा समाप्त हुन्छ र फेरि उसको जन्म–मृत्यु हुँदैन। त्यसपछि ऊ आफैँ गुरु बन्दछ अर्थात् ऊ परमात्मास्वरूप हुन्छ।

**गुरुर्देवो गुरुर्धर्मो गुरौ निष्ठा परं तपः।**
**गुरोः परतरं नास्ति त्रिवारं कथयामि ते ॥११॥**

गुरु नै देवता र धर्म हुन भने गुरुमा भएको निष्ठा नै परम तपस्या हो। किनकि गुरुबाहेक अन्य केही पनि नभएको कुरा म तीन पटक बताउँछु। ॥११॥

जसले मनुष्यलाई सत्मार्गमा हिँड्ने शिक्षा दिन्छन्, तिनै गुरु हुन्। किनकि सत्मार्गमा हिँड्नु नै धर्म हो। यसैले गुरुलाई देवता समान मान्नुपर्छ। यसैगरी गुरुमा निष्ठा राख्दै उनले देखाएको बाटोमा हिँड्नु परम तपस्या हो। किनकि योभन्दा ठूलो तपस्या अर्को कुनै छैन। गुरुले मात्र मनुष्यलाई उपयोगी जीवन दिन सक्तछन्। जसले गुरुमा श्रद्धा नराखी स्वेच्छाचारी व्यवहार गर्छ, त्यसले आफ्नो विनाश आफैँ गर्दछ। यसैले उसको उद्धारक गुरु मात्र हुन सक्तछन्।

**समुद्रे वै यथा तोयं क्षीरे क्षीरं घृते घृतम्।**
**भिन्ने कुम्भे यथाऽऽकाशं तथाऽऽत्मा परमात्मनि ॥१२॥**

जसरी सागरमा पानी, दूधमा दूध, घिउमा घिउ, अलग–अलग घडाहरूमा आकाश एक र अभिन्न हुन्छन्; त्यसैगरी आत्मा परमात्मासँग अभिन्न छ वा हुन्छ। ॥१२॥

मनुष्यले शरीरलाई मात्र जान्दछ। उसले आफूभित्र भएको आत्मा र परमात्मालाई जान्न सक्तैन। यसको ज्ञान गुरुले मात्र गराउन सक्तछन्। किनकि अन्य कसैलाई यो रहस्यको ज्ञान हुँदैन। जसले आत्मा र परमात्माको अनुभव गरिसकेको छ, त्यसैले यो सत्यका विषयमा अरूलाई बताउन सक्तछ। भगवान् श्रीशिव भन्नुहुन्छ– आत्मा र परमात्मामा कुनै भेद छैन तथा यी दुवै भिन्न तत्त्व होइनन्। तर अज्ञानीहरूले यसलाई जान्न नसकेकाले अलग–अलग सम्झन्छन्। उनीहरूका अनुसार परमात्मा कहीँ आकाशमा स्वर्गमा बस्नुहुन्छ, कहीँ वैकुण्ठमा

हुनुहुन्छ र क्षीर सागरमा सुत्नुहुन्छ। उहाँ एक मात्र हुनुहुन्छ। उहाँले त्यहीँ बसेर यो सृष्टि सञ्चालन र नियन्त्रण गरिरहनुभएको छ। यसैले उहाँ शरीरमा रहन सक्नु हुन्न। जसरी समुद्रको पानी र कुवाको पानीमा कुनै भिन्नता हुँदैन, जसरी विभिन्न भाँडामा राखिएका कारणले दूधमा र घिउमा कुनै भिन्नता आउँदै, जसरी अलग-अलग घडाको आकाश र बाहिरको आकाशमा कुनै भिन्नता हुँदैन, त्यसैगरी शरीरको उपाधिका कारणले मात्र आत्मा आत्मामा अथवा आत्मा र परमात्मामा भिन्नता भएको अनुभूति हुन्छ, जुन अज्ञानमात्र हो। यो अज्ञान गुरुले दिएको उपदेश वा ज्ञानबाट मात्र हट्छ। किनकि उनैले यसको प्रत्यक्ष अनुभूति गराइदिएर भ्रम हटाइदिन्छन्।

**तथैव ज्ञानवान् जीवः परमात्मनि सर्वदा।**
**एक्येन रमते ज्ञानी यत्र कुत्र दिवानिशम् ॥१३॥**

यसैगरी ज्ञानी सधैँ परमात्मासँग अभिन्न भएर आनन्दविभोर
हुँदै सबैतिर घुमिरहन्छ अथवा घुम्दछ। ॥१३॥

जो अज्ञानी छ, त्यसलाई आत्मस्वरूपको ज्ञान नहुने भएकाले उसले शरीरलाई नै आफ्नो यथार्थ स्वरूप मान्दछ तथा आफ्नो आत्मालाई परमात्माभन्दा अलग मान्दछ। त्यसले सबै मनुष्यहरूको आत्मालाई पनि अलग मान्दछ। यसैगरी उसले आत्माको जन्म र मृत्यु हुने स्वीकार गर्दछ तथा आत्मा कर्ता र भोक्ता भएको मान्दछ। उसले आत्माको पनि उद्धार गर्ने कुरा गर्दछ। उसले आत्मालाई अल्पज्ञ र परमात्मालाई सर्वज्ञ बताएर तिमीहरूमा भेद दृष्टि राख्छ। त्यसले आत्मा र जीवात्मामा भएको अन्तर छुट्याउन सक्तैन। यसप्रकारको मिथ्या भाव राखेर त्यसको प्रचार गरेर उसले सबैलाई अन्यौलमा पार्दछ। जसले गर्दा अरू पनि यो सत्यसँग अनभिज्ञ भइरहन्छन्। उसले यो गलत मान्यतालाई धर्म भन्छ। यो उसको अज्ञानावस्था हो।

तर ज्ञानको मार्ग ज्यादै कठिन छ, जुन सामान्य व्यक्तिको सामर्थ्यको कुरा होइन। यसैले कुनै सद्गुरुले मात्र कुनै योग्य शिष्यलाई ज्ञान दिन्छन्। यसप्रकारका ज्ञानी आफैँ आत्मालाई परमात्मासँग अभिन्न मानेर सधैँ आत्मविभोर हुन्छन्। उनी परम आनन्दमा अवस्थित भएर सबैतिर घुम्छन्। उनी दुःख र सुखलगायतका विकारहरूबाट सधैँ मुक्त हुन्छन्। यो आत्मस्वरूपको ज्ञान प्राप्त भएपछि अज्ञान नष्ट हुन्छ। त्यसपछि सबैमा एउटै आत्मा रहेको देख्न सकिन्छ। यही अध्यात्म ज्ञानको अन्तिम अवस्था हो। यसपछि केही पनि जान्न बाँकी रहँदैन। यसप्रकारको व्यक्ति मात्र सर्वज्ञ हुन्छ।

**गुरुसन्तोषणादेव मुक्तो भवति पार्वती।**
**अणिमादिषु भोक्तृत्वं कृपया देवी जायते॥१४॥**

हे पार्वती! गुरुलाई सन्तुष्ट गराउने शिष्य मुक्त हुन्छ। हे देवी! गुरुको कृपाका प्रभावले उसले अणिमालगायतका सिद्धिहरूको भोग गर्ने अवसर प्राप्त गर्दछ। ॥१४॥

मुक्तिको अवधारणा आर्य दर्शनमा मात्र रहेको छ भने अन्य धर्महरू परमात्मालाई सर्वोपरि मानेर उहाँकै अधीनमा रहनु पर्ने बताउँछन्। अद्वैत दर्शन परमात्माबाट पनि मुक्त हुन चाहन्छ। किनकि उसले परमात्मालाई पनि बन्धनस्वरूप स्वीकार गर्दछ। उहाँ पनि साधन हुनु हो, जसका माध्यमद्वारा यात्रा गर्न सकिन्छ। तर उहाँ पनि अन्तिम हुनु होइन। उहाँ पनि परब्रह्मको सगुणस्वरूप भएकाले आफैँ उहाँको मायाशक्तिद्वारा ढाकिनुभएको छ। उहाँ आफैँ मायाको अधिपति भए तापनि मायाको अधीनमा हुनुहुन्छ। यसैले अद्वैत दर्शन सगुण परमात्माबाट मुक्त भएर निर्गुण–निराकार परब्रह्ममा विलीन हुन चाहन्छ। यसले कसैको आधिपत्य स्वीकार्दैन। यही अद्वैत दर्शनको परम गति हो।

यसैगरी गुरुको कृपाद्वारा मात्र मुक्ति प्राप्त हुन सक्तछ। यदि उनी शिष्यको कार्यशैली, उसको सेवा र पात्रता अथवा योग्यताबाट सन्तुष्ट भए भने उनले त्यसलाई मुक्त गराइदिन्छन्। यसैले आफूलाई ज्ञान प्राप्त गर्न योग्य भएको सिद्ध गरेर गुरुलाई सन्तुष्ट बनाउनु नै साधना हो। मुक्ति प्राप्त गर्नु भन्दा पहिले शिष्यलाई जुन अणिमालगायतका सिद्धिहरूको प्राप्ति हुन्छ, त्यो पनि गुरुकै कृपाको प्रभावबाट प्राप्त भएको हो। यसका लागि अन्य कुनै साधना गर्नु पर्दैन।

**साम्येन रमते ज्ञानी दिवा वा यदि वा निशि।**
**एवं विधो महामौनी त्रैलोक्यसमतां व्रजेत्॥१५॥**

ज्ञानीले दिन वा रात्रिमा सधैँ सबैतिर समत्वपूर्वक घुमफिर गर्दछ। यसप्रकारको शान्त स्वभावसम्पन्न ज्ञानी अर्थात् ब्रह्मनिष्ठ महात्मा तीनोटै लोकमा समभावपूर्वक घुम्दछ। ॥१५॥

त्यही ज्ञान गुरु हुन्छ, जसले परब्रह्म र आत्माको एकता भएको अनुभूति गरिसकेको छ।

यस सम्बन्धमा विवेक चूडामणि १।६ मा शङ्कराचार्यले भनेका छन्– चाहे कसैले शास्त्रहरूको व्याख्या गरोस्, देवताहरूको भजन गरोस्, विभिन्न किसिमका

शुभकर्महरू गरोस् अथवा देवताहरूको आराधना गरोस्, तर पनि जबसम्म ब्रह्म र आत्माको एकता भएको ज्ञान हुँदैन, त्यस समयसम्म यस ब्रह्माण्डको कार्यकाल सकिए पनि अर्थात् सय कल्पसम्म पनि मुक्ति प्राप्त गर्न सक्तैन।

यसप्रकारका ज्ञानी गुरु दिन र रात्रिमा सधैं सबैतिर समत्वभावपूर्वक घुम्दछन्। किनकि उनी समग्र सृष्टिलाई ब्रह्ममय सम्झन्छन्। उनले सबैमा समदृष्टि राख्छन्। उनी सुख-दुःख, निन्दा, स्तुतिलगायतबाट प्रभावित वा विचलित हुँदैनन्। गीताको २।४८ मा भगवान् श्रीकृष्णले भन्नुभएको छ- आसक्ति परित्याग गरेर सिद्धि र असिद्धिमा समबुद्धि राखी योगमा अवस्थित भएर कर्महरू गर्नु नै **समत्व योग** हो। यसैगरी गीता २।५० मा भन्नुभएको छ- समबुद्धिसम्पन्न पुरुषले पुण्य र पापरूपी दुइटै कर्म यसै लोकमा परित्याग गर्छ। यसैगरी गीता ५।१८ मा भन्नुभएको छ- ज्ञानीले विद्या र विनयसम्पन्न ब्राह्मण, गाई, हात्ती, कुकुर र चाण्डाललाई समान देख्छ।

परब्रह्मको अनुभूति भएपछि मात्र मनुष्यमा यसप्रकारको समदर्शिता आउँछ तथा ब्रह्मनिष्ठ गुरु ब्रह्मको आनन्दमा विलीन हुन्छन्। उनले तीनोटै लोकमा समभावपूर्वक घुमफिर गर्छन्। यो सद्गुरुको लक्षण हो। जसले सबैतिर भेद दृष्टि राख्छ, मनुष्य-मनुष्य, आत्मा-आत्मा तथा आत्मा र परमात्मामा भेदभाव राख्छ, त्यसलाई ज्ञानी भन्न सकिँदैन।

**गुरुभावः परं तीर्थमन्यतीर्थं निरर्थकम्।**
**सर्वतीर्थमयं देवी श्रीगुरोश्चरणाम्बुजम् ॥१६॥**

यसैले सबैभन्दा ठूलो तीर्थ गुरु भक्ति हो भने अन्य तीर्थ निरर्थक छन्। हे देवी! गुरुका चरण सबै तीर्थसम्पन्न हुन्छन्। ॥१६॥

भगवान् श्रीशिव भन्नुहुन्छ- तीर्थहरूको स्नान निरर्थक छ। किनकि त्यसबाट शरीरमा भएको मैलो मात्र सफा हुन्छ। तर गुरु भक्तिद्वारा मनको मैलो सफा हुन्छ। यसैले शरीर मात्र सफा राखेर केही लाभ हुँदैन। किनकि जबसमम मन फोहोरले परिपूर्ण हुन्छ, त्यस समयसम्म सद्गति प्राप्त हुन सक्तैन। शुद्ध मनद्वारा मात्र परमात्माको अनुभव गर्न सकिन्छ। गुरु भक्तिद्वारा मन शुद्ध हुन्छ। यसैले जसले आफ्नो शिर गुरुका शरणमा राखिदियो, उनका गोडा पखालेको पानी पियो, जसलाई

गुरुको सेवा गर्ने अवसर प्राप्त भयो, त्यो भाग्यमानी पुरुष मोक्ष प्राप्तिको अधिकारी बन्दछ, तीर्थहरूमा स्नान गर्ने होइन।

**कन्याभोगरतामन्दाः स्वकान्तायाः पराङ्मुखा।**
**अतः परं मया देवी कथितन्न मम प्रिये ॥१७॥**

हे देवी! हे प्रिया! कन्या भोगमा आसक्त र आफ्नी स्त्रीबाट विमुख अर्थात् अर्काकी स्त्रीसँग सहवास गर्ने बुद्धिविहीन मनुष्यहरूलाई मैले मेरो यो आत्मप्रिय परम ज्ञान बताएको छैन वा होइन। ॥१७॥

भगवान् श्रीशिव भन्नुहुन्छ– मेरो यो परम ज्ञान मैले ती मनुष्यहरूका लागि बताइएको होइन, जो आफ्नी पत्नीलाई त्यागेर अर्काकी स्त्रीसँग सहवास गर्छन्। ज्ञान प्राप्त गर्नका लागि सबैभन्दा पहिले इन्द्रियहरूलाई वशमा राख्न आवश्यक हुन्छ। मनको विकार इन्द्रियहरूका माध्यमद्वारा प्रकट हुन्छ। यसैले इन्द्रियहरूलाई वशमा राखेपछि मन आफैँ शान्त हुन्छ। किनकि वासना मनको वृत्ति हो। मन भोगहरूमा आनन्दित हुन्छ। जब त्यसलाई भोगहरूबाट विमुख गरिन्छ, त्यसपछि त्यही मन एकाग्रतापूर्वक परमात्माको अनुभूतिमा लाग्छ; जसबाट उसलाई परम आनन्द प्राप्त हुन्छ। यदि भोग आवश्यक नै छ भने आफ्नी पत्नीसँग गर्न धर्मसम्मत हुन्छ। परस्त्रीगमन पूर्ण रूपमा निसिद्ध छ। यस्तो व्यक्तिले ज्ञानको दुरुपयोग गर्दछ, जसबाट उसले आफैँलाई पतन गराउने छ।

**अभक्ते वंचके धूर्ते पाखण्डे नास्तिकादिषु।**
**मनसाऽपि न वक्तव्या गुरुगीता कदाचन ॥१८॥**

भक्तिभावविहीन, कपटी, धूर्त, पाखण्डी, नास्तिक–लगायतलाई पनि यो गुरुगीताका विषयमा बताउने कुराको कल्पनासम्म पनि गर्नु हुँदैन। ॥१८॥

कुनै योग्य पात्रलाई दिइएको उच्च ज्ञानबाट मात्र असल परिणाम आउँछ। जो भोगहरूका आसक्त छ, त्यो अध्यात्म ज्ञान प्राप्त गर्न योग्य हुँदैन। उसले यो विद्यालाई पनि भोग प्राप्त गर्ने साधन बनाउँछ। जसबाट उसले आफ्नै र समाजको अकल्याण हुने कार्य गर्दछ। यसैले गुरुले शिष्यलाई आफ्नै नजीकमा राखेर त्यसको परीक्षा लिएपछि मात्र उसलाई अन्तिम ज्ञानको उपदेश दिन्छन्। यो गुरुगीता पनि यस्तो पवित्र ग्रन्थ हो, जसको उपदेश कुनै योग्य पात्रलाई मात्र दिनुपर्छ वा दिइन्छ।

जो गुरुभक्तिविहीन, कपटी, धूर्त, पाखण्डी, नास्तिक, धर्म, परमात्मा, आत्मा र गुरुमा श्रद्धा नभएको छ, जसले नियम, संयम, मर्यादालगायत अस्वीकार गर्दै स्वेच्छाचारी व्यवहार गर्दछ तथा जसले भोगलाई सर्वोत्कृष्ट मान्दछ, जसमा विनम्रता छैन, जसले कसैको सम्मान गर्दैन, जो घमण्डी छ, त्यस्तो व्यक्तिलाई यी गुरुगीताका विषयमा बताउने कल्पनासम्म पनि गर्नु हुँदैन। किनकि कुपात्रका हातमा परेपछि ज्ञान पनि विकृत वा अपवित्र हुन्छ। यसैले यसको ज्ञान योग्य व्यक्तिलाई मात्र दिनुपर्छ।

**गुरबो बहवः सन्ति शिष्यवित्तापहारकाः।**
**तमेकं दुर्लभं मन्ये शिष्यहृत्तापहारकम् ॥१९॥**

मेरो मान्यताअनुसार शिष्यको धन आफ्नो बनाउने गुरु त धेरै हुन्छन्। तर शिष्यका हृदयको सन्ताप हरण गर्ने गुरु दुर्लभ छन्। ॥१९॥

भगवान् श्रीशिव भन्नुहुन्छ– यस्ता कयौँ धनका लोभी गुरु हुन्छन्, जसले आफ्ना शिष्यहरूको धन हत्याउँछन्। तर शिष्यका मनको सन्ताप हटाउने गुरु पाउन दुर्लभ हुन्छ। शिष्यको सन्ताप भनेकै अज्ञान हो। उसमा ज्ञान प्राप्त गर्ने अभिलाषा रहेको हुन्छ, जसले गर्दा ऊ दुःखी र अशान्त हुन्छ। यसैले शान्ति प्राप्तिका लागि ऊ गुरुका शरणमा पर्छ। जसले उसलाई मानसिक शान्ति र आनन्द प्राप्तिको बाटो देखाउन सक्तछन् तिनै सद्गुरु हुन्। यस्तो गुरु भेट्न दुर्लभ छ। यदि कसैले पायो भने त्यसलाई भाग्यशाली सम्झनुपर्छ।

**चातुर्यवान्विवेकी च अध्यात्मज्ञानवान् शुचिः।**
**मानसं निर्मलं यस्य गुरुत्वं तस्य शोभते ॥२०॥**

जो चतुर, विवेकशील, अध्यात्मको ज्ञाता, पवित्र र निर्मल मानसिकता भएको छ, त्यसमा गुरुत्व शोभायमान हुन्छ। ॥२०॥

गुरु बन्न सहज छ। किनकि कसैका अगाडि अलिकति चमत्कार देखाइदिएपछि मनुष्यहरूले त्यसलाई गुरु मान्दछन् र उसको पूजा गर्न थाल्छन्। आफूलाई गुरु भनाउन पाउँदा सबै आनन्दित र प्रसन्न हुन्छन्, उनीहरूको अहङ्कारलाई पुष्टि प्राप्त हुन्छ। तर यथार्थ गुरु हुन कठिन छ। किनकि गुरु हुनका लागि केही अपेक्षित गुणहरूको आवश्यकता पर्छ, त्यसपछि मात्र उसमा गुरुत्व शोभायमान हुन्छ। ती गुणहरूमध्ये विवेकशीलता, सत्य र असत्यको निश्चय गर्दै समय अनुसार उचित निर्णय गर्ने क्षमता, प्रतिकूल अवस्थाको सामना गर्ने सक्ने

चतुरतालगायत अध्यात्मको ज्ञान पनि होस्, जसले अध्यात्मका गोपनीय रहस्यहरू जाने बुझेको होस्, उसमा अभिव्यक्त गर्ने क्षमता पनि हुनुपर्छ, जसले गर्दा उसले आफ्ना विचारहरू यथार्थ अर्थसहित अरूका अगाडि प्रस्तुत गर्न सकोस् तथा उसको मन, वचन र कर्म पवित्र होस्। उसको जीवन पनि अन्यलाई दिएको उपदेशअनुसारको हुनुपर्छ, त्यसपछि मात्र अरू प्रभावित हुन्छन्। यसैले आध्यात्मिक गुरु चरित्रवान हुनुपर्छ। किनिक चरित्रवान् मात्र सन्त हुन्छ। तर ज्ञानी पनि हुनुपर्छ। गुरुमा यी दुइटै गुण अनिवार्य रूपमा हुनुपर्छ। उसको मानसिकता निर्मल हुनुपर्छ। यसप्रकारको व्यक्ति गुरुको पदमा आसीन भएको छ भने मात्र त्यसमा गुरुत्व शोभायमान हुन्छ अन्यथा गुरुत्वको अपमान मात्र हुन्छ।

**गुरवो निर्मलाः शान्ताः साधवो मितभाषिणः।**
**कामक्रोधविनिर्मुक्ताः सदाचार जितेन्द्रियाः॥२१॥**

गुरु पवित्र, शान्त, सरल स्वभावसम्पन्न, सुमधुर वचन बोल्ने, काम, क्रोधरहित, सदाचारी र इन्द्रियहरूलाई वशमा राख्ने हुनुपर्छ। ॥२१॥

गुरु केही विशेष लक्षणहरूले सम्पन्न हुन्छन्। यी गुणहरू नै उनको परिचय र प्रतिष्ठा हो। उनको मन शुद्ध र निर्मल हुन्छ तथा उनी शान्त स्वभावसम्पन्न हुन्छन्। यसैले उनी जस्तोसुकै परिस्थितिमा पनि उत्तेजित हुँदैनन्। उनी सज्जन स्वभावसम्पन्न, काम–क्रोधरहित, कामनाविहीन, जे प्राप्त भयो, त्यसैमा सन्तुष्ट हुन्छन् तथा सदाचर नै उनको आभूषण हो। उनको शक्ति यही हो र उनले आफ्ना इन्द्रियहरूलाई पूर्ण रूपमा वशमा राखेका हुन्छन्। यसप्रकारको गुण सम्पन्न व्यक्तिबाट मात्र गुरुपद शोभायमान हुन्छ।

**सूचकादि प्रभेदेन गुरवो बहुधा स्मृताः।**
**स्वयं सम्यक् परीक्ष्याय तत्त्वनिष्ठं भजेत्सुखीः॥२२॥**

सूचकलगायतको भेदका आधारमा अनेकौं गुरु हुने बताइएको छ। यसैले बुद्धिमान् मनुष्यले आफैंले विचार पुर्‍याएर तत्त्वनिष्ठ गुरुका शरणमा जानुपर्छ। ॥२२॥

गुरु चिन्न ज्यादै कठिन हुन्छ। यसैले सामान्य व्यक्तिले गुरुलाई चिन्न सक्दैनन्, तर पनि उनको कार्य, व्यवहार र आचरण हेरेर उनका शरणमा जानुपर्छ। किनकि सुचकलगायतका भेदका आधारमा अनेकौं गुरु हुन्छन्। जस्तै योग, मन्त्रको

साधना, तान्त्रिक, भक्ति, ज्ञानको साधना, हठयोग, राजयोग, कुण्डिलिनी जागरण, प्राणायामको साधना, कर्मयोगलगायतका विभिन्न प्रकारका साधनाहरूका लागि अलग-अलग गुरु हुन्छन्। किनकि एउटै गुरुले यी सबैको ज्ञान दिन सक्तैनन्। यसैले आफ्नो साधनाअनुसारको गुरु खोज्नुपर्छ। तर यिनीहरूमध्ये तत्त्वनिष्ठ, ब्रह्मज्ञानी, शिष्यलाई आत्माको ज्ञान दिन सक्षम, यो सांसारिक समुद्रबाट पार लगाउन सक्ने बुद्धिमान् व्यक्तिलाई मात्र गुरु बनाउनुपर्छ अर्थात् यसप्रकारका गुरुका शरणमा जानुपर्छ।

**वर्णजालमिदं तद्वद्बाह्यशास्त्रं तु लौकिकम्।**
**यस्मिन् देवी समभ्यस्तं स गुरुः सूचकः स्मृतः ॥२३॥**

हे देवी! जसले वर्ण र अक्षरहरूद्वारा सिद्ध गरिने बाह्य लौकिक शास्त्रको अभ्यास गरेको छ, तिनलाई **सूचक गुरु** भनिन्छ। ॥२३॥

भगवान् श्रीशिव **सूचक गुरु**को लक्षण बताउने सिलसिलामा भन्नुहुन्छ – हे देवी! जुन गुरुले शास्त्रहरूको अध्ययन गरेर तिनका शब्दहरू र अक्षरहरूको व्याख्या मात्र गर्छन्, ती पण्डित मात्र हुन्छन्, जसलाई विद्वान् भन्न सकिए तापनि उनी ज्ञानविहीन हुन्छन्। उनलाई ती शब्दहरूको गोपनीय अर्थको ज्ञान हुँदैन। जसले प्रवचन दिन्छन्, विभिन्न ग्रन्थहरूको उदाहरण दिएर तर्कका माध्यमद्वारा आफ्नो मत र मान्यता सिद्ध गर्ने प्रयास मात्र गर्छन्, तर वास्तविकताको ज्ञान हुँदैन। उनले अनेकौँ शास्त्रहरूबाट आफ्नो मान्यताअनुसारको उदाहरण खोजेर बोल्दछन्, यो उनको अभ्यास हो। यसप्रकारका गुरुलाई **सूचक गुरु** भनिन्छ। यस्ता गुरुको आफ्नो कुनै निर्णय हुँदैन। यसैले उनले शास्त्रमा लेखिएको कुराको सूचना मात्र दिने काम गर्छन्।

**वर्णाश्रमोचितां विद्यां धर्माधर्मविधायिनीम्।**
**प्रवक्तारं गुरुं विद्धि वाचकस्त्विति पार्वती ॥२४॥**

हे पार्वती! धर्म र अधर्म निश्चय गर्ने वर्ण र आश्रमअनुसारको विद्याको प्रवचन गर्ने गुरुलाई **वाचक गुरु** भनिन्छ। ॥२४॥

भगवान् श्रीशिव भन्नुहुन्छ– हे पार्वती! हाम्रो वर्णाश्रम व्यवस्थामा धर्म र अधर्मको विधान फैलिएको छ। त्यही हाम्रो संस्कृति र सभ्यताको मुख्य आधार हो, जसमा धर्मको आधारशिला अडिएको छ। यो वर्णाश्रम व्यवस्थाका विषयमा प्रवचन

दिने गुरुलाई **वाचक गुरु** भनिन्छ। यिनले मनुष्यहरूलाई जानकारी गराउनका लागि वर्णाश्रम धर्मको विधान वाचन मात्र गर्दछन्।

**पञ्चाक्षर्यादिमन्त्राणामुपदेष्य तु पार्वती।**
**स गुरुर्बोधको भूयादुभयोरयमुत्तमः ॥२५॥**

पञ्चाक्षरीलगायतका मन्त्रहरूको उपदेश दिने गुरुलाई **बोधक गुरु** भनिन्छ। हे पार्वती! पहिले बताइएका दुई प्रकारका गुरुहरूभन्दा यी गुरु उत्तम हुन्छन्। ॥२५॥

भगवान् श्रीशिव भन्नुहुन्छ– यसभन्दा पहिले जुन **सूचक गुरु** र **वाचक गुरु**का विषयमा बताइएको छ, तिनीहरूले शास्त्रहरूका शब्दहरू र अक्षरहरूको व्याख्या गर्दै वर्णाश्रम धर्मको ज्ञान गराउँछन्। तर यी तेस्रो प्रकारका गुरुले शिष्यलाई पञ्चाक्षरी मन्त्रको जप गर्न लगाउँछन् तथा त्यसलाई गुरु मन्त्र बताउँछन्। यसैले ती गुरुलाई **बोधक गुरु** भनिन्छ। यो मन्त्रको जपद्वारा शिष्यको गुरुसँग समबन्ध स्थापित हुन्छ, जसका आधारमा उसले ज्ञान प्राप्त गर्दछ। यसप्रकारका गुरु पहिले बताइएका दुइटा गुरुभन्दा उत्तम मानिन्छन्। किनकि यिनले शिष्यलाई आत्माको अनुभूति गर्ने बाटो देखाउने भएकाले यिनलाई उत्तम मानिएको हो।

**मोहमारणवश्यादितुच्छमन्त्रोपदर्शिनम् ।**
**निषिद्धगुरुरित्याहुः पण्डितास्तत्त्वदर्शिनः ॥२६॥**

मायामा फसाउने, मार्ने, वशमा गराउनेलगायतका तुच्छ मन्त्रहरू सिकाउने वा बताउने गुरुलाई तत्त्वदर्शी पण्डितले **निषिद्ध गुरु** भन्दछन्। ॥२६॥

जो तत्त्वलाई देखिसकेका पण्डित छन्, तिनले आत्माको प्राप्तिलाई नै परमज्ञान र परम उपलब्धि मान्छन्, जसका प्रभावले मनुष्यले यो सांसारिक समुद्रबाट मुक्त भएर मोक्ष प्राप्त गर्छ। अन्य सबै साधनाहरू मनुष्यलाई अलमलमा पारेर उसको पतनको कारण बन्छन्। मायामा फसाउने, वशमा गराउनेलगायतका अरूको कुभलो गर्ने मन्त्र भए तापनि पञ्चाक्षरी मन्त्रद्वारा मोक्ष प्राप्त हुन्छ तथा पञ्चाक्षरीबाहेक अन्य मन्त्र कल्याणकारण हुँदैनन्। यसप्रकारका मन्त्रलाई तत्त्वज्ञानी पुरुषले **निषिद्ध मन्त्र** बताएका छन्, जसको जप गर्नु हुँदैन। किनकि यी मन्त्र तुच्छ

हुन् तथा जुन गुरुले यी मन्त्रहरूको उपदेश दिन्छन्, तिनलाई **निषिद्ध गुरु** भनिन्छ। यसैले तिनलाई पूर्ण रूपमा परित्याग गर्नुपर्छ।

**अनित्यमिति निर्दिश्य संसार सङ्कटालयम्।**
**वैराग्यपथदर्शी यः स गुरुर्विहितः प्रिये ॥२७॥**

हे प्रेयसी! जुन गुरुले संसार अनित्य र दुःखहरूको घर भएको सम्झिएर वैराग्यको मार्गका विषयमा बताउँछन्, तिनलाई **विहित गुरु** भनिन्छ। ॥२७॥

भगवान् श्रीशिव भन्नुहुन्छ– हे पार्वती! यो संसारमा अनेकौं प्रकारका गुरु हुन्छन्, जसले शिष्यहरूलाई अलग–अलग उपदेश दिन्छन्। तर तिनीहरूले शिष्यको कल्याण नगरेर भ्रममा पार्छन्। यो संसारमा यसप्रकारका गुरु पनि छन्, जसले शिष्यलाई उपदेश दिने सिलसिलामा यो संसार अनित्य र दुःखहरूको घर भएकाले यसमा बस्न उचित नहुने बताउँछन्। तिनीहरूले सांसारिक दुःखका विषयमा त बताउँछन्, तर सुख प्राप्त गर्ने रहस्य बताउँदैनन्। उनीहरूले त्याग गर्नु पर्ने मात्र बताउँछन्, तर बाटो देखाउँदैनन्। मनुष्यहरूमा वैराग्य उत्पन्न त गराइदिन्छन्, तर शान्ति र आनन्द प्राप्त गर्ने बाटो देखाउन सक्तैनन्। उनीहरूले वैराग्यको कुरा गर्छन्, तर परमात्मालाई प्राप्त गर्ने बाटो देखाउन सक्तैनन्। यसप्रकारका गुरुलाई **विहित गुरु** भनिन्छ।

**तत्त्वमस्यादिवाक्यानामुपदेष्या तु पार्वती।**
**कारणाख्यो गुरुः प्रोक्तो भवरोगनिवारकः ॥२८॥**

हे पार्वती! **तत्त्वमसि**लगायतका महावाक्यहरूको उपदेश दिने तथा संसाररूपी रोगहरू निवारण गर्ने गुरुलाई **कारणाख्य गुरु** भनिन्छ। ॥२८॥

भगवान् श्रीशिव भन्नुहुन्छ– हे पार्वती! संसारलाई अनित्य बताएर मनुष्यहरूमा वैराग्यभाव उत्पन्न गराउनु मात्र पर्याप्त होइन। किनकि यसप्रकारको उपदेशबाट उसको संसारसँग सम्बन्धविच्छेद भए तापनि उसलाई आफ्नो यथार्थ स्वरूप आत्माको ज्ञान हुन सक्तैन। यसैले ऊ यो सांसारिक बन्धनबाट मुक्त हुँदैन। यसभन्दा अगाडि जुन गुरुले उसलाई **तत्त्वमसि** अर्थात् **तत्+त्वम्+असि=त्यो तिमी नै हौ** भन्ने महावाक्यको उपदेश दिएर जीव र आत्माको एकताको प्रत्यक्ष अनुभूति गराइदिन्छन् र जसले सबै किसिममा सांसारिक रोगहरूको निवारण गरिदिन्छन्।

यसप्रकारका गुरुलाई **कारणाख्य गुरु** भनिन्छ, जो यसप्रकारको अनुभूतिको कारकतत्त्व हुन्छन्। संसारका सबै रोगहरूको कारण काम, क्रोध, लोभ, मोह, ईर्ष्या, घृणा, निन्दालगायत हुन्, जुन मनकै उपज हुन्। यो महावाक्यद्वारा यी सबै हट्छन्, त्यसपछि उसले आत्मामा अवस्थित भएर परमसुखको अनुभव गर्दछ।

**सर्वसन्देहसन्दोहनिर्मूलनविचक्षणः ।**
**जन्ममृत्युभयघ्नो यः स गुरुः परमो मतः ॥२९॥**

जसले सबै किसिमका सन्देहहरू पूर्ण रूपमा हटाइदिन्छन् तथा जन्म–मृत्यु र भयबाट मुक्त गराइदिन्छन्, तिनलाई **परम गुरु** अथवा **सद्गुरु** भनिन्छ। ॥२९॥

जबसम्म जीवलाई आत्मा र परमात्माको एकता भएको अनुभव हुँदैन, त्यस समयसम्म ऊ जन्म र मृत्युको भयबाट मुक्त हुन सक्तैन। उसको मनमा भ्रम रहिरहन्छ तथा उपदेश सुनेर उसमा भएको डर हराउँदैन। जब गुरुले आफ्नो शिष्यलाई प्रत्यक्ष रूपमा आत्माको दर्शन गराइदिन्छन्, त्यसपछि मात्र उसमा भएका शङ्काहरू, द्विविधा, जन्म र मृत्युको भय यथार्थ रूपमा नष्ट हुन्छन्। यसप्रकारका गुरुलाई मात्र **परम गुरु** अथवा **सद्गुरु** भनिन्छ। किनकि अन्य सबै गुरुले बाटो देखाउँछन्, तर सद्गुरुले गन्तव्यसम्म पुऱ्याइदिन्छन्।

**बहुजन्मकृतात् पुण्याल्लभ्यतेऽसौ महागुरुः ।**
**लब्ध्वाऽमुं न पुनर्याति शिष्यः संसारबन्धनम् ॥३०॥**

यसप्रकारका महागुरु अनेकौँ जन्महरूमा गरिएका पुण्यहरूका प्रभावले प्राप्त हुन्छन्। उनलाई प्राप्त गरिसकेपछि शिष्य फेरि सांसारिक बन्धनमा पर्दैन अर्थात् ऊ मुक्त हुन्छ। ॥३०॥

प्रकृतिको नियमअनुसार जसले चाहना राख्छ, जसका लागि प्रयास र पुरुषार्थ गर्दछ, उसलाई त्यसको फल परमात्मा आफैँले दिनुहुन्छ। परमात्मा प्राप्तिमा पनि यही नियम लागू हुन्छ। यदि कुनै शिष्यले मुक्ति प्राप्त गर्ने अभिलाषा राख्छ तथा उसको सङ्कल्प सुदृढ छन् भने उसले कुनै सद्गुरु अवश्य भेट्छ। सद्गुरु खोज्नु पर्दैन। किनकि सद्गुरु आफैँले असल शिष्यको खोजी गर्छन्। तर योग्य शिष्य बन्न तथा मुक्ति प्राप्त गर्ने अभिलाषा जाग्रत् हुनमा पहिलेका अनेकौँ जन्महरूको

पुण्यकर्मको महत्त्वपूर्ण भूमिका रहेको हुन्छ। यी पुण्यहरूको फलका प्रभावले उसले सद्गुरु भेट्छ। विवेक चूडामणिको तेस्रो श्लोकमा शङ्कराचार्यले बताएअनुसार मनुष्यत्व, मुमुक्षुत्व अर्थात् मुक्तिको चाहना हुनु तथा महापुरुषहरूको सङ्गत यी तीनोटै अवसर भगवान्को कृपापात्रले मात्र प्राप्त गर्दछ, भगवान्को कृपा नभएसम्म यिनीहरूको प्राप्ति सम्भव छैन। यसरी सद्गुरु प्राप्त गर्ने शिष्य सांसारिक बन्धनबाट पूर्ण रूपमा मुक्त हुन्छ।

**एवं बहुविधालोके गुरवः सन्ति पार्वती।**
**तेषु सर्वप्रयत्नेन सेव्यो हि परमो गुरुः ॥३१॥**

हे पार्वती! यसरी संसारमा अनेकौं किसिमका गुरु हुन्छन्। यिनीहरूमध्ये **सद्गुरुको** श्रद्धापूर्वक सेवा गर्दै उनका शरणमा पर्नु वा जानुपर्छ। ॥३१॥

भगवान् श्रीशिव भन्नुहुन्छ- हे पार्वती! जसले मनुष्यलाई कुनै किसिमको उत्तम ज्ञान दिन्छन्, त्यसलाई पनि गुरु भनिन्छ, जसले मनुष्यलाई उन्नतिमा लाग्ने प्रेरणा दिन्छन्। यिनीहरूमध्ये निषिद्ध गुरुहरूलाई यथार्थ रूपमा परित्याग गर्नुपर्छ। किनकि तिनीहरूले मनुष्यलाई पतनको मार्गमा लगाउँछन् तथा अन्य सबै प्रकारका गुरुले मनुष्यलाई सद्मार्गमा लगाउने भए तापनि यिनीहरूमध्ये **परम गुरु** मात्र उत्तम हुन्छन्, जसले मनुष्यलाई यो सांसारिक समुद्रबाट पार गरिदिन्छन्। यसप्रकारका सद्गुरुका शरणमा मात्र पर्नुपर्छ, जसका प्रभावले मुक्ति प्राप्त हुन सकोस्।

**पार्वत्युवाच**

**स्वयं मूढा मृत्युभीताः सुकृताद्विरतिं गताः।**
**दैवान्निषिद्धगुरुगा यदि तेषां तु का गतिः ॥३२॥**

देवी पार्वतीले भन्नुभयो– प्रकृतिबाटै मूर्ख, मृत्युबाट भयभीत र सत्कर्म नगर्ने मनुष्य प्रारब्धको फलअनुसार निषिद्ध गुरुका शरणमा परे भने तिनीहरूको गति अर्थात् अवस्था कस्तो हुन्छ ? ॥३२॥

देवी पार्वती भगवान् श्रीशिवसँग भन्नुहुन्छ– यदि कोही जन्मजात मूर्ख छ, जसको बुद्धिको विकास भएको छैन, जसले गुरुको महत्त्व बुझेको छैन, कसैको सङ्गत गर्ने अवसर पाएको छैन, जो सधैँ मृत्युबाट भयभीत भइरहन्छ, जसले शरीरको

मृत्युलाई आफ्नो मृत्यु सम्झन्छ, जो भोगहरूमा आसक्त छ तथा जसले संसारमा चमत्कार देखाउनका लागि केही सिद्धि प्राप्त गरेर उसलाई कष्ट पुऱ्याउँछ, जसले कुनै सत्कर्म गर्दैन र यदि प्रारब्धको फलअनुसार उसलाई कुनै निषिद्ध गुरुले आफ्नो भ्रममा पारेर मायामा फसाउने, मार्ने, वशमा गराउनेलगायतका मन्त्र सिकाइदिए भने ऊ त्यसैअनुसारको कर्ममा लाग्छ। यथार्थमा त्यो मूर्ख छ, उसलाई यसको परिणामको ज्ञान छैन भने त्यस्तो व्यक्तिको गति के हुन्छ ? कृपया यसका विषयमा विस्तारपूर्वक बताइदिनुहोस्।

श्रीमहादेव उवाच

**निषिद्धगुरुशिष्यस्तु दुष्टसङ्कल्पदूषितः।**
**ब्रह्मप्रलयपर्यन्तं न पुनर्याति मर्त्यताम् ॥३३॥**

श्रीमहादेव भन्नुहुन्छ– निषिद्ध गुरुको शिष्य दुष्ट सङ्कल्पहरूद्वारा दूषित हुने भएकाले ब्रह्मको प्रलयसम्म मनुष्य हुँदैन। ॥३३॥

देवी पार्वतीको प्रश्नको जवाफ दिने सिलसिलामा भगवान् श्रीमहादेव भन्नुहुन्छ– जीवको गति उसको सङ्कल्प अनुसारको हुन्छ। सद्सङ्कल्पबाट सद्कर्म हुन्छ, जसको फल सद्गति हुन्छ तथा दुष्ट सङ्कल्पबाट दुष्ट कर्म मात्र हुने भएकाले त्यसको फलस्वरूप मनुष्यको दुर्गति नै हुन्छ। यदि कुनै मनुष्य निषिद्ध गुरुको शिष्य बन्यो भने ऊ पनि खराब कार्यहरूमा तत्परतापूर्वक लाग्छ, जसबाट उसको सङ्कल्प पनि दूषित हुन्छ र त्यसको फलस्वरूप उसले निकृष्ट योनिहरूमा घुमिरहनुपर्छ। उसले कल्पसम्म मनुष्य योनि प्राप्त गर्दैन। जब उसले शुभ सङ्कल्प गर्न थाल्छ, त्यसपछि मात्र उसले मनुष्य योनिमा जन्म लिन्छ।

**शृणु तत्त्वमिदं देवी यदा स्याद्विरतो नरः।**
**तदाऽसावधिकारीति प्रोच्यते श्रुतमस्तकैः ॥३४॥**

हे देवी! यो तत्त्वका विषयमा ध्यानपूर्वक सुन। श्रुतिहरूका अनुसार जब मनुष्यमा वैराग्य उत्पन्न हुन्छ, त्यसपछि त्यो ज्ञान प्राप्त गर्न योग्य हुन्छ अर्थात् प्रारब्धअनुसार गुरु प्राप्त हुने कुरा अलग हो र विचारद्वारा गुरु छान्ने कुरा अलग हो। ॥३४॥

भगवान् श्रीशिव भन्नुहुन्छ– हे देवी! हामीले अर्थात् मनुष्यले तत्त्वज्ञान प्राप्त गर्ने आधार उपनिषद् हुन्। मनुष्यको सभ्यता, संस्कृति र जीवन पद्धतिको मुख्य आधार पनि उपनिषद् नै हुन्। हामीले सबै निर्णय उपनिषद्हरूकै प्रमाणका आधारमा गर्छौं, जुन ज्ञानका भण्डार हुन्। उपनिषद्का अनुसार गुरुले आफ्नो गोपनीय ज्ञान योग्य शिष्यलाई मात्र दिन्छन्। जो योग्य छैन, त्यसलाई यो रहस्यका विषयमा बताउन निषेध गरिएको छ। त्यसैलाई योग्य मानिन्छ, जसमा सांसारिक भोगहरू प्रति आसक्ति रहेको छैन तथा जसले ब्रह्मलाई प्राप्त गर्ने अभिलाषा मात्र राख्छ। यसप्रकारको शिष्य मात्र गुरुबाट तत्त्वज्ञान प्राप्त गर्न योग्य हुन्छ तथा त्यसैलाई गुरुले **तत्त्वमसि**को उपदेश दिन्छन्। जो विरक्त वा वैराग्यवान् छैन, जसले सांसारिक भोगहरू प्राप्त गर्ने अभिलाषा राख्छ; त्यसैले प्रारब्धअनुसार कुनै निषिद्ध गुरु प्राप्त गर्छ अन्यथा ज्ञान प्राप्त गर्ने अभिलाषा भएकाहरूले विचार गरेर मात्र गुरु छान्दछन्, जसले उसलाई मुक्तिको बाटो देखाउने छन्।

**अखण्डैकरसं ब्रह्म नित्यमुक्तं निरामयम्।**
**स्वस्मिन् सन्दर्शितं येन स भवेदस्य देशिकः ॥३५॥**

जसले आफैँभित्र अखण्ड, एकरस, नित्यमुक्त र निरामय ब्रह्मलाई देखाउँछन्, तिनैलाई गुरु बनाउनुपर्छ। ॥३५॥

यसभन्दा पहिले जसलाई परम गुरु बताइएको छ, ती एकमात्र सद्गुरु हुन्। ती गुरुले शिष्यलाई तिमी शरीर, मन बुद्धिलगायत जड प्रकृतिद्वारा उत्पन्न जीव मात्र नभएर शुद्ध चैतन्यस्वरूप हौ, जो ब्रह्मसँग अभिन्न छ भनेर आत्माको ज्ञान गराउने छन्। यसैगरी ब्रह्म अखण्ड, अविनाशी, एकरस, सबैतिर व्याप्त हुनुहुन्छ, तिमी पनि त्यही हौ तथा उहाँ बन्धनमुक्त हुनुहुन्छ र तिमी पनि त्यही हौ भन्ने बुझाइदिन्छन्। यसरी नै मुक्तिका लागि जाग्रत् हुनु पर्याप्त हुन्छ। यदि तिमी गहिरो निद्रामा परेका छौ भने तिमीले जाग्रतावस्थामा फर्किएर आफैँ ब्रह्मभएको अनुभव गर भन्ने उपदेश दिन्छन्। यसैबाट ब्रह्म र जीव तथा जगत्को एकता सिद्ध हुन्छ। यसकारण शिष्यले आफैँभित्र ब्रह्मको दर्शन गराउन सक्ने गुरुका शरणमा जानुपर्छ।

**जलानां सागरो राजा यथा भवति पार्वती।**
**गुरुणां तत्र सर्वेषां राजायं परमो गुरुः ॥३६॥**

हे पार्वती! जसरी सबै जलाशयहरूको राजा सागर हुन्छ, त्यसैगरी सबै गुरुहरूका राजा **परम गुरु** हुन्। ॥३६॥

जसरी पृथ्वीमा भएका सबै जलाशयहरू अर्थात् पोखरी, इनार, नदीहरूलगायतको मुख्य स्रोत समुद्र हो, जसबाट सबैलाई जल प्राप्त हुन्छ, त्यसलाई यी सबैको राजा भनिन्छ। त्यसैगरी सबै गुरुहरूमध्ये जो **परम गुरु** छन्, ती यी सबैका राजा हुन्। यदि परम गुरु सूर्य हुन् भने अन्य सबै चन्द्रमा जस्तै हुन्, जो उनैद्वारा ज्ञानज्योति प्राप्त गरेर प्रकाशमय हुन्छन्। यिनीहरूमध्ये सबैभन्दा ठूलो गुरु आफ्नै आत्मा हो, जुन आफैँ ज्ञानस्वरूप छ तथा अन्य सबै जड प्रकृति हुन्, जसमा ज्ञानको अभाव छ। त्यसकारण जसले त्यो आत्मस्वरूपको ज्ञान गराइदिन्छन्, तिनै **परम गुरु** हुन् तथा अन्य सबै उनका छाया मात्र हुन्, जसले उनकै शक्ति प्राप्त गरेर ज्ञानको उपदेश दिन्छन्।

**मोहादिरहितः शान्तो नित्यतृप्तो निराश्रयः।**
**तृणीकृतब्रह्माविष्णुवैभवः परमो गुरुः ॥३७॥**

मोहलगायतका विकाररहित, शान्त, सधैँ तृप्त, अन्यको आश्रयविहीन, ब्रह्मा र विष्णुको वैभवलाई पनि अति सानो छेस्को बराबर सम्भने गुरु मात्र **परम गुरु** हुन्। ॥३७॥

परम गुरुको लक्षणका विषयमा बताउने सिलसिलामा भगवान् श्रीशिव भन्नुहुन्छ– ती सांसारिक मोह, ममता, आसक्ति, वासना, कामना, ईर्ष्या, निन्दा, क्रोध वैमनस्यलगायतका दोषहरूबाट यथार्थ रूपमा अलग हुन्छन्। यसैगरी उनी शान्त चित्त भएका, सबै किसिमका उद्वेगरहित हुन्छन् तथा सधैँ आफ्नै आत्मामा तृप्त रहन्छन्। उनमा कुनै अभिलाषा हुँदैन तथा उनले ब्रह्मा, विष्णुलगायतको वैभव अर्थात् ऐश्वर्यलाई पनि तुच्छ सम्भँदै त्यसको कामना पनि गर्दैन। जो यसप्रकारका परम ज्ञानी महात्मा छन्, तिनै **परम गुरु** हुन्। यस्ता गुरुको मात्र पूजा गर्नुपर्छ।

**सर्वकालविदेशेषु स्वतन्त्रो निश्चलस्सुखी।**
**अखण्डैकरसास्वादतृप्तो हि परमो गुरु ॥३८॥**

सबै समयमा र सबै स्थानमा स्वतन्त्र निश्चल, सुखी, अखण्ड एकरसको आनन्दबाट सन्तुष्ट मात्र वास्तविक **परम गुरु** हुन्। ॥३८॥

जो सबै समयमा एकरस रहन्छन्, जसले जाडो-गर्मीको चिन्ता गर्दैन, सुख-दुःखको वास्ता गर्दैनन्, हर्ष-विषादरहित छन्, जसलाई खानेकुरा र कपडाको

चिन्ता छैन, जसले कसैबाट केही प्राप्त गर्ने अभिलाषा राख्दैनन्, जसमा नैराश्यता उत्पन्न हुँदैन, जो सबै ठाउँमा स्वेच्छापूर्वक घुम्दछन्, जसलाई कसैको बन्धन स्वीकार्य छैन, जो सधैँ निश्चल रहन्छ। जसको मन र बुद्धि कुनै प्रलोभन वा दबावमा चलायमान हुँदैन, जो सधैँ सुखी र प्रसन्न मुद्रामा रहन्छ। किनकि उनी एकमात्र अखण्ड परब्रह्मको आनन्दबाट तृप्त भएका हुन्छन् वा भएर रहन्छन्। जसले क्षणिक आनन्द र सुखहरू परित्याग गरेर परम आनन्दको भोग गरिसकेको छन्, यसप्रकारका गुरु मात्र **परम गुरु** हुन्छन्।

**द्वैताद्वैतविनिर्मुक्तः स्वानुभूतिप्रकाशवान्।**
**आज्ञानान्धतमश्छेत्ता सर्वज्ञः परमो गुरुः ॥३९॥**

द्वैत र अद्वैतबाट मुक्त, आफ्नो अनुभवस्वरूपी प्रकाशसम्पन्न, अज्ञानरूपी अन्धकार परित्याग गर्ने र सबैका ज्ञाता मात्र **परम गुरु** हुन्। ॥३९॥

द्वैत तथा अद्वैत मन र बुद्धिको विषय हो, जुन बुद्धिवादीहरूकै मान्यता हो। जीवात्मा र आत्मा अलग छन्, आत्मा र परमात्मा अलग छन्, पुरुष र प्रकृति अलग छन्, सबै आत्माहरू अलग-अलग हुन्, जड र चेतन दुइटा अलग तत्त्व हुन्, मनुष्य परमात्माको सन्तान हो, परमात्मा पूर्ण हुनुहुन्छ, जीव अपूर्ण छ, परमात्मा ज्ञानस्वरूप हुनुहुन्छ, जीव अज्ञानी छ भन्नेलगायतका सबै मान्यताहरू द्वैतवादी मान्यताहरू हुन्, जुन बुद्धिकै उपज हो।

यसका विपरीत सृष्टिको मूल तत्त्व एउटै छ भन्ने अद्वैतको मान्यता पनि बुद्धिकै उपज हो। किनकि यो समग्र सृष्टि परमात्माकै अभिव्यक्ति हो, उहाँ एकमात्र अनेकौँ रूपहरूमा व्यक्त हुनु भएको छ। सृष्टिमा अर्को कुनै तत्त्व छैन। यसैले यो समग्र जगत् परब्रह्म नै हो। अज्ञानका कारणले भिन्नताको अनुभूति भएको हो।

यस भगवान् श्रीशिव यी दुइटा मतभन्दा अगाडिको कुरा बताउनुहुन्छ। उहाँका अनुसार यो द्वैत र अद्वैतको ज्ञान हुने त जसलाई जान्दछ, त्योभन्दा अलग नै हुन्छ। किनकि ज्ञाता र ज्ञेयको भिन्नताबाटै ज्ञान हुन्छ। किनकि यदि ज्ञाता ज्ञेयभन्दा अलग छैन भने कसरी जान्न सकिन्छ ? जब ज्ञाता, ज्ञेय र ज्ञानको अन्त हुन्छ त्यसपछि जान्ने आफैँ रहँदैन अर्थात् बच्दैन, त्यसपछि द्वैत र अद्वैत केलाई भन्ने ? यसैले भगवान् श्रीशिव भन्नुहुन्छ– यो द्वैत र अद्वैतलाई बुद्धिद्वारा जानिन्छ, जुन आफैँमा अवस्थित छ। यी दुवै मनका अनुभूतिहरू मात्र हुन्। मनभन्दा पर चेतना छ,

जसमा प्रवेश गरेपछि द्वैत र अद्वैत रहँदैन। यसकारण जुन ज्ञानी परब्रह्ममा विलीन भइसकेको छ, त्यो यी द्वैत र अद्वैतबाट मुक्त हुन्छ। यसप्रकारका ब्रह्मज्ञानी मात्र **परम गुरु** हुन्छन्। यस्ता गुरुले मात्र अरूमा भएको अज्ञान हटाउन सक्तछन्। यसैले परम गुरु मात्र सर्वज्ञ हुन्छन्। किनकि उनले सृष्टिको अन्तिम सत्यलाई जानिसकेका हुन्छन्। गुरुगीताको यो श्लोक ज्यादै महत्त्वपूर्ण छ। दत्तात्रेयले **अवधूतगीता**मा यसैको निराकरण गरेका छन्, जुन एउटा पढ्नै पर्ने ग्रन्थ हो।

**यस्य दर्शनमात्रेण मनसः स्यात् प्रसन्नता।**
**स्वयं भूयात् धृतिश्शान्तिः स भवेत् परमो गुरुः ॥४०॥**

जसको दर्शन मात्र गर्दा पनि मन प्रसन्न हुन्छ तथा स्वतः धैर्य र शान्ति प्राप्त हुन्छ, ती **परम गुरु** हुन्। ॥४०॥

जुन गुरुले ज्ञान प्राप्त गरिसकेका छन्, जसले परब्रह्मसँग साक्षात्कार गरिसकेका छन्, जसको कुण्डलिनी शक्ति शिवत्वमा विलीन भइसकेको छ, जसको कण–कणमा परब्रह्मको तेज व्याप्त भएको छ, जसको मुखमण्डल तेजोमय भइसकेको छ, उनको मुखमण्डलबाट निस्कने तेजद्वारा उनको नजीकमा जाने सबै प्रभावित हुन्छन्। ती गुरुको शरीरबाट निस्किएका अदृश्य किरणहरूले उनको नजीकमा पुगेको मनुष्यलाई मात्र नभएर पशु–पक्षीहरूलाई पनि आनन्दित बनाउँछन्। उनको दर्शन गरेपछि मनका सबै विकार नष्ट भएर मनमा अति प्रसन्नता र शान्ति प्राप्त भएको अनुभूति हुन्छ। यसप्रकारका गुरुलाई मात्र **परम गुरु** भनिन्छ।

**स्वशरीरं शवं पश्यन् तथा स्वात्मानमद्वयम्।**
**यः स्त्रीकनकमोहघ्नः स भवेत् परमो गुरुः ॥४१॥**

जसले आफ्नो शरीरलाई शव सम्झन्छन् र आफ्नो आत्मा अद्वितीय भएको जान्दछन् तथा जो स्त्री र धनलगायतमा मोहरहित छन्, ती **परम गुरु** हुन्। ॥४१॥

माथि बताइएका लक्षणहरूका आधारमा परम गुरुलाई चिन्न सकिन्छ। उनी आत्मा तथा परब्रह्ममा मात्र विलीन हुनु उनको एउटा लक्षण हो। किनकि उनले आफूलाई ब्रह्ममय सम्झन्छन्, जसले गर्दा उनको यो भौतिक शरीरसँग सम्बन्धविच्छेद हुन्छ। उनले आफ्नो शरीरलाई शव बराबर सम्झन्छन्। उनले यो शरीर भौतिक तत्त्वहरूद्वारा बनेकाले जड हो तथा म चैतन्य हुँ भन्ने सम्झन्छन्।

यसैले उनले यससँग आफ्नो कुनै सम्बन्ध नभएको मान्छन् तथा आफूलाई परमात्मा, ब्रह्म र आत्मभन्दा अलग नभएर अद्वितीय मान्छन्। किनकि उनको मान्यतामा आत्मा–आत्मामा भेद हुँदैन। जसले स्त्री, धनलगायत भौतिक वस्तुहरूको मोह परित्याग गरिसकेको छ, जसमा कहिल्यै सांसारिक मोहहरूको वासना उदय हुँदैन, यसप्रकारका महात्मालाई मात्र **परम गुरु** मान्नुपर्छ।

**मौनी वाग्मीति तत्त्वज्ञो द्विधाभूच्छृणु पार्वती।**
**न कश्चिन्मौनिना लाभो लोकेऽस्मिन्भवति प्रिये ॥४२॥**
**वाग्मी तूत्कटसंसारसागरोत्तारणक्षमः ।**
**यतोऽसौ संशयच्छेत्ता शास्त्रयुक्त्यनुभूतिभिः ॥४२॥**

हे पार्वती! मौनी र वक्तासहित तत्त्वज्ञ दुई किसिमका हुन्छन्, तिनीहरूका विषयमा सुन। हे प्रेयसी! यिनीहरूमध्ये मौनी गुरुद्वारा मनुष्यहरूलाई कुनै लाभ हुन सक्तैन भने वक्ता गुरुले यो भयानक सांसारिक सागरबाट पार गराउँछन्। किनकि उनले शास्त्रीय तर्क र अनुभूतिका माध्यमद्वारा सबै संशयहरू काट्न वा फुकाउन सक्छन्। ॥४१॥ ॥४२॥

भगवान् श्रीशिव देवी पार्वतीसँग भन्नुहुन्छ– हे पार्वती! तत्त्वज्ञ ज्ञानी पुरुषमा पनि दुई किसिमको भेद हुन्छ। कुनै ज्ञानी परब्रह्मलाई प्राप्त गरेपछि यथार्थ रूपमा शान्त अथवा मौनावस्थामा रहन्छन् अर्थात् उनी केही पनि बोल्दैनन्। उनी त्यो आनन्दको रस पिउँदै आफैँमा आनन्दित हुन्छन्। उनमा बोल्ने कुनै चाहना हुँदैन। किनकि परम आनन्दमय अवस्थामा बोली आफैँ बन्द हुन्छ। यी मौनता धारण गरेका ज्ञानीभन्दा वक्ता गुरु श्रेष्ठ हुन्, जसले ज्ञानका माध्यमद्वारा यो संसाररूपी सागरबाट अन्यको पनि उद्धार गरिदिन्छन्। यी वक्ता गुरुले शास्त्रहरूको प्रमाणका आधारमा, आफ्नो तर्क गर्ने शक्तिद्वारा तथा आफ्नो अनुभवका आधारमा मनुष्यहरूमा भएका सबै संशय हटाइदिएर उनीहरूलाई ज्ञानको शिखरमा पुर्‍याइदिन्छन्।

**गुरुनामजपाद्देवि बहुजन्मार्जितान्यपि ।**
**पापानि विलयं यान्ति नास्ति सन्देहमण्वपि ॥४४॥**

हे देवी! गुरुका नामको जप गर्नाले अनेकौँ जन्महरूमा एकत्रित भएको पाप पूर्ण रूपमा नष्ट हुनेमा अलिकति पनि द्विविधा छैन। ॥४४॥

परमात्मासँग सम्बन्ध स्थापित गराउने मुख्य साधन उहाँका नामको जप हो। कलियुगमा यसैलाई सर्वोत्कृष्ट आधार मानिएको छ। जसले कठिन साधना गर्न सक्तैन, यम–नियमको पालना गर्न पनि सक्तैन, निष्काम कर्म गर्न पनि सक्तैन तथा धारणा, ध्यान, समाधिलगायतको अभ्यास गर्न पनि सक्तैन, त्यसले नामको स्मरण वा जप गरिरहनुपर्छ। यसैका माध्यमद्वारा परमात्माको कृपा प्राप्त हुन्छ, जसको प्रभावले उसको चित्त स्वच्छ हुन्छ। यही स्वच्छताले उसलाई परमात्माका नजीकमा पुऱ्याउँछ। परमात्मालाई देख्न नसकिने भए तापनि जो ज्ञानी गुरु छन्, जसले परमात्माको अनुभूति गरिसकेका छन्, उनैलाई परमात्माको स्वरूप सम्झिएर उनका नामको जप गऱ्यो भने त्यो साधकले परमात्मा प्राप्तिरूपी फल पाउँछ। किनकि माध्यम जोसुकै भए तापनि फल त एउटै प्राप्त हुन्छ र त्यो हो परमात्माको प्राप्ति, यसैका प्रभावले अनेकौँ जन्महरूका पाप नष्ट हुन्छन्। यो पाप र पुण्यको कारकतत्त्व मनुष्यको मन हो। किनकि मनले नै पाप र पुण्य गराउँछ। परमात्मालाई प्राप्त गरेपछि मन नै नरहने भएकाले पाप र पुण्य पनि हुँदैन वा रहँदैन। त्यसपछि मनुष्य यी दुवैबाट यथार्थ रूपमा मुक्त हुन्छ। ऊ आफैँ परमात्मा बराबर हुन्छ।

**कुलं धनं बलं शास्त्रं बान्धवास्सोदरा इमे।**
**मरणे नापयुज्यन्ते गुरुरेको हि तारकः ॥४५॥**

आफ्नो मृत्यु हुने अवस्थामा आफ्नो कुल, धन, बल, शास्त्र, बन्धु–बान्धवले केही गर्न सक्तैनन्। त्यस समयमा गुरुले मात्र पार लगाउँछन्। ॥४५॥

मृत्युका समयमा सांसारिक व्यक्तिहरूसँग जोडिएको सम्बन्धले केही उपलब्धि प्राप्त हुन सक्तैन। किनकि उसको यसभन्दा अगाडिको यात्रामा यिनीहरू कसैले सहयोग गर्न सक्तैनन्। अगाडिको यात्रा त एक्लैले गर्नुपर्छ। त्यस समयमा गुरुको ज्ञान मात्र सहयोगी हुन्छ; जसको सहयोगले मनुष्य यो सांसारिक समुद्र तरेर आफ्नो अगाडिको यात्रामा निस्कन्छ तथा गुरुको प्रसादबाटै उसले मुक्ति प्राप्त गर्छ। यसकारण गुरु मुक्तिदाता हुन्, यसैले उनलाई छाड्नु हुँदैन।

**कुलमेव पवित्रं स्यात् सत्यं स्वगुरुसेवया।**
**तृप्ता स्युस्सकला देवा ब्रह्माद्या गुरुतर्पणात् ॥४६॥**

आफ्ना गुरुको श्रद्धापूर्वक सेवा गर्नाले आफ्नो कुल पनि पवित्र हुन्छ। गुरुलाई दिइएको तर्पणबट ब्रह्मालगायत सबै देवता तृप्त हुन्छन्। ॥४६॥

जसले श्रद्धापूर्वक आफ्ना गुरुको सेवा गर्छ, त्यसको फल उसको समग्र कुललाई प्राप्त हुन्छ। किनकि उसको समग्र कुल कुनै न कुनै रूपमा गुरुसँग जोडिएको हुन्छ, जसले गर्दा सबैले उनको ज्ञानको लाभ उठाउँछन्। गुरु समाजबाट विरक्त हुने भएकाले उनको तर्पण शिष्यले मात्र गर्दछ। जसबाट ब्रह्मालगायत सबै देवता तृप्त हुन्छन्।

**स्वरूपज्ञानशून्येन कृतमप्यकृतं भवेत्।**
**तपो जपादिकं देवी सकलं बालजल्पवत् ॥४७॥**

हे देवी! स्वरूपको ज्ञान प्राप्त नगरी गरिएका जप–तपस्यालगायत सबै बालकको बाल जिज्ञासा जस्तै व्यर्थ हुन्छन्। ॥४७॥

आफ्नो यथार्थ स्वरूप आत्माको ज्ञान प्राप्त गर्नका लागि मात्र सबै किसिमका जप, तपस्या, साधना, नियम, संयम, व्रत, तीर्थ, सेवालगायत गरिन्छ। यदि यी सबै गर्दा आफ्नो यथार्थ स्वरूप आत्माको ज्ञान हुन सकेन, परमात्माको अनुभूति हुन सकेन भने यी सबै साधना व्यर्थ हुन्छन्। जसरी बालकले बोलेको कुराको कुनै प्रयोजन हुँदैन, न त्यसबाट कुनै फल प्राप्त हुन्छ; त्यसैगरी ती सबै क्रियाहरूले आत्मज्ञानको प्राप्ति गराउन सकेनन् भने ती व्यर्थ हुन्। यसकारण यी सबै क्रिया आत्माको अनुभूतिलाई लक्ष्य बनाएर गर्नुपर्छ।

**न जानन्ति परं तत्त्वं गुरुदीक्षापराङ्मुखाः।**
**भ्रान्ताः पशुसमा ह्येते स्वपरिज्ञानवर्जिताः ॥४८॥**

गुरु दीक्षा नपाएका मनुष्य भ्रमित हुन्छन् अर्थात् उनीहरूलाई आफ्नो वास्तविक स्वरूपको ज्ञान हुँदैन। यथार्थमा ती पशु बराबर हुन्, जसलाई परमतत्त्वको ज्ञान हुँदैन। ॥४८॥

जसले वेद, शास्त्र, पुराणहरूको धेरै अध्ययन गरेर विद्वत्ता प्राप्त गर्छ, अरूलाई उपदेश दिइरहन्छ, तर्क गर्न ज्यादै सिपालु छ, तर जसको कुनै गुरु छैन, जसले गुरुबाट दीक्षा लिएको छैन, जसलाई गुरुको नजीकमा बस्ने सौभाग्य प्राप्त भएको छैन, त्यसमा भ्रम रहिरहने भएकाले वास्तविक श्रद्धा उत्पन्न हुन सक्तैन। त्यसले आफ्नो यथार्थ स्वरूप आत्मालाई जान्न सक्तैन। किनकि पुस्तकहरूबाट आत्माको ज्ञान हुन सक्तैन र पुस्तकहरूले नै भ्रम उत्पन्न गराइदिन्छन्। यसैले आत्माको ज्ञान गुरुबाट मात्र प्राप्त हुन्छ, जसका लागि अनिवार्य रूपमा दीक्षा

लिनुपर्छ। आत्माको ज्ञान प्राप्त नगरेको व्यक्तिले पशु समान भएर जीवन बिताउँछ। किनकि आहार, निद्रा, भय र मैथुन त मनुष्य र पशुहरूमा समान हुन्छ, तर धर्म नै मनुष्यको विशेषता हो। जो धर्मविहीन छ, त्यसको जीवन पशु बराबर हुन्छ। यो धर्मका माध्यमद्वारा मनुष्यलाई आफ्नो यथार्थस्वरूपको ज्ञान हुन्छ; जुन मनुष्यको श्रेष्ठता हो अन्यथा मनुष्य र पशुमा कुनै भेद हुँदैन। त्यो परमतत्त्वरूपी आत्माका विषयमा गुरुद्वारा मात्र जान्न सकिन्छ। जसका लागि गुरुबाट दीक्षा लिन अति आवश्यक हुन्छ।

**तस्मात्कैवल्यसिद्ध्यर्थं गुरुमेव भजेत्प्रिये।**
**गुरुं विना न जानन्ति मूढास्तत्परमं पदम् ॥४९॥**

यसैले हे प्रिये! कैवल्य सिद्धि प्राप्तिका लागि गुरुको कीर्तन गर्नुपर्छ। गुरु नभएको अविवेकी मनुष्यले त्यो परमपदका विषयमा जान्न सक्तैन। ॥४९॥

भगवान् श्रीशिव भन्नुहुन्छ– हे प्रिये! यदि कसैले कैवल्य सिद्धि प्राप्त गर्न चाहन्छ, मोक्ष प्राप्त गर्ने अभिलाषा राख्छ तथा यो सांसारिक बन्धनबाट सधैँका लागि मुक्त हुन चाहन्छ भने यी वेद, शास्त्र, पुराण, गीता, भागवतलगायतबाट उसको कल्याण हुन सक्तैन। किनकि यिनीहरूले आत्माको अनुभव गराउन सक्तैनन् अथवा आत्माको अनुभव गुरुले मात्र गराउन सक्तछन्। यसैले उनैको कीर्तन गर्नुपर्छ। जो अविवेकी छ, मूर्ख छ, उसले यो परमपदका विषमया जान्न सक्तैन। उसमा भएको यो अज्ञान गुरुले मात्र हटाइदिन्छन्। उनैले उसलाई कैवल्यरूपी परमपदको प्राप्ति गराइदिन्छन्।

**भिद्यते हृदयग्रन्थिश्छिद्यन्ते सर्वसंशयाः।**
**क्षीयन्ते सर्वकर्माणि गुरोः करुणया शिवे ॥५०॥**

हे पार्वती! गुरुको कृपाद्वारा हृदयको गाँठो फुक्छ, सबै संशय र कर्महरू नष्ट हुन्छन्। ॥५०॥

भगवान् श्रीशिव देवी पार्वतीसँग भन्नुहुन्छ– हे पार्वती! मनुष्य ज्यादै अज्ञानी हुन्छ। उसमा भएको सबैभन्दा ठूलो अज्ञान के हो भने उसलाई यो सृष्टिको मूल तत्त्व परब्रह्मका विषयमा ज्ञान हुँदैन, उसले परमात्मा र आफ्नो आत्मस्वरूपलाई चिन्न सक्तैन, जुन सृष्टिको एकमात्र चेतन हो, जसबाट सृष्टिको रचना, पालन र संहार हुन्छ। परमात्मा मात्र सृष्टिको आदिकारण, सत्य र ज्ञानस्वरूप हुनुहुन्छ।

उहाँलाई मनुष्यले सहर्ष स्वीकार गर्छन्, तर जान्ने प्रयास गर्दैनन्। यसरी स्वीकार गर्दा सधैं भ्रम रहिरहन्छ। जबसमम प्रत्यक्ष रूपमा उहाँको अनुभूति हुँदैन, त्यस समयसम्म भ्रम हट्दैन। यो देख्न सकिने जगत्लाई सत्य र शाश्वत मान्नु नै भ्रम हो।

यो अज्ञान गुरुद्वारा मात्र नष्ट हुन सक्तछ, जसका माध्यमद्वारा उसलाई परब्रह्मको अनुभूति हुन्छ। यसपछि उसका सबै संशय र भ्रम हट्न सक्तछन् तथा उसले सबै कर्महरू नष्ट भएर मुक्ति प्राप्ति भएको अनुभव गर्दछ।

**कृताया गुरुभक्तेस्यु वेदशास्त्रानुसारतः।**
**मुच्यते पातकाद् घोराद् गुरुभक्तो विशेषतः ॥५१॥**

वेद र शास्त्रहरूका अनुसार गुरुको अत्यधिक भक्ति गर्ने विशेष गुरु भक्त घोर पापबाट पनि मुक्त हुन्छ। ॥५१॥

पाप र पुण्यको कुनै स्पष्ट परिभाषा छैन। किनकि एक समयमा गरिएको पाप अर्को समयमा पुण्य बन्दछ। एउटासँग गरिएको पाप अर्काका लागि पुण्य हुन्छ। झूट बोल्नु पाप हो, तर यदि त्यो झूटबाट कसैको जीवन रक्षा हुन्छ भने त्यो झूट पनि पुण्य बन्दछ। गृहस्थमा स्त्रीसँगको सहवास पुण्य हो भने त्यही सन्यासीका लागि पाप हो। यसैले पाप र पुण्यको आधार कुनै घटनालाई मान्न सकिँदैन, न त यसलाई नाप्ने कुनै यन्त्र छ। यो पाप र पुण्यको स्मृति उसको चित्तमा रहन्छ, जसबाट उसले सुख र दुःखको अनुभूति गर्छ। यदि कुनै सद्गुरु प्राप्त भए भने आत्माको अनुभवद्वारा उसलाई ती सबै स्मृतिहरूबाट मुक्त गराइदिन्छन्। किनकि यी सबै पाप र पुण्य मनका कारणले भएका हुन्। यिनीहरूसँग आत्माको कुनै सम्बन्ध हुँदैन। यसैले आत्मज्ञानी पुरुष घोर पापबाट पनि मुक्त हुन्छ।

**दुःसङ्ग च परित्यज्य पापकर्म परित्यजेत्।**
**चित्तचिह्नमिदं यस्य यस्य दीक्षा विधीयते ॥५२॥**

जसको चित्तमा दुष्टहरूको सङ्गत परित्याग गरेर पाप कर्म छेडिदिनुपर्छ भन्ने चिह्न वा भाव देखिन्छ। उसले गुरु दीक्षा लिनुपर्छ अर्थात् उसका लागि गुरु दीक्षाको विधान छ। ॥५२॥

गुरुले जोसुकैलाई दीक्षा दिँदैनन्। उनले जसलाई दीक्षा दिने हो, त्यसलाई धेरै लामो समयसम्म आफैँसँग राखेर वेदको अध्ययन गराउँछन्। उसले त्यहाँ बसेर नियम र संयमतापूर्वक गुरुको सेवा गर्नुपर्छ। उसलाई त्यहाँ साधना पनि सिकाइन्छ,

जसका प्रभावले उसको चित्त निर्मल हुन्छ। जुन शिष्य दीक्षाका लागि योग्य हुन्छ; उसले दुष्ट व्यक्तिहरूको सङ्गत त्याग्नुपर्छ तथा शास्त्रमा बताइएका पापकर्म परित्याग गर्दै सात्त्विक जीवननिर्वाह गर्नुपर्छ। आत्मज्ञान प्राप्त भएपछि पुराना पाप कर्म नष्ट हुन्छन् भने प्रारब्धअनुसारका कर्महरू ज्ञान प्राप्ति पछि पनि भोग्नुपर्छ, जुन भोग गरेपछि नष्ट हुन्छन्; तर नयाँ कर्महरू सञ्चित गर्नु हुँदैन। यदि गुरुले शिष्यमा यसप्रकारको सङ्केत देखे भने उसलाई दीक्षा दिने विधान छ। त्यसपछि ऊ गुरुको मर्यादाद्वारा बाँधिन्छ।

**चित्तत्यागनियुक्तश्च क्रोधगर्वविवर्जितः ।**
**द्वैतभावपरित्यागी तस्य दीक्षा विधीयते ॥५३॥**

जो चित्त परित्याग गर्ने प्रयासमा लागेको तथा क्रोध र घमण्डरहित छ, जसले द्वैतभाव परित्याग गरेको छ, त्यसलाई गुरु दीक्षा दिने विधान छ। ॥५३॥

संसारमा जुनसुकै कार्यका लागि पनि उपयुक्त योग्यता हुनै पर्छ। यदि अयोग्य व्यक्ति छनौट भयो भने उसले त्यो पद र त्यसको गरिमाको दुरुपयोग गर्छ। यसैगरी आजको आधात्मिक शिष्य भोलिको आध्यात्मिक गुरु बन्दछ। यदि त्यो कामवासनासम्पन्न, रिसाहा, लोभी, अहङ्कारी, द्वैतभावसम्पन्न भयो, जसले मनुष्य-मनुष्यमा भेदभाव राख्छ, धर्म र सम्प्रदायहरूमा भेद दृष्टि राख्छ, आत्मा-आत्मामा भेदभाव राख्छ भने त्यो शिष्य हुन योग्य हुँदैन। यसप्रकारको शिष्यलाई दीक्षा दिनु हुँदैन। जसले आफ्नो चित्तबाट यसप्रकारका भावना हटाएको छ, त्यही दीक्षाका लागि योग्य पात्र हो तथा शास्त्रीय विधानअनुसार त्यसैलाई दीक्षा दिनुपर्छ।

**एतल्लक्षणसंयुक्ते सर्वभूतहिते रतम् ।**
**निर्मलं जीवितं यस्य यस्य दीक्षा विधीयते ॥५४॥**

जसको जीवन माथि बताएका लक्षणहरूले सम्पन्न छ, निर्मल छ, जो सबै जीवहरूको कल्याणमा एकाग्रतापूर्वक लाग्छ, त्यसलाई गुरु दीक्षा दिने विधान छ। ॥५४॥

गुरु दीक्षा लिनका लागि यस भन्दा पहिले बताइएका लक्षणहरूले सम्पन्न हुनु पर्छ। जबसम्म ऊ यी गुणहरूले सम्पन्न हुँदैन, त्यस समयसम्म शिष्य बनाउन त सकिन्छ; तर त्यसलाई दीक्षा दिनु हुँदैन। जो चित्त निर्मल भएको, झूट-कपटलगायतमा नलागेको, सबै जीवमा दयाभाव राख्ने तथा तिनीहरूको कल्याण

हुने कार्यमा एकाग्रतापूर्वक लाग्ने शिष्य छ, त्यसलाई गुरु दीक्षा दिने विधान छ। यसप्रकारको शिष्यलाई दीक्षा दिंदा मात्र गुरुपद प्रतिष्ठित वा सम्मानित हुन्छ।

**अत्यन्तचित्तपक्वस्य श्रद्धाभक्तियुतस्य च।**
**प्रवक्तव्यमिदं देवी ममात्मप्रीतये सदा ॥५५॥**

हे देवी! जसको चित्त धेरै परिपक्व श्रद्धा र भक्तिसम्पन्न छ, मेरा प्रसन्नताका लागि त्यसलाई सधैँ यो तत्त्वका विषयमा बताउनुपर्छ। ॥५५॥

भगवान् श्रीशिव देवी पार्वतीसँग भन्नुहुन्छ– हे देवी! जसको चित्त धेरै परिपक्व छ, जो सांसारिक विषयवासनाबाट पूर्ण रूपमा विरक्त वा वैराग्य भएको छ, जसले गुरुपदको प्रतिष्ठा कायम राख्न सक्छ, जो सात्त्विक गुणसम्पन्न छ तथा जसले गुरु तथा परमात्मामा श्रद्धा र भक्तिभाव राख्दछ, मेरो प्रसन्नताका लागि त्यसैलाई यो भगवान् श्रीशिव प्रसन्न भएर उसलाई मुक्ति प्रदान गर्नु हुनेछ भन्ने तत्त्वको उपदेश दिनुपर्छ।

**सत्कर्मपरिपाकाच्च चित्तशुद्धस्य धीमतः।**
**साधकस्यैव वक्तव्या गुरुगीता प्रयत्नतः ॥५६॥**

सत्कर्मका प्रभावले चित्त शुद्ध भएको बुद्धिमान साधकलाई मात्र गुरुगीताका विषयमा प्रयत्नपूर्वक बताउनुपर्छ। ॥५६॥

यो गुरुगीताका विषयमा त्यो शिष्यलाई मात्र विस्तारपूर्वक बताउनु पर्छ, जसको चित्त सत्कर्मका प्रभावले शुद्ध भइसकेको छ, जसको मन र कर्म दुवै शुद्ध भइसकेका छन् तथा त्यो बुद्धिमान् र विवेकशील पनि छ, जसले समय अनुसार उचित र अनुचित छुट्याउन सक्तछ, जसले यसको दुरुपयोग गर्दैन। यसप्रकारको विश्वास भएपछि मात्र त्यसलाई गुरुगीताका बारेमा यथार्थ रूपमा बताउनु पर्छ, जसले गर्दा उसले यसका भावहरू र अर्थहरूलाई उपयुक्त किसिमले आत्मसात् गर्न सकोस्।

**नास्तिकाय कृतघ्नाय दाम्भिकाय शठाय च।**
**अभक्ताय विभक्ताय न वाच्येयं कदाचन ॥५७॥**

नास्तिक, उपकार गर्नेको अपकार गर्ने, घमण्डी, मूर्ख, अभक्त र विरोधीलाई यो गुरुगीताका विषयमा कहिल्यै पनि बताउनु हुँदैन। ॥५७॥

योग्य व्यक्तिलाई दिइएको उच्च ज्ञानको असल परिणाम आउँछ अन्यथा त्यो ज्ञान पनि विकृत भएर मनुष्यहरूको अकल्याण गर्ने हुन्छ। यसैगरी कुनै पनि उच्च ज्ञानका लागि केही योग्यताहरू अनिवार्य हुन्छन्। यसैले अध्यात्म ज्ञानका लागि केही योग्यता हुनै पर्छ। पहिलो कुरा त यो ज्ञान बुझ्नै कठिन छ। जसको बुद्धिको विकास भएको छैन, त्यसले यसका विषयमा बुझ्नै सक्तैन। यदि बुझे पनि यस अनुसारको जीवननिर्वाह गर्न अझ कठिन छ, जुन प्रत्येक व्यक्तिको सामर्थ्य भन्दा बाहिरको कुरा हो। सांसारिक विरक्ति र भोगहरूको वासना परित्याग त अझ धेरै कठिन छ। आफूमा मोक्ष प्राप्तिको जिज्ञासा हुनु तथा कुनै सद्गुरु प्राप्त गर्नु यो भन्दा पनि कठिन छ। पहिलेका जन्महरूमा गरिएका कर्महरूको फलस्वरूप यी सबैको उपलब्धि हुन्छ। जसका यस्ता कर्म परिपक्व भएर फल दिन तयार हुन्छन्, त्यसपछि यसप्रकारको संयोग आफैँ वा स्वतः प्राप्त हुन्छ। भगवान् श्रीशिवद्वारा उपदेश गरिएको यो **गुरुगीता** पनि यस्तै सर्वोत्कृष्ट उपदेश हो, जुन यसभन्दा पहिले कसैले दिएका थिएनन्। देवी पार्वतीले अनुरोध गरेपछि यसको व्याख्या भएको हो। यो गीताका विषयमा कुनै योग्य शिष्यलाई मात्र बताउनु पर्छ, जसले यसलाई बुझेर यस अनुसारको आचरण गर्न सकोस्। यसैले भगवान् श्रीशिव भन्नुहुन्छ– जो नास्तिक छ, जसमा आत्मज्ञान प्राप्त गर्ने अभिलाषा रहेको छैन, जसले अरूले गरेको उपकार सम्झँदैन, जसले यसको दुरुपयोग गर्छ, जो घमण्डी, पाखण्डी, मूर्ख, भक्तिभावरहित र अहङ्कारी छ, जसले गुरुको विरोध गर्छ, जसले ज्ञान प्राप्त गर्ने चाहना राख्दैन, उसलाई यो गुरुगीताका विषयमा बताउनु हुँदैन। यसैले उच्चज्ञान कुपात्रलाई नभएर सत्पात्रलाई मात्र दिनुपर्छ।

**स्त्रीलोलुपाय मूर्खाय कामोपहतचेतसे।**
**निन्दकाम न वक्तव्या गुरुगीतास्वभावतः ॥५८॥**

स्त्रीमा आसक्त, मूर्ख, कामवासनासम्पन्न चित्त भएको तथा अरूको निन्दा गर्नेलाई गुरुगीताका विषयमा बताउन यथार्थ रूपमा निषेध छ। ॥५८॥

जो स्त्रीमा अति आसक्त छ, जसले स्त्रीलाई कामवासनाको साधन मात्र मान्छ, जसको मन स्त्रीलाई देखेपछि चञ्चल हुन्छ, जो स्त्री भोगका लागि आतुर हुन्छ, त्यो यो अध्यात्म ज्ञानका लागि योग्य हुँदैन। जसले ज्ञान, मुक्ति, सद्गती, परमात्माको दर्शनलगायतको जालो बिछ्याएर स्त्रीहरूलाई आफ्नो वशमा पारेर उनीहरूबाट आफ्नो कामवासना तृप्त गराउने वा मेटाउने अभिलाषा राख्छ।

यसप्रकारको व्यक्तिलाई पनि गुरुगीताको उपदेश दिनु हुँदैन अर्थात् त्यसलाई सुनाउनु हुँदैन। यसबाहेक मूर्खलाई सुनाउनुको पनि कुनै अर्थ छैन। किनकि उसले यसको महत्त्व बुझ्न सक्दैन तथा अरूको निन्दा गर्नेलाई पनि सुनाउनु हुँदैन। किनकि निन्दामा कारणले ऊ सबै किसिमको ज्ञानका लागि अयोग्य भएको हुन्छ। यसैले योग्य पात्रलाई मात्र सद्ज्ञानको उपदेश दिनु पर्छ।

**एकाक्षरप्रदातारं यो गुरुर्नैव मन्यते।**
**श्वानयोनिशतं गत्वा चाण्डालेष्वपि जायते ॥५९॥**

जसले एक अक्षररूपी मन्त्रको उपदेश दिनेलाई गुरु मान्दैन, त्यो सय जन्मसम्म कुकुर भएर फेरि चाण्डालको योनिमा जन्मन्छ अर्थात् पर्छ। ॥५९॥

जुन साधक वा शिष्यले कुनै गुरुबाट दीक्षा लिन्छ भने गुरुले उसलाई एक अक्षर भएको मन्त्रको उपदेश दिन्छन्। गुरुमा श्रद्धा राखेर त्यो गुरुमन्त्रको जप गरिरहनाले उसका सबै कार्य सिद्ध हुन्छन् तथा अन्तमा उसलाई आत्मज्ञानरूपी फल प्राप्त हुन्छ। तर जसले गुरुबाट यसप्रकारको मन्त्र लिएर उनलाई गुरु मान्दैन, त्यो सबैभन्दा ठूलो अपकारी हो। उसका लागि यो लोक र परालोक दुवै बिग्रन्छन्। यसप्रकारको व्यक्तिको उद्धार हुन सक्तैन। यस्तो व्यक्तिले सय जन्मसम्म कुकुरको योनिमा घुमेर फेरि चाण्डालको योनिमा जन्म लिएर दुष्ट कर्महरूको फल भोग्छ। यसैले गुरुप्रति गरिएको विश्वासघात कहिल्यै क्षमा गर्न योग्य हुँदैन। परमात्माले पनि उसलाई कठोर दण्ड दिनु हुन्छ। यो कर्म फलको विधान हो।

**गुरुत्यागाद् भवेन्मृत्युर्मन्त्रत्यागाद्दरिद्रता।**
**गुरुमन्त्रपरित्यागी रौरवं नरकं व्रजेत ॥६०॥**

गुरुलाई परित्याग गर्नाले मृत्यु हुन्छ। गुरुले दिएको मन्त्र परित्याग गर्नाले गरीबीले सताउँछ अर्थात् दरिद्रता आउँछ र गुरु तथा मन्त्र परित्याग गर्ने रौरव नरकमा पर्छ। ॥६०॥

अध्यात्म साहित्यमा विशेष प्रयोजनका लागि लेखिएका अनेकौँ श्लोक छन्। यिनीहरूमध्ये केही धर्म प्रचारका आधारमा लेखिएका छन् भने केही मनुष्यहरूलाई सदाचारको उपदेश दिनका लागि लेखिएका छन्। विज्ञानमा शब्दहरूको एउटै निश्चित अर्थ हुन्छ; तर अध्यात्म र धर्ममा त्यसको अलग अर्थ

लाग्छ तथा त्यसको तात्पर्य र उद्देश्य पनि अलग हुन्छ। यसैले यसप्रकारका शब्दहरू, वाक्यहरू र श्लोकहरूलाई बताइएकै रूपमा सम्झनु हुँदैन।

यसैगरी यो श्लोकको अर्थअनुसार जसलाई गुरु बनाइएको छ तथा जसबाट दीक्षा लिइएको छ, उनको आज्ञा पालना गर्दै त्यो मन्त्रको जप गरिरहनाले निश्चित रूपमा परमगति प्राप्त हुन्छ तथा त्यसलाई परित्याग गर्दा दुर्गति मात्र हुन्छ। त्यसपछि त्यसको उद्धार कसैले गर्न सक्तैन। जसलाई आत्माको अनुभूति हुँदैन, त्यो दरिद्री नै हो, उसको जीवितावस्था मृत्यु बराबर हुन्छ।

**शिवक्रोधाद् गुरुस्त्राता गुरुक्रोधाच्छिवो न हि।**
**तस्मात्सर्वप्रयत्नेन गुरोराज्ञां न लङ्घयेत् ॥६१॥**

शिवको क्रोधबाट गुरुले रक्षा गर्छन्, तर गुरुको क्रोधबाट शिवले रक्षा गर्न सक्तैनन्। यसैले जस्तोसुकै अवस्थामा गुरुको आज्ञा उल्लङ्घन गर्नु हुँदैन। ॥६१॥

आत्मज्ञानी गुरु धेरै शक्तिशाली हुन्छन्। उनी परमात्माकै स्वरूप हुन्। उनमा श्राप र वरदान दिने शक्ति हुन्छ। उनले प्रकृतिलाई पनि नियन्त्रणमा राख्न सक्छन्। यसैले यदि कसैसँग भगवान् श्रीशिव रिसाउनु भयो भने गुरुले त्यसको रक्षा गर्न सक्तछन्। तर यदि कसैसँग गुरु रिसाए भने भगवान् श्रीशिवबाट पनि त्यसको रक्षा हुन सक्तैन। यसैले जस्तोसुकै अवस्थामा पनि गुरुको आज्ञा स्वीकार गर्नुपर्छ। किनकि गुरुबाहेक अन्य कसैले पनि यो सांसारिक समुद्रबाट उद्धार गर्न सक्तैन। परमात्माले पनि गुरुकै माध्यमद्वारा कसैको उद्धार गर्नुहुन्छ।

**सप्तकोटिमहामन्त्राश्चित्तविभ्रंशकारकाः।**
**एक एव महामन्त्रो गुरुरित्यक्षरद्वयम् ॥६२॥**

सात करोड महामन्त्र रहेका छन्। यी सबैले चित्तलाई भ्रममा पार्छन् तथा **गुरु** नामको दुइटा अक्षर भएको एउटा मन्त्र मात्र महामन्त्र हो। ॥६२॥

मन्त्र अनेकौं छन्। तिनीहरूमध्ये परमात्मा प्राप्तिका मन्त्र छन्, देवी-देवताको उपासना गर्ने मन्त्र छन्, योग सिद्धिका मन्त्र छन् तथा मायाको जाल फैलाउनेलगायत सात करोड महामन्त्र छन्, जसको जप गर्नाले अभिलाषा गरिएको फल प्राप्त हुन्छ। तर साधकमा कसको उपासना गर्ने भन्ने द्विविधा हुन्छ तथा

यिनीहरूबाट जुन फल प्राप्त हुन्छ, त्यो पनि अनित्य हुन्छ। जसले नित्य र शाश्वत फल प्राप्त गर्न चाहन्छ, त्यसले दुइटा अक्षरसम्पन्न **गुरु** नाम भउको मन्त्र जप गर्नुपर्छ, जसका माध्यमद्वारा उसले परमपद प्राप्त गर्दछ। यसैले अन्य सबैलाई छाडेर गुरुका शरणमा पर्नुपर्छ।

**न मृषा स्यादियं देवी मदुक्तिः सत्यरूपिणी।**
**गुरुगीतासमं स्तोत्रं नास्ति नास्ति महीतले ॥६३॥**

हे देवी! मैले बताएको यो कुरा कहिल्यै असत्य हुँदैन। यो सत्यस्वरूप छ। यो पृथ्वीलोकमा गुरुगीता बराबरको स्तोत्र अन्य कुनै छैन। ॥६३॥

भगवान् श्रीशिव देवी पार्वतीसँग भन्नुहुन्छ– हे देवी! यो पृथ्वीलोकमा गुरुगीता बराबरको अर्को कुनै स्तोत्र छैन। गुरुको वन्दना, पूजा तथा सेवाद्वारा मात्र शिष्यलाई सबै प्रकारका सिद्धिहरूको प्राप्ति र आत्माको अनुभूति हुन सक्तछ, अन्य कुनै पनि मन्त्रद्वारा यो सबै सम्भव छैन। जुन शिष्यले गुरुगीताका अनुसार आफ्नो गुरुलाई परमात्मा मान्दछ, त्यसैलाई यसको फल प्राप्त हुन्छ। उसका लागि गुरुको आज्ञा पालनाबाहेक अन्य कुनै साधनाको आवश्यकता छैन। मेरो यो भनाइ कहिल्यै असत्य हुने छैन। यो सत्यस्वरूप छ।

**गुरुगीतामिमां देवी भवदुःखविनाशिनीम्।**
**गुरुदीक्षाविहीनस्य पुरतो न पठेत्क्वचित् ॥६४॥**

यो सांसारिक दुःखको विनाश गर्ने अचुक साधन गुरुगीताको पाठ गुरुबाट दीक्षा नपाएको मनुष्यका अगाडि कहिल्यै पनि गर्नु हुँदैन। ॥६४॥

यो गुरुगीताको पाठ गर्नाले सांसारिक सबै किसिमका दुःखहरू नष्ट भएर परमशान्ति तथा आनन्द प्राप्त गर्दछ। यसको नियमित पाठ गर्ने मनुष्यले सबै प्रकारका विकाररहित भएर परम आनन्द प्राप्त गर्दछ। यसको पाठ शान्त चित्त भएर मनलाई एकाग्र गराएर एकान्त स्थानमा बसेर गर्नुपर्छ। मन्त्र जुनसुकै भए तापनि मनलाई एकाग्र बनाएर त्यसको निरन्तर जप गर्नाले त्यससँग सम्बन्धित सिद्धिहरू अवश्य प्राप्त हुन्छन् तथा सबै अभिलाषाहरू पूर्ण हुन्छन्। यसैगरी गुरुगीताको नित्य पाठ गर्नाले गुरुका माध्यमद्वारा निश्चित रूपमा परमात्माको प्राप्ति हुन्छ। तर यसको

पाठ गुरुबाट दीक्षा लिएको व्यक्तिका अगाडि मात्र गर्नुपर्छ। किनकि गुरुको निर्देशन अनुसारको कार्य गर्दाका अवस्थामा मात्र सफलता प्राप्त हुन्छ।

**रहस्यमत्यन्तरहस्यमेतन्न पापिना लभ्यमिदं महेश्वरि।**
**अनेकजन्मार्जितपुण्यपाकाद् गुरोस्तु तत्त्वं लभते मनुष्यः ॥६५॥**

हे पार्वती! यो अत्यन्तै गोपनीय रहस्य हो। यो पापीहरूलाई प्राप्त हुन सक्तैन। किनकि अनेकौं जन्महरूमा गरिएका पुण्यहरू फल दिन सक्षम भएपछि मात्र मनुष्यले गुरुतत्त्व प्राप्त गर्दछ। ॥६५॥

भगवान् श्रीशिव भन्नुहुन्छ– हे पार्वती! गुरुतत्त्वको रहस्यका विषयमा जान्न वा ज्ञान हासिल गर्न ज्यादै कठिन छ। गुरु सामान्य व्यक्ति जस्तै देखिए तापनि उनको महिमा अत्यधिक भएकाले सामान्य बुद्धि भएका मनुष्यले उनको महिमाका विषयमा जान्न सक्तैन। उनको यश र वैभव परमात्माको भन्दा थोरै हुँदैन। जसले परमात्माको अनुभूति गराउँछन्, तिनलाई परमात्मा भन्दा पनि महान् मानिएको छ। गुरुबाहेक अन्य कसैले पनि परमात्माको अनुभूति गराउन सक्तैन। किनकि परमात्मा आफैँ एउटा हुनुहुन्छ भने जसलाई प्रकट गराउने गुरु रहस्यहरूका पनि रहस्य हुन्, जसले त्यो रहस्यको अनुभूति गराउँछन्। उनको यो रहस्य अत्यन्तै गोपनीय भएकाले यसलाई साधारण व्यक्तिका अगाडि व्यक्त गर्न सकिँदैन तथा पापीहरूलाई यो रहस्य छ भन्ने विवेक पनि हुँदैन। जसले अनेकौं जन्महरूमा पुण्य कर्म गरेको छ तथा जब ती पुण्यकर्म परिपक्व भएर फलदिन सक्षम हुन्छन्, त्यसपछि मात्र उसलाई गुरुतत्त्वको महिमाको ज्ञान हुन्छ र यसपछि उसले कुनै सद्‌गुरु प्राप्त गर्छ। यसको रहस्यका अनुसार अन्यले जतिसुकै घुमे तापनि सद्‌गुरु भेट्न सक्तैनन्।

**सर्वतीर्थावगाहस्य सम्प्राप्नोति फलं नरः।**
**गुरोः पादोदकं पीत्वा शेषं शिरसि धारयन् ॥६६॥**

सद्‌गुरुका गोडा धोएको जल पिउने र त्यसलाई शिरमा लगाउने मनुष्यले सबै तीर्थमा स्नान गरेको फल प्राप्त गर्दछ। ॥६६॥

जो यथार्थ रूपमा गुरुका शरणमा समर्पित भएको छ, त्यसले उनैको सहारा लिनुपर्छ। किनकि गुरुका शरणमा परिसकेपछि विभिन्न तीर्थमा घुम्ने, तिनमा स्नान गर्ने, मूर्तिको पूजा गर्ने, मन्दिर जाने, भागवतको कथा सुन्ने, सत्सङ्गलगायतको कुनै अर्थ रहँदैन। यी सबैबाट जुन फल प्राप्त हुन्छ, त्यो सबै फल गुरुबाटै प्राप्त हुन्छ भने

अन्यत्र घुम्न व्यर्थ हुन्छ। गुरुका गोडा धोएको पानी पिएर तथा बाँकी रहेको शिरमा लगाउनाले सबै तीर्थमा स्नान गरेको फल प्राप्त हुन्छ।

**गुरुपादोदकं पानं गुरोरुच्छिष्टभोजनम्।**
**गुरुमूर्तेः सदा ध्यानं गुरोर्नाम्नः सदा जपः ॥६७॥**

गुरुका गोडा धोएको पानी पिउनु, गुरुले भोजन गरेर बचेको खानु, गुरुको मूर्तिको ध्यान गर्नु र गुरुका नामको जप गर्नुपर्छ। ॥६७॥

मनुष्यको मन ज्यादै चञ्चल हुन्छ। यसलाई साधनाका माध्यमद्वारा वशमा गर्न सकिन्छ। सबैभन्दा पहिले यो एकाग्रतापूर्वक भोग प्राप्तिमा लाग्छ। त्यसका लागि यसले नैतिकता, संयम, नियम, मर्यादालगायत सबै बिर्सिदिन्छ। जसले उसको स्वार्थ पूर्ण गरिदिन्छ, उसलाई त्यही असल लाग्छ। यसका लागि उसले जस्तोसुकै दुष्कर्म पनि गर्छ। त्यसपछि सङ्गतका कारणले तथा धार्मिक ग्रन्थहरू अध्ययन गरेर होसमा आएपछि उसले विभिन्न गुरुहरूको खोजी गर्छ, तीर्थयात्रा गर्छ, विभिन्न नदीहरूमा स्नान गर्छ, तर्पण, पिण्डदान गर्छ तथा ऊ अन्यको सल्लाह अनुसार कहिले प्राणायाम, कहिले हठयोगका क्रियाहरू, कहिले मन्त्रको जप, कहिले ध्यानलगायतमा लाग्दछ। यी सबैबाट मन नयाँ भ्रममा पर्छ। मनमा खराब वा असल जुनसुकै भ्रम उत्पन्न भए तापनि त्यो भ्रम नै हो। त्यो कुनै एक ठाउँमा स्थिर हुन सक्तैन। जबसम्म कुनै एक स्थानमा स्थिर हुन सक्तैन, त्यस समयसम्म शान्त हुन सक्तैन। यस्तो अवस्थामा त्यसलाई गुरुका शरणमा समर्पित गरिदिनुपर्छ। त्यसले गुरुको गोडा धोएको पानी पिउनै पर्छ तथा गुरुले भोजन गरिसकेपछि जे बच्छ, त्यही खानुपर्छ अर्थात् उसले आफ्नो लागि अलग व्यवस्था गर्नु हुँदैन। त्यसैलाई प्रसाद सम्झिएर स्वीकार गर्नुपर्छ तथा गुरुको मूर्तिको ध्यान गर्नुपर्छ र गुरुको नामको जप गर्नुपर्छ। यसबाट मनको चञ्चलता कम भएर त्यो स्थिर हुन्छ, जसको प्रभावले उसलाई सबै प्रकारका तीर्थलगायतको फल प्राप्त हुन्छ। यसैले मनलाई एक स्थानमा एकाग्र गराउनु नै सबैभन्दा ठूलो साधना हो।

**गुरुरेको जगत्सर्वं ब्रह्माविष्णुशिवात्मकम्।**
**गुरोः परतरं नास्ति तस्मात्संपूजयेद् गुरुम् ॥६८॥**

ब्रह्मा, विष्णु र शिवसहित समग्र जगत् गुरुमा समाहित भएको छ अथवा गुरुबाहेक केही पनि छैन। यसैले गुरुको पूजा गर्नुपर्छ। ॥६८॥

आत्मज्ञानी गुरु परमात्मास्वरूप हुन्छन्। उनमा ब्रह्मा, विष्णु, शिवलगायतका सबै देवताहरू बसेका हुन्छन्। यसैले उनमा सबैको शक्ति रहने भएकाले यो समग्र जगत् गुरुमै समाहित रहन्छ। जसरी आफ्ना माता–पितामा समग्र जगत् समाहित भएको मानेर गणेशले उनीहरूको परिक्रमा गर्दा सम्पूर्ण पृथ्वी परिक्रमा गरेको फल पाएका थिए, त्यसैगरी गुरुमा समग्र जगत् र देवताहरूको कल्पना गरेर उनको पूजा गर्दा सबै देवताहरूको पूजा गरेको फल प्राप्त हुन्छ। यसैले गुरुको मात्र पूजा गर्नुपर्छ।

**ज्ञानं विना मुक्तिपदं लभ्यते गुरुभक्तितः।**
**गुरोः समानतो नान्यत् साधनं गुरुमार्गिणाम् ॥६९॥**

गुरुमा अनन्य भक्तिभाव राख्नेलाई ज्ञान बिना पनि मोक्ष प्राप्त हुन्छ। गुरुले बताएको मार्गमा हिँड्नेका लागि गुरु समानको अन्य कुनै साधना छैन। ॥६९॥

शास्त्रहरूमा ज्ञानलाई मात्र मोक्ष प्राप्तिको साधन बताइएको छ र **ऋते ज्ञानान्न मुक्ति** अर्थात् ज्ञान बिना मुक्ति प्राप्त हुन सक्तैन भनिएको छ। गीतामा पनि **न हि ज्ञानेन सदृशं पवित्रमिह विद्यते** अर्थात् यो संसारमा पवित्र गराउने साधन ज्ञानबाहेक अन्य केही पनि छैन भनिएको छ।

गीताको ४।३८–३९ मा श्रद्धावान् मनुष्यलई मात्र ज्ञान प्राप्त हुने बताइएको छ भने गीताको ४।३७ मा ज्ञानरूपी अग्निले सबै कर्म भस्म बनाइदिने उल्लेख भएको छ। यही श्लोकमा पापी भन्दा पापी पनि ज्ञानरूपी डुङ्गामा सबार भएर सबै पापरूपी समुद्रबाट तर्ने बताइएको छ। यसरी ज्ञानलाई मात्र मोक्ष प्राप्तिको साधन बताइएको छ भने अन्य सबै साधनहरू योग, भक्ति, निष्काम कर्मलगायतबाट पनि ज्ञान प्राप्त हुने र त्यसबाट मुक्त हुने बताइएको छ। यो ज्ञान भनेको आफ्नो आत्मस्वरूप, परमात्मा र परब्रह्मको ज्ञान हो। यही ज्ञानद्वारा मनुष्यमा भएका सबै द्विविधा हट्छन् र हृदयको अज्ञानरूपी गाँठो फुक्छ तथा सबै कर्म नष्ट हुन्छन्। यसप्रकारको ज्ञानको महिमाका विषयमा जतासुकै बताएको पाइन्छ। तर यो ज्ञानमार्ग सबैभन्दा कठिन मार्ग हो। किनकि यो देख्नमा सजिलो भए तापनि जोसुकैले यसको साधना गर्न असम्भव छ। यसैले भगवान् श्रीशिव भन्नुहुन्छ– जसले गुरुलाई परमात्माको स्वरूप सम्झिएर उनमा अनन्य भक्तिभाव राख्छ, त्यसले ज्ञान बिना पनि मोक्ष प्राप्त गर्न सक्तछ, उसलाई अन्य कुनै साधनको आवश्यकता पर्दैन। उसले गुरुद्वारा देखाइएको मार्गमा मात्र हिँड्नुपर्छ।

**गुरोः कृपाप्रसादेन ब्रह्माविष्णुशिवादयः।**
**सामर्थ्यमभजन् सर्वे सृष्टिस्थित्यंतकर्मणि ॥७०॥**

ब्रह्मा, विष्णु र शिवले पनि गुरुको कृपारूपी प्रसादबाटै क्रमबद्ध रूपमा सृष्टि, स्थिति र प्रलय गराउने सामर्थ्य वा शक्ति प्राप्त गर्दछन्। ॥७०॥

यो समग्र सृष्टिको रचना परमात्माका दुइटा शक्तिहरूको परिणाम हो। जसमध्ये पहिलो उहाँको चैतन्य शक्ति, जुन ज्ञानस्वरूप छ तथा दोस्रो उहाँको क्रिया शक्ति जसलाई जड शक्ति वा प्रकृति अथवा मायाशक्ति भनिन्छ। परमात्माले यी दुइटा शक्तिको सहयोगबाटै सृष्टिको रचना गर्नु हुन्छ।

भगवान् श्रीकृष्णले गीता को ७।६ मा भन्नुभएको छ– तिमीले सबै प्राणीमात्र उत्पन्न हुनमा मेरा अपरा र परा यी दुवै प्रकृतिहरूको संयोग नै कारण रहेको छ भन्ने बुझ र म समग्र जगत्‌को प्रभव अर्थात् उत्पत्ति तथा प्रलयस्थान हुँ।

ज्ञान नै क्रियाको आधार हो। यसैले सबैभन्दा पहिले ज्ञानशक्ति उदय भयो, जसलाई **ब्रह्मा** भनिन्छ। यसकारण ब्रह्मा ज्ञानको पहिलो गुरु हुन् अर्थात् सबै ज्ञान उनैबाट आएको हो। यथार्थमा ज्ञानले मात्र यो सृष्टिको रचना गर्न सक्तैन। यसैले उनले तपस्या गरेर परमात्माको अर्को शक्ति अर्थात् क्रियाशक्ति वा मायाशक्तिलाई जागृत गराए। पुराणहरूमा यही ज्ञानशक्तिलाई **गायत्री** र क्रियाशक्तिलाई **सावित्री** भनिएको छ। ब्रह्माका यी दुइटा शक्तिबाट सृष्टिको रचना हुन्छ; यसैले ब्रह्मालाई सृष्टिका रचयिता भनिएको हो। यसैगरी विष्णुको शक्तिद्वारा यो सृष्टिको पालन हुन्छ भने महेशको शक्तिद्वारा प्रलय हुन्छ। यी ब्रह्मा, विष्णु र महेश पनि परमात्मका विभिन्न शक्तिका प्रतीक हुन्। यिनीहरूको गुरु परमात्मा हुनु हो, जसबाट ज्ञान प्राप्त गरेर यिनीहरूले सृष्टिको रचना, पालन र प्रलयको कार्य गर्छन्। यिनीहरूलाई यसप्रकारको शक्ति परमात्माको कृपाबाट प्राप्त भएको हो। यसैले परमात्मा यिनीहरूको गुरु हुनु हो, जसबाट यिनलाई शक्ति प्राप्त भएको छ। वेदान्तले जसलाई चेतन र जडशक्ति अथवा परमात्मा र उहाँको मायाशक्ति बताएको छ, त्यसलाई शैव मतावलम्बीले शिव र शक्ति भन्दछन्। शिव ज्ञानशक्ति हुनुहुन्छ भने शक्ति उहाँको क्रियाशक्ति हो, जसको सहयोगमा शिवतत्त्वले यो सृष्टिको रचना गर्छ। शक्ति बिना शिवको पनि कुनै अर्थ छैन र त्यसै शक्तिद्वारा मात्र क्रिया हुन्छ। यसकारण शैव मतावलम्बी शक्तिकै उपासक हुन्छन् तथा वेदान्तीले ती शिवरूपी परब्रह्मकै उपासना गर्ने भए तापनि यथार्थमा यी दुवैले निर्गुण परब्रह्मकै उपासना गर्छन्। शैव मतमा

शक्तिका विभिन्न रूपमा देवीहरूलाई चित्रण गरेको पाइन्छ; जसमा काली, दुर्गा, अम्बालगायत पर्छन् तथा यी सबै शक्तिका प्रतीक हुन्। ज्ञान र क्रिया अभिन्न छ अर्थात् जहाँ ज्ञान छ, त्यहाँ स्वाभाविक रूपमा क्रिया हुन्छ तथा जहाँ क्रिया छ, त्यहाँ ज्ञान त्यसैमा समाहित भएको हुन्छ। यसैले **शिव अभ्यन्तरे शक्ति, शक्तिअभ्यन्तरे शिवः** भनिएको छ। गीतामा पनि यी दुवैलाई अनादि बताइएको छ।

यसमा भगवान् श्रीशिव ज्ञानस्वरूप तथा पार्वती उहाँको मायारूपी शक्ति हुनुहुन्छ। उहाँहरू दुवै सृष्टिको आदिकारण हुनुहुन्छ। ज्ञान र क्रियाका बीचमा सधैँ संवाद चल्दै आइरहेको छ, जसमा ज्ञानको अस्तित्वलाई सर्वोपरि अस्तित्व मानिएको छ, जसको उपदेश जीवका लागि कल्याणकारी सिद्ध हुन्छ। त्यो सबै ज्ञानशक्ति गुरुमा समाहित भएको हुन्छ, जसका आधारमा उनलाई परमात्माकै स्वरूप सम्झिएर उनको पूजा, कीर्तनलगायत गर्नु पर्ने कुरा विशेष रूपमा बताइएको छ। उनलाई ब्रह्मा, विष्णु र महेशकै स्वरूप मान्नुपर्छ। यी सबैका गुरु परमात्मा मात्र हुनुहुन्छ।

**मन्त्रराजमिदं देवी गुरुरित्यक्षरद्वयम्।**
**स्मृतिवेदपुराणानां सारमेव न संशयः ॥७१॥**

हे देवी! यो दुइटा अक्षरसम्पन्न गुरु शब्दरूपी मन्त्र सबै मन्त्रहरूमध्ये उत्कृष्ट छ, यो स्मृति, वेद र पुराणहरूको सार हो, यसमा द्विविधा छैन। ॥७१॥

जसले ज्ञान र क्रियालाई अलग–अलग सम्झन्छन् वा मान्दछन्, ती अज्ञानीहरूले यो सृष्टिका विषयमा बुझ्न सक्तैनन्। यो मनुष्यको सबैभन्दा ठूलो व्यवधान हो। कुनै सद्गुरुले मात्र ज्ञानको उपदेश दिन सक्तछन्। यसैले त्यो गुरुरूपी मन्त्रको सधैँ जप गर्नुपर्छ, जुन सबै मन्त्रहरूमध्ये सर्वोत्कृष्ट छ।

**यस्य प्रसादादहमेव सर्वं**
**मय्येव सर्वं परिकल्पितं च।**
**इत्थं विजानामि सदात्मरूपं**
**तस्यांघ्रिपद्मं प्रणतोऽस्मि नित्यम् ॥७२॥**

जसका कृपाले म नै सबै हुँ र ममा नै सबै कल्पित छ भन्ने ज्ञान प्राप्त हुन्छ, ती आत्मस्वरूप गुरुका चरणकमलमा म सधैँ प्रणाम गर्दछु। ॥७२॥

गुरुको कृपाद्वारा मात्र शिष्यलाई आत्माको अनुभूति हुन्छ, जसका आधारमा उसले यो चैतन्यस्वरूप आत्मा मात्र यो सृष्टिको आदिकारण हो भन्ने रहस्यको अनुभव गर्छ। यसैगरी उसले यो देख्न सकिने समग्र जगत् त्यसैको विस्तारित रूप मात्र हो, जुन त्यसभन्दा अलग छैन भन्ने ज्ञान हासिल गर्छ। यो सम्पूर्ण जगत् त्यसैमा कल्पित छ, त्यसको कल्पनाको विस्तार हो, जुन वास्तविक होइन भन्ने अनुभूति हुन्छ। अज्ञानका कारणले यो आत्माभन्दा अलग भएको अनुभव हुन्छ। जब अज्ञान नष्ट हुन्छ, त्यसपछि त्यसको यथार्थताका विषयमा जान्न सकिन्छ। यसमा शिष्यले भनिरहेको छ– मैले गुरुको कृपाद्वारा आफ्नो यथार्थ स्वरूप आत्माका विषयमा जानें, जुन परब्रह्म परमात्माभन्दा अलग छैन। जुन ब्रह्म, परमात्मा, माया, आत्मा र जीवात्माको अलग–अलग अनुभूति गराउने अज्ञान थियो, त्यो नष्ट भयो। यसकारण म नै सबै हुँ तथा यो जगत् ममा नै कल्पित छ। यही यो सृष्टिको परम ज्ञान र अद्वैतको रहस्य हो, जसको उपदेश सबै शास्त्रहरूमा दिइएको छ, जसलाई मैले प्रत्यक्ष जानें। अब ममा कुनै किसिमको द्विविधा छैन। जुन गुरुका कृपाले मैले यस रहस्यका विषयमा ज्ञान हासिल गरें, म ती गुरुका चरणकमलमा सधैँ प्रणाम गर्छु।

**अज्ञानतिमिरान्धस्य विषयाक्रान्तचेतसः।**
**ज्ञानप्रभाप्रदानेन प्रसादं कुरु मे प्रभो ॥७३॥**

हे प्रभु! अज्ञानरूपी अन्धकारद्वारा अन्धो भएको तथा विषयहरूबाट पीडित चित्तसम्पन्न मलाई ज्ञानको प्रकाश दिएर ममाथि कृपा गर्नुहोस्। ॥७३॥

गुरुका कृपाले शिष्यलाई आत्माको अनुभूति भयो, जसको प्रभावस्वरूप अब ऊ आशीर्वचन प्राप्तिका लागि परमात्मासँग प्रार्थना गर्दै भन्छ– म यो अज्ञानरूपी अन्धकारमा अन्धो भएर अनेकौं जन्मसम्म घुमिरहेको थिएँ तथा यी सांसारिक विषयहरूलाई पनि सत्यस्वरूप सम्झिएर यिनको भोग गर्दै सन्तुष्ट भइरहेको थिएँ। मेरा सद्गुरुबाट मलाई आत्मज्योति प्राप्त भयो, जसले गर्दा ममा भएको अनेकौं जन्मको अज्ञानरूपी अन्धकार नष्ट भयो। अब कृपा गरेर तपाईंले मलाई ज्ञानरूपी प्रकाश दिनुहोस्। यसमा बुझ्नु पर्ने कुरा के छ भने अज्ञान नष्ट हुनु मात्र पर्याप्त नभएर ज्ञान प्राप्त हुनु महत्त्वपूर्ण हुन्छ। ज्ञान प्राप्त भएपछि मोक्ष पदको प्राप्ति हुन्छ। आत्माको थोरै मात्र झलक पाएपछि अज्ञान त नष्ट हुन्छ; तर ज्ञानावस्था यो भन्दा पनि अगाडिको अवस्था हो। जसरी सूर्य उदाउनु भन्दा केही समय पहिले नै अन्धकार हट्छ; तर त्यसलाई सूर्य उदाएको मानिँदैन। सूर्य

उदाएपछि मात्र प्रकाश सूर्यकै भएको ज्ञान हुन्छ। उहाँ परमज्योतिस्वरूप परमात्मासँग प्रत्यक्ष रूपमा साक्षात्कार हुनु नै पूर्ण ज्ञानावस्था हो। शिष्य त्यही ज्ञानको प्रकाश प्राप्तिका लागि प्रार्थना गर्दछ।

सतीशिरेमणि माताश्री स्व. चोलकुमारी तथा साहित्यशिरोमणि पिताश्री स्व. लोकमणि दाहालको मध्यम सुपुत्र खाँदबारी नगरपालिका–९ माथिल्लो पाङ्ठा सङ्खुवासभा जिल्ला निवासी नारायण शर्माद्वारा परब्रह्म परमात्माको असीम अनुकम्पा, अभिप्रेरणा र अमोघ आशीर्वादबाट सरल नेपाली भाषामा अनूदित लोकमणि टीकासहितको गुरुगीताको

तेस्रो अध्याय पूर्ण भयो ॥३॥






भगवान् श्रीशिव र पार्वतीको संवादका रूपमा रहेको यो गुरुगीता ज्ञान प्राप्त गर्ने अभिलाषा भएका मनुष्यहरूका लागि एउटा अमूल्य निधि हो। भगवान् श्रीशिव आफैँ ज्ञानस्वरूप हुनुहुन्छ। उहाँले मात्र सद्गुरुका विषयमा यथार्थ रूपमा बताउन सक्नुहुन्छ। उहाँको अभिव्यक्ति सर्वमान्य हुन्छ। गुरुको महिमाका विषयमा त सबै ज्ञानीहरूले बताएका छन्, तर यो गुरुगीताको महिमा अतुलनीय छ। यो गीतामा सबै किसिमका गुरुका सम्बन्धमा बताइएको छ, जसलाई सूचक गुरु, वाचक गुरु, बोधक गुरु, निषिद्ध गुरु, विहित गुरु, कारणाख्य गुरु तथा परम गुरु भनिन्छ। यिनीहरूमध्ये निषिद्ध गुरुलाई पूर्ण रूपमा परित्याग गर्नुपर्छ भने अन्य गुरुहरूमध्ये परम गुरु सर्वोत्कृष्ट छन्। उनै सद्गुरु हुन्। यसैले उनको शरणमा जानुपर्छ।

जसमा ज्ञान प्राप्त गर्ने, मोक्ष प्राप्त गर्ने तथा ब्रह्मको अनुभूति गर्ने अभिलाषा रहेको छ। जसका पहिलेका जन्महरूको सुसंस्कार उदय भएर फल दिन तत्पर भएको छ, जो परमात्मालाई प्राप्त गर्न योग्य पात्र छ। उसले कुनै सद्गुरुका शरणमा गएर ज्ञान प्राप्त गर्नुपर्छ। त्यसपछि ऊ सांसारिक आवागमनरूपी चक्रबाट सधैँका लागि मुक्त हुन सक्तछ। यसका लागि यो पुस्तकले बाटो देखाउने छ। यसैले **श्रीगुरुगीता**लाई अनिवार्य रूपमा स्वीकार गर्नुपर्छ।

www.ratnabook.com




Philosophy




**SHREEGURUGEETA**

*Conversation between Lord Shiva and Parvati*

*by* ***Narayan Sharma***